# हाम्रो भनाई

"हाम्रो कार्यक्षेत्र विस्तृत हुँदैछ । यसको अर्थ श्रमिक खवरको पाठकको सीमा फराकिलो हुँदैछ । पचासौं प्रयासमा हामी यो अवस्थामा छौं । आशावादी छौं, यो अंकमा आइपुग्दा नयाँ उचाइ प्राप्त गर्नेछौं ।..." स्वर्ण अंकको अग्रलेखमा हामीले श्रमिक खवरको बारेमा यसै भनेका थियौं । हिरक अंकमा प्रवेश गर्दा २०५३ सालको भाद्रमा बोलेका कुरा कति मिले वा मेल खाएनन्, हामी आफै केही भन्न चाहँदैनौं । यसपटक झण्डै दुई दर्जन महत्त्वपूर्ण व्यक्तित्वहरूले श्रमिक खवर र यसको प्रकाशक जिफन्टको बारेमा बोल्नुभएको छ । हाम्रा पाठकहरू र शुभेच्छुकहरूले जे देख्नुभयो, जे ठान्नुभयो हामी त्यसलाई मनको माझमा राख्नेछौं ।




संख्या ७५, असार २०६०



**प्रकाशक**
नेपाल ट्रेड यूनियन महासंघ
कार्यालय तथा प्रकाशन विभाग
पो.ब.नं. १०,६५२,
मनमोहन मजदुर भवन
पुतलीसडक, काठमाडौं ।
फोन : ४२४८०७२ (हन्टिङ्ग लाइन)
फ्याक्स : ४२४८०७३
ई-मेल : info@gefont.org
वेभ साइट : www.gefont.org
मूल्य : रू. २५ ।-

**आवरण तथा मुद्रण व्यवस्थापन**
एम्ज माउस
पुतलीसडक, ४२६५९४४
ई-मेल :
msmouse@wlink.com.np






१९

यो संयोग थिएन, प्रजातान्त्रिक वातावरणले उपलब्ध गराएको अवसर थियो । त्यसैले श्रमिक खवर प्रकाशनको आयु २०४६ सालको जनआन्दोलनले स्थापित गरेको बहुदलीय व्यवस्था जत्तिकै हुनपुग्यो । अहिलेको आर्थिक, सामाजिक र राजनीतिक माहोलमा श्रमको संसार अर्थात् हाम्रो श्रम बजारमा के परिवर्तन भयो ? यसबारे विविध क्षेत्रका व्यक्तित्वहरूको विचार श्रमिक खवरका पाठकहरूसामु प्रस्तुत गर्ने उद्देश्यले हामी सबैलाई उही प्रश्न सोधेका थियौं ।

धरतीले फेरि आफ्नो परिक्रमा मार्गको एक फेरा पूरा गरेको छ । हामी ११४ औं मे दिवसको वर्तमान क्षणसम्म आइपुगेका छौं । विश्वभरीकै श्रमजीवी वर्गको "एक होऊ" भन्ने आदेशलाई नेपाली वास्तविकतामा रूपान्तरित गर्ने क्रममा नेपाल ट्रेड यूनियन महासंघ र नेपाल ट्रेड यूनियन कांग्रेस संयुक्त रूपमा आजको यो ऐतिहासिक क्षणमा आइपुगेको छ । हामी ...




५२



## १० वर्ष अघिको श्रमिक खबरबाट



श्रमिक खबर

देशभरी १०४ औं मई दिवस भव्यताका साथ सम्पन्न

१०४ औं मे दिवस १ मे १९९३ का दिन उपत्यकाका विभिन्न कारखाना तथा इलाकाबाट दर्जनौं जुलुसहरू खुल्ला मञ्चमा एकतृत भए । त्यसै दिन बिहान १०:३० बजे खुल्ला मञ्चमा आयोजित सार्वजनिक फोटो प्रदर्शनीमा नेपाली मजदुरहरूको अवस्था, संघर्ष तथा समस्याहरू झल्काउने १०० भन्दा बढी फोटोहरूको प्रदर्शनी भयो । ... त्यसपछि ११ बजे खुल्लामंचबाट रंगीचंगी ध्वजा-पताका बोकेको आकर्षक र विशाल र्‍याली शुरू भयो । हजारौं मजदुरहरू संलग्न उक्त र्‍याली नगरका प्रमुख भागहरू- न्यूरोड, बसन्तपुर, नरदेवी, पकनाजोल, ठमेल, असन, रत्नपार्क हुँदै पुनः खुल्लामञ्चमा पुगी आमसभामा परिणत भयो ।

**श्रमिक खवर संख्या ३०, वैशाख, २०५०**

नेपाल ट्रेड यूनियन महासंघद्वारा प्रकाशित श्रमिक खवरको हीरक अङ्कसम्म आइपुग्दा धेरै कुरामा भिन्न र नयाँ कुरा पाएको अनुभव हुन्छ । पहिलो अवस्थामा पचास अङ्कसम्म श्रमिक खवर मजदुरहरूको गतिविधिलाई समेटेर समाचार प्रमुख वैचारिक पत्रिका बन्यो । त्यसपछिका अङ्क श्रम एजेण्डा, श्रम नीति, सामाजिक सुरक्षा, जेण्डर, अन्तराष्ट्रिय क्षेत्रमा ट्रेड यूनियनले लिएका नीति आदि विषयलाई सामेल गरेर प्रकाशित भएको छ । तर यो पत्रिकाले हाम्रो कुरा वोलेको छ, मजदुरको भावना, पिडा चिन्ता वोकेको छ भन्ने हामिले बुझ्न सकेनौं र बुझाउन पनि सकेनौं ।

जुन वेला श्रमिक खवर कामदारको हात-हातमा पर्छ, त्यसवेला श्रमिकहरूले यसमा पहिले खोज्ने गतिविधि हो । मजदुरको माग छ- आफ्नो ठाउँको श्रम विवाद, उत्पन्न समस्या समाधानमा देखिएका कठिनाइका विषयहरूका साथै युनियन दर्ता, नवीकरण, सम्मेलन आदिको एउटा स्तम्भ राख्नु पर्यो ।

अहिले श्रमिक खवरले दिनेमध्ये बुझ्न कठिनाई भएको र बुझ्नै पर्ने विषय भनेको दर्शन हो । यसलाई बुझ्नका लागि कामदार र व्यवस्थापनसँग गाँसेको उदारहण सहितको दर्शन राख्न सके धेरैले बुझ्न सक्नेछन् ।

यसमा सामेल गरिएको दुई महिनाको गतिविधि संकलन योग्य विषय हो, त्यस्तै अर्को कार्टुन चित्र भएको स्तम्भ । यो कामदारको रहर लाग्ने र बुझिने स्तम्भ हो, यसलाई निरन्तर गर्नु पर्छ ।

अन्तराष्ट्रिय क्षेत्रको गतिविधिमा विभिन्न देशका ट्रेड यूनियनको गतिविधिको जानकारी, उनीहरूको अवस्था, उनीहरूले लिएका नीतिका वारेमा प्रकाशित सामग्रीले मजदुरहरूलाई विशेष हौसला दिने गरेको छ । यसलाई निरन्तर गरिनु पर्छ ।

यसमा समसामयिक विषयको रूपमा इतिहास सम्वन्धी एउटा विषय सामेल गर्नु पर्छ । जसमा ट्रेडयूनियनसँग गाँसिएका मानिस, कारखाना, ट्रेड यूनियन आन्दोलन, धरपकड जस्ता विषय सामेल गरेर तयार पार्दा उपयोगी बन्नेछ ।

आगामी अंक देखी श्रमजीवी वर्गले श्रमिक खवरलाई आम मजदुर वर्गको पत्रिका बनाउनु पर्छ । सबै श्रमिकले यसलाई आफ्नो पत्रिका बुझेर यसका सबै सामग्री अध्ययन गर्नु पर्छ । एक जना श्रमिकको हात एउटा श्रमिक खवर हुनु पर्छ ।

**- ओम कोइराला, क्षेत्रीय संयोजक, पूर्वाञ्चल, जिफन्ट**



जिफन्टद्वारा प्रकाशित 'श्रमिक खवर' को 'हिरक अंक' प्रकाशित हुन लागेको अवसरमा म जिफन्टप्रति हार्दिक आभार प्रकट गर्दछु । यसले मजदुर आन्दोलनमा पुर्‍याएको उल्लेखनीय सहयोगको सह्राहना एवं पत्रिकाको दीर्घजीवीको कामना गर्दछु ।

म नेपाल ट्रेड यूनियन महासंघलाई राष्ट्रको मजदुरहरूको वास्तविक प्रतिनिधित्व गर्ने एक वैधानिक संस्थाको रूपमा लिने गर्दछु । यसले मजदुरको हक, हितको निम्ति उठाएका सवालहरू वास्तवमै मजदुरहरूको जनजीवनसँग प्रत्यक्ष सरोकार भएको अनुभव गर्छु । महासंघ राष्ट्रका सम्पूर्ण मजदुरहरूको आशा र भरोसाको केन्द्रविन्दु बनेको छ ।




महासंघले मजदुरहरूको आधारभूत तहसम्म पुगी मजदुरहरूको पीर-मर्का, अवस्था, ज्याला आदि बारेमा अवलोकन गरी पत्ता लागेका कुरा सार्वजनिक गरी मजदुरमाथि परेको थिचोमिचो र अन्याय विरुद्ध ध्यान आकृष्ट गरी न्यायिक र तथ्यसँगत आन्दोलन गर्ने गरेको देखिन्छ । महासंघले बँधुवा अवस्थामा रहेका कमैयालाई मुक्त गराउने कार्यमा अग्रणी भूमिका निभाएको देखिन्छ, महिला सहभागिता, लैङ्गिक समानता, बालश्रम निर्मूलन अभियान र असंगठित अवस्थामा रहेका कृषि मजदुरहरूलाई संगठित गरी सचेतना कार्यक्रम संचालन गरेकोमा महासंघप्रति म आभार प्रकट गर्दछु ।

'श्रमिक खवर मजदुरहरूको निमित्त मात्र उपयोगी नभई आम नागरिकको निमित्त समेत अत्यन्त उपयोगी छ । यसमा मजदुरहरूलाई हौसला र प्रेरणा दिने विषयवस्तुहरू श्रम कानुन, श्रम सम्बन्धी विवाद, ट्रेड यूनियन शिक्षा, राष्ट्रिय तथा अन्तरराष्ट्रिय घटनाहरूको विवरण प्रकाशित हुनु ज्यादै राम्रो पक्ष हो । श्रमिक खवरमा मनोरञ्जनमूलक परिकारहरू थपेर समयसापेक्ष परिमार्जन गर्दै लगेमा अझ प्रभावकारी बन्ने हो कि ?

**- लोक बहादुर खत्री, कृमसंघ, नेपाल, बाँके सचिव ।**



मजदुरद्वारा मजदुरका लागि प्रकाशित श्रमिक खवर ६१ अङ्कदेखि ७३ अङ्कसम्म हात पर्‍यो । यसको लागि जिफन्टलाई धन्यवाद ! यसमा कोरिएका सबै कुरा ज्ञानवर्धक छन् । यसले हामी जस्ता शोषित-पीडित मजदुरहरूलाई आफ्नो हक, अधिकारको लागि संघर्ष गर्न प्रेरित गरेको छ । यसमा प्रकाशित 'श्रमिक' स्तम्भमा यसोधा धिताको जीवनीले हामी महिलाहरूरूलाई जीवनको अर्को नाम संघर्ष हो भनेर सिकाएको छ ।

**गोमा खतिवडा, नेस्वखापेमयू,**
**एनटेपे फुड प्रा. लि., मकवाना, हेटौंडा**

# बितेका महिनामा नेपाल

## (२०५९ पुस १६ – २०६० वैशाख ३१)

**पुस १८** : पूर्व न्यायाधीश कृष्णजंग रायमाझीद्वारा न्यायपालिकाबाटै संविधान उल्लंघन हुने गरेको दावी ।

: श्री ५ को पूर्वाञ्चल क्षेत्रमा अभिनन्दन ।

**पुस २०** : श्री ५ बाट सम्बोधन "मतभेद वार्ताबाट समाधान हुनु पर्ने" कुरामा जोड ।

**पुस २२** : तीन हजार थान अमेरिकी राइफल नेपाल आइपुग्यो ।

**पुस २३** : आर्थिक अध्यायदेश जारी - कर र निकासीमा सामान्य परिमार्जन, विकास खर्च र राजस्व दर यथावत । साढे दुई अरव थप आन्तरिक ऋण उठाउन प्रस्ताव ।

: एमालेको मुख्य आन्तरविरोध दरवारसँग हुने ठहर गर्दै एमालेको राजनीतिक संगठनात्मक प्रस्ताव केन्द्रीय समितिद्वारा पारित ।

**पुस २५** : वेल्जियमसँग किनेको हतियारको पहिलो खेप काठमाडौं आइपुग्यो ।

: माओवादीद्वारा दिपायलमा ठूलो संख्यामा विद्यार्थीहरू अपहरण ।

: प्रधानमन्त्री लोकेन्द्र बहादुर चन्दद्वारा महिला आयोग विधेयकलाई अन्तिम रूप दिन सम्बन्धित मन्त्रीलाई निर्देशन ।

**पुस २६** : नेपाल राष्ट्र बैंकद्वारा राष्ट्रिय बाणिज्य बैंकको व्यवस्थापन करार एकतर्फी रद्द गर्ने बहुराष्ट्रिय कम्पनी डिलोइट टुर्स तमात्सुसँग झण्डै ५० करोड रूपैयाँ क्षतिपूर्ति माग ।

**पुस २७** : काठमाडौं जोरपाटी दक्षिण ढोकाको एउटा घरमा उन बाँट्ने काममा लगाउन अँध्यारो कोठामा बन्दी बनाइएका १४ बालकको प्रहरी र दुई गैरसरकारी संस्थाद्वारा उद्धार ।

: तराईका कतिपय जिल्लामा शीतलहरले यस वर्ष जाडो चलेयता १८ व्यक्तिको मृत्यु ।

**पुस ३०** : सल्यान जिल्लाको मलचौर गाविस स्थित जनज्योति माविको कक्षा १० मा अध्ययनरत ८० जना विद्यार्थीलाई माओवादीद्वारा अपहरण ।

**माघ २** : सर्वोच्च अदालतद्वारा बन्दीलाई जेल सार्ने नाममा वेपत्ता नबनाउन सरकारलाई कडा आदेश जारी ।

: राष्ट्रिय मानव अधिकार आयोगद्वारा बन्दी रिहा गर्ने अदालतको आदेश उल्लंघन गरी सरकारले कानुनी शासनको अवधारणाको उपहास गरेको आरोप ।

**माघ ८** : राप्रपाद्वारा पार्टी वा सरकार छाड्न प्रधानमन्त्रीलाई दुई साताको अल्टिमेटम ।

**माघ ९** : शिक्षा क्षेत्रमा अतुलनीय योगदान पुऱ्याएका अर्थशास्त्रका प्राध्यापक डा. तारापद चौधरीको माघ ८ गते निधन ।

: नागरिक लगानी कोषको नयाँ योजना अनुसार संगठित क्षेत्र समेट्ने उपदान कोषको व्यवस्था गर्न लागेको जानकारी ।

**माघ १३** : सशस्त्र प्रहरी महानिरिक्षक कृष्णमोहन श्रेष्ठ दम्पत्तिको माघ १२ गते मर्निङवाकबाट फर्कने क्रममा ललितपुर बागडोल चक्रपथमा अङ्गरक्षक सहित गोली हानी हत्या ।

: मानव अधिकारका क्षेत्रमा क्रियाशील मुलुकका १५ भन्दा बढी संघ-संस्थाका प्रतिनिधिहरूद्वारा वर्तमान सरकार असंवैधानिक भएको दावी ।

**माघ १५** : युरोपेली मुलुक नर्वेद्वारा सरकार र माओवादी बीच वार्ताको मध्यस्थ गर्न इच्छा व्यक्त ।

: श्रेष्ठको रिपोर्टद्वारा अनियमितता र चुहावटले आयल निगम टाट उल्टिएको ठहर ।

**माघ १६** : सरकार र माओवादी बीच युद्ध विरामको सन्धि । सरकारद्वारा माओवादी विरुद्धको आतंककारी आरोप, टाउकाको मूल्य, रेडकर्नर नोटिस फिर्ता । माओवादीसँग वार्ता गर्न मन्त्री नारायण सिंह पुन नियुक्त ।

**माघ १८** : नेपाल कम्युनिस्ट पार्टी (एमाले) को सातौं महाधिवेशन शुरू ।

**माघ २०** : युद्ध विराम अघिका घटनाबारे प्रधानमन्त्रीलाई जानकारी नभएको कुरा प्रधानमन्त्री लोकेन्द्रबहादुर चन्दद्वारा पार्टी नेता-कार्यकर्तालाई जानकारी ।

: नेकपा माओवादीद्वारा बाबुराम भट्टराईको संयोजकत्वमा ५ सदस्यीय वार्ता टोली सार्वजनिक ।

**माघ २१** : नेकपा एमालेको राष्ट्रिय अधिवेशनमा महासचिवको प्रतिवेदन सर्वसम्मतद्वारा पारित । एमालेद्वारा शान्ति-सुव्यवस्थाका लागि सबै विकल्प खुल्ला राख्ने निर्णय ।




साभार: कान्तिपुर

**माघ २२** : नेपाल सद्भावना पार्टीद्वारा कार्यवाहक राष्ट्रिय अध्यक्ष एवं उपप्रधानमन्त्री बद्रिप्रसाद मण्डललाई तीन दिन भित्र सरकारबाट राजीनामा दिन निर्देशन ।

**माघ २३** : सबै पक्षसँग मिलेर जान माओवादी तयार रहेको कुरा माओवादी अध्यक्ष प्रचण्डद्वारा व्यक्त ।

**माघ २४** : एमाले महासचिवमा माधव नेपाल पुनः निर्वाचित, केन्द्रीय कमिटीमा अधिकांश पुरानै अनुहार, वैकल्पिकमा सबै नयाँ ।

: शान्ति वार्ता राजा, राजनीतिक दल र माओवादी बीच त्रिकोणात्मक हुने कुरा माओवादी अध्यक्ष प्रचण्डद्वारा व्यक्त ।

**माघ २९** : परिचालित सेना व्यारेकमा फिर्ता गर्न राष्ट्रिय मानव अधिकार आयोगद्वारा सरकार समक्ष प्रस्ताव ।

**फागुन १** : सात वर्ष अघि फागुन १ मा शुरू भएको माओवादी जनयुद्धमा हालसम्म ५ हजार ५ सय कार्यकर्ता मारिएको प्रचण्डद्वारा सार्वजनिक ।

**फागुन २** : द्विपक्षीय यातायात सम्झौता वार्ता सुरक्षा सवालमा विवाद उब्जिएपछि नेपाल-भारत बीच चालु वार्ता विना निर्णय टुङ्गिएको ।

**फागुन ५** : माओवादीद्वारा चन्दा संकलन स्थगन, वार्ता भाँडिने क्रियाकलापहरू रोक्ने निर्देशन ।

**फागुन ६** : प्रधानमन्त्रीद्वारा आयोजित सर्वदलीय बैठक राप्रपा लगायत सबै मुख्य दलद्वारा बहिष्कार ।

**फागुन ८** : राजपरिषद स्थायी समितिको सभापतिमा परशुनारायण चौधरीलाई नियुक्त ।

: माओवादीद्वारा दमननाथ ढुंगाना र पद्मरत्न तुलाधरलाई सहजकर्ता बन्न आग्रह ।

**फागुन १३** : युद्धविराम आचारसंहिता सार्वजनिक नभएकोमा मानव अधिकार आयोगद्वारा आपत्ति ।

**फागुन १५** : नौ बामद्वारा संयुक्त रूपमा वर्तमान सरकार तत्काल विघटनको माग ।

: इतिहासविद् योगी नरहरिनाथको निधन ।

**फागुन १९** : प्रक्रिया छलेर निजामती ऐन संशोधन गर्ने मन्त्री परिषद्को प्रयास, मुख्य सचिवको आपत्ति ।

**फागुन २०** : माओवादी वार्ता टोलीका सदस्यहरूद्वारा मुख्य पार्टीका नेताहरूसँग भेट ।

**फागुन २१** : पार्टीको नीति विपरित बोलेको आरोपमा एमालेद्वारा वामदेव गौतमसँग स्पष्टीकरण माग ।

**फागुन २५** : कानुन व्यवसायीहरूको राष्ट्रिय सम्मेलनद्वारा वर्तमान मन्त्रीपरिषद् असंवैधानिक भएको दावी, तत्काल सर्वपक्षीय र जनविश्वास प्राप्त सरकार गठन गर्नु पर्ने प्रस्ताव पारित ।

**फागुन २६** : राजनीतिक गतिरोधका सम्बन्धमा छलफल गर्न श्री ५ बाट प्रमुख राजनीतिक

पार्टीका नेताहरूलाई अलग-अलग दर्शनभेटका निम्ति आव्हान ।

**फागुन २७** : अख्तियारद्वारा केही वरिष्ठ प्रहरी अधिकृतको घरमा छापा ।

**फागुन २८** : संयुक्त सरकार वा संसद पुनर्स्थापनाको निमित्त कांग्रेस र एमाले सहित चार दल संयुक्त आन्दोलन गर्न सहमति ।

**चैत्र १** : वेलायत सरकारद्वारा गोरखा सैनिक विरुद्धको मुद्दा फिर्ता, नेपाली युद्धबन्दीले क्षतिपूर्ति पाउने ।

**चैत्र ५** : इराकमाथि आक्रमणको सम्भावना बढेपछि सरकारद्वारा खाडी मुलुकमा कामदार पठाउन रोक लगाउने निर्णय ।

: श्री ५ को सरकारद्वारा भक्तपुर इटा टायल कारखाना र कृषि औजार कारखाना खारेज गर्ने निर्णय ।

**चैत्र ६** : खाडी क्षेत्रमा नेपाली कामदारहरूको सुरक्षित वसोवासको व्यवस्था गरेको श्री ५ को सरकारको दावी ।

**चैत्र ७** : इराकमाथि अमेरिकी आक्रमण पछि खाडी क्षेत्रका नेपाली कामदार फर्कने क्रम जारी ।

**चैत्र १२** : श्री ५ को सरकारद्वारा पेट्रोलियम पदार्थको चर्को मूल्यवृद्धि ।

**चैत्र १३** : यातायात व्यवसायीद्वारा भाडा वृद्धि निर्णय ।

: नेपाल सद्भावना पार्टीमा विभाजन, दुई समूहद्वारा बेग्लाबेग्लै महाधिवेशन ।

**चैत्र १६** : माओवादीद्वारा डा. बाबुराम भट्टराईको संयोजकत्वमा रामबहादुर थापा, कृष्ण बहादुर महरा, मातृका यादव, देव गुरुङ रहेको वार्ता टोली गठन ।

**चैत्र १७** : माओवादी वार्ता टोलीद्वारा दलहरूसँग अन्तरक्रिया शुरू ।

**चैत्र १८** : एमाले-माओवादी नेताहरू बीचमा भेटघाट र दुवै पार्टी बीचको कटुता कम गर्न उच्च स्तरीय छानवीन समिति गठन ।

**चैत्र १९** : सार्वजनिक सवारी साधनको भाडादरमा २० प्रतिशतले वृद्धि ।

**चैत्र २०** : अमेरिकाद्वारा नेपालमा मानव अधिकार स्थिति बारे प्रतिवेदन सार्वजनिक, प्रतिवेदनमा दरवारको हत्याकाण्ड, श्री ५ ज्ञानेन्द्रको राज्यारोहण, माओवादी गतिविधि, महिला, बालबालिका र जनजाति, दलित, अदालत, श्रम, प्रेस लगायतका विषय संलग्न ।

**चैत्र २३** : माओवादी जनयुद्धमा आदिवासी/जनजाति समुदायका सदस्य बढी मारिएको माओवादी नेताहरूद्वारा स्वीकार ।

**चैत्र २५** : माओवादी वार्ता टोलीका संयोजक बाबुराम भट्टराईद्वारा शान्ति वार्ता प्रक्रिया अघि बढ्न नसक्नुको कारण राजा भएको आरोप ।

: विवादास्पद महलीसागर बाँध निर्माण कार्य रोक्न राजनीतिक स्तरमा पटक-पटक भएको आग्रहको बेवास्ता गर्दै भारतद्वारा निर्माण कार्यमा तीव्रता ।

**चैत्र २६** : पेट्रोलियम पदार्थको मूल्यवृद्धिको विरोधमा सात विद्यार्थी संगठनले बुटवलमा गरेको चक्काजाममा प्रहरीद्वारा एक विद्यार्थीको हत्या ।

: माओवादीका नेताद्वारा सबै राजनीतिक पार्टीको सहमति भए संविधान सभा त्याग्न आफू तयार हुन सक्ने विचार व्यक्त ।

**चैत्र २७** : प्रहरीद्वारा बुटवलमा विद्यार्थी नेता देवीलाल पौडेल मारिएको विरोधमा राजधानी लगायत मुलुकका विभिन्न शहरमा विशाल प्रदर्शन ।

**चैत्र २८** : विद्यार्थी नेता मारिएको विरोधमा आठ विद्यार्थी संगठनद्वारा तीन दिने संघर्ष कार्यक्रमको घोषणा ।

**चैत्र २९** : श्री ५ द्वारा ३ जना मन्त्रीहरू गृहमन्त्री धर्मबहादुर थापा, शिक्षा मन्त्री देवीप्रसाद ओझा र उद्योग, बाणिज्य तथा आपूर्ति मन्त्री महेशलाल प्रधान बर्खास्त ।

**चैत्र ३०** : सर्वदलीय बैठकमा नआउने दललाई वार्तामा सामेल नगराउने कुरा प्रधानमन्त्रीद्वारा व्यक्त ।

**वैशाख १** : सरकार-माओवादी औपचारिक वार्ता शुरू, आचारसंहिता कार्यान्वयन बारे छलफल ।

: प्रधानमन्त्रीद्वारा आयोजित चौथो सर्वदलीय बैठकमा पनि प्रमुख दलहरू अनुपस्थित ।

**वैशाख ४** : माओवादीसँग वार्ता गर्न गठित वार्ता टोली श्री ५ को सरकारद्वारा उप-प्रधानमन्त्रीको संयोजकत्वमा पुनर्गठित ।

: मुम्बइबाट उद्धार गरिएकी युवती कल्पना गुरुङलाई बाल-नोबल पुरस्कारको निर्णायक बन्ने अवसर प्राप्त ।

**वैशाख ५** : विद्यार्थी संगठनहरू बीच तनाव चर्केपछि त्रिभुवन विश्वविद्यालयद्वारा स्वतन्त्र विद्यार्थी यूनियनको चुनाव स्थगन ।




साभार: कान्तिपुर

: सन् २००३ मा मुलुकको आर्थिक वृद्धि दर २ दशमलव ५ प्रतिशत रहने प्रक्षेपण राष्ट्रसंघीय एशिया-प्रशान्त आर्थिक तथा सामाजिक आयोगले गरेको ।

**वैशाख ७** : नेपालविद् टोनी हागनको ८६ वर्षको उमेरमा स्वीट्जरल्याण्डमा निधन ।

**वैशाख ८** : सात विद्यार्थी संगठनद्वारा आव्हान गरिएको बन्द पूर्ण सफल ।

**वैशाख ९** : आक्रोशित विद्यार्थीहरूद्वारा त्रिभुवन विश्वविद्यालय छापाखानामा आगलागी ।

**वैशाख १२** : शाही कदम विरुद्ध संघर्षको तयारीमा जुटेका विघटित प्रतिनिधि सभाका ५ दलहरू नेपाली कांग्रेस, नेकपा एमाले, मजदुर किसान पार्टी, जनमोर्चा नेपाल, र सद्भावना पार्टीद्वारा केन्द्रीय जनआन्दोलन संयोजन समिति गठन ।

**वैशाख १५** : सरकार-माओवादी बीच पहिलो वार्ता, माओवादीद्वारा एजेण्डा प्रस्तुत ।

**वैशाख १६** : सार्स रोगका कारण शाही नेपाल वायुसेवा निगमद्वारा सिंगापुरको उडान तीन साताको लागि स्थगन ।

: विद्यार्थी संगठनहरूको आव्हानमा नेपाल बन्द ।

**वैशाख १७** : नेकपा (एमाले) द्वारा संविधान सभामा नजाने, संविधान संशोधनको पक्षमा ३५ बुँदे राष्ट्रिय सहमतिको प्रस्ताव पारित

**वैशाख १८** : ११४ औं मे डेको उपलक्ष्यमा ट्रेड यूनियनहरूको आयोजनामा देशभरी मजदुर ऱ्याली र सभा । काठमाडौंमा जिफन्ट र एनटीयूसीको संयुक्त आयोजनामा मे डे कार्यक्रम विशाल मजदुर ऱ्याली र मजदुर सभा ।

**वैशाख २१** : सर्वदलीय सरकारको माग राख्दै पाँच राजनीतिक पार्टीद्वारा आमसभा र वैशाख २५ गतेदेखि प्रतिगामी कदम विरुद्ध आन्दोलनको घोषणा ।

**वैशाख २५** : राजाद्वारा दलहरूको आन्दोलनबारे पत्रकारसँग भेटघाट ।

**वैशाख २७** : सरकार र माओवादी बीच दोस्रो चरणको वार्ता । सेनालाई व्यारेकको ५ किलोमिटर परिसरमा सीमित राख्ने सहमति ।

: दलहरूको संयुक्त आन्दोलनमा पुतला जलाउँदा पुलिस दमन ।

**वैशाख २८** : पाँच पार्टीको घोषित मसाल जुलसमा देशव्यापी रूपमा प्रहरी दमन, केन्द्रीय नेताहरू सहित सयौं घाइते ।

: पञ्चायती कालका कथित सल्लाहकार शरदचन्द्र शाह प्रधानमन्त्रीको सल्लाहकारमा ७ महिना अघि नियुक्त भएको सार्वजनिक ।

**वैशाख ३०** : पाँच संसदीय दलद्वारा दोस्रो चरणको आन्दोलनको घोषणा ।

**वैशाख ३१** : पाँच दलको घोषित आन्दोलन अनुसार ३० र ३१ गते सरकारी तथा संस्थानका गाडी ठप्प ।

**प्रस्तुति : विदुर कार्की**

# श्रमिक खवरको हिरक अङ्क



हामीहरू श्रमिक खवरको पचहत्तरौं अङ्क-हिरक अङ्क प्रकाशित गर्दैछौं । २०४७ सालमा यसको प्रकाशन गर्दा हामी धेरै हिसाबले कलिला थियौं । हामीसँग श्रम सम्बन्धमा वैचारिक तहबाट कलम चलाउनेहरूको कमी थियो । व्यवस्थित प्रकाशनको लागि आर्थिक समस्या थियो र श्रमिक खवरलाई मजदुर क्षेत्रमा नियमित पठन-पाठन गराउने समस्या थियो । वितरण व्यवस्थापन र आर्थिक संकलनका अनेक समस्या झेलियो ।

श्रमिक खवर पनि ६० अङ्क पछाडि अरु नयाँ साजसज्जा र सामग्री बोकेर अगाडि आयो । बीसौं शताब्दीका चुनौतीहरूको सामना गर्ने क्रममा नेपालको मजदुर आन्दोलनलाई यसले कति वैचारिक योगदान गऱ्यो, यसको छुट्टै मूल्याङ्कन गरौंला तर एक्काइसौं शताब्दीले नेपाली श्रमिकहरूका अगाडि अघि सार्ने चुनौती, अवसर र अप्ठ्याराहरूबारेमा भने श्रमिक खवरको ध्यान पुग्नै पर्छ भन्ने हाम्रो सोच रहयो ।

श्रमिक खवर मूलतः मजदुरहरूको 'विचार प्रधान' पत्रिका हो । यति भएर पनि यसले श्रमिक-श्रमजीवी वर्गका सरोकारका विषयहरू जस्तै सामाजिक, आर्थिक र धेरै प्राकृतिक विषयहरूलाई पनि यथोचित स्थान दिएको छ । हामीलाई लागेको छ- श्रमिक खवर शुरूमा एउटा प्रचारक थियो । दोस्रो चरणमा यो कार्यकर्ताको रूपमा अगाडि आयो । यो विस्तारै सँगठकको रूपमा अगाडि बढ्दै छ र यसले आगामी दिनमा आफूलाई एउटा कुशल सँगठकको रूपमा अगाडि सार्नेछ, र यसले सिंगो मजदुर आन्दोलनको नेता बन्ने प्रयत्न गर्नेछ । आज हिरक अङ्क प्रकाशित गरिरहेको अवस्थामा हाम्रो आशा यसै दिशातर्फ निर्दिष्ट छ । यसको निम्ति हामीले आउने विश्वका चुनौतीहरूको विश्लेषण गर्नै पर्छ र त्यसको सामना गर्न अगाडि बढ्नै पर्छ ।

आजको विश्व हिजोको विश्वभन्दा सर्वथा भिन्न छ । उत्पादनका औजारमा आएको परिवर्तनले उत्पादनको ढाँचामा नै परिवर्तन आएको छ । कामका तरिकाहरूमा भएका परिवर्तनले मानिसका सामाजिक सम्बन्धहरू बदलिएका छन् । प्राविधिक विकासको तीव्र विकासले श्रमको स्वरूप परिवर्तन भएको छ । वर्गका स्वरूपहरू बदलिएका छन् । शारीरिक श्रम गर्ने र मानसिक श्रम गर्ने बीचको दूरी घटेर गएको छ र दुवै एक अर्काको अत्यन्त निकट बन्दै गएका छन् । यातायात र संचारको क्षेत्रमा भएको द्रुत विकासले विश्वको एकीकरणलाई तीव्र बनाएको छ । एक महादेशका श्रमिकलाई अर्को महादेशको श्रमिकको नजिक पुऱ्याएको छ । एकले अर्काका समस्या बुझ्ने, चिन्ने र एक अर्काको सहयोगमा आवाज उठाउने परिस्थितिको सरलीकृत ढंगले विकास भएको छ । यो विश्वका श्रमिकहरूका पक्षमा भएको अत्यन्तै सकारात्मक पाटो हो र विज्ञान तथा प्रविधिको विकासले मानव जातिको लागि दिएको योगदान हो ।

हरेक कुराको दोहोरो चरित्र हुन्छ भनेझैं यसका दोहोरो चरित्रलाई पनि हामीले देख्न सक्नु पर्छ र विश्लेषण गर्नु पर्छ । हामी विश्वकै मजदुरहरू इतिहासको कुनै काल खण्डमा भन्दा आज नजिक भएका छौं । सूचना आदान-प्रदान, अनुभवको साटासाट र एकले अर्कोलाई सहयोग गर्ने मामिलामा तीव्र प्रगति भएको छ । यसरी हेर्दा लाग्छ, हामी सशक्त र बलिया भएका छौं । तर विकासको अर्को पाटो पनि छ, त्यो हो पूँजीवादी पाटो । विश्व पूँजीवाद पनि हिजो कहिल्यै भन्दा सशक्त र बलियो भएको छ । विश्व व्यापार संगठन र त्यसले चलाएको विश्वव्यापीकरणको अभियानले हाम्रो भविष्य सामु गम्भीर अप्ठ्यारा र चुनौतीहरू खडा गरिदिएको छ । प्रविधिको तीव्र विकास र पूँजीवादले गरेको त्यसको एकलौटी प्रयोगले विश्वमा ठूलो शक्ति कामबाट बाहिरिने खतरा बढेको छ । दशौं करोड श्रमिकहरू कामबाट बाहिरिने र तिनीहरूको ठाउँ मेशिनले लिने अनि मुनाफाको ठूलो हिस्सा एकलौटी कब्जा गरेर विश्व बजारलाई आफ्नो एकाधिकारमा प्रयोग गर्ने दाउमा विश्व पूँजीवादका महाशक्ति राष्ट्रहरू अझै पनि तल्लीन देखिन्छन् । यसले गर्दा हामी विश्वका श्रमिक श्रमजीवी वर्गका सामु एउटा साझा अवधारणा बनाउनु पर्ने स्थिति उत्पन्न भएको छ ।

'विश्वका मजदुर एक हौं' यो नारा हामीले सयौं वर्षदेखि लगाउँदै आएका छौं । नारा लगाउनु एउटा कुरा हो तर त्यसलाई व्यवहारिक रूपमा थाल्नु अर्कै कुरा हो । विश्वका मजदुर एकजुट हुने केका निम्ति ? के प्रयोजनका लागि ? आज यो कुरा स्पष्ट हुनु जरुरी

छ ? सय वर्ष अगाडि जतिवेला हाम्रा पुर्खाहरू यो नारा लगाउँदै थिए, त्यो वेलाको विश्व परिवेश भिन्न थियो । पूँजीपति वर्गको शोषणको तरिका भिन्न थियो । दमनका तरिकाहरू भिन्न थिए, कानुनी मान्यता र सैद्धान्तिक अवधारणाहरू नै गैर-मजदुरपक्षीय थिए र मजदुर आफैमा चेतनाको हिसाबले अत्यन्तै दरिद्र अवस्थामा थियो । संघर्षका रूपहरू पनि त्यसै अनुकूल थिए । त्यो वेलाको अन्तरविरोधको स्तर यस्तो थियो कि वार्ता र सम्वादका कुनै सम्भावना थिएनन् । त्यसैले संघर्षले हिंसात्मक रूप लिन्थ्यो । या त मजदुरले जित्नु पर्थ्यो या पूँजीपतिले । वर्ग संघर्षले सशस्त्र संघर्षको रूप लिनु अनिवार्य थियो र विगतको विश्व मजदुर आन्दोलनको इतिहासले पनि यीनै कुरा देखाउँछ । तर आजको विश्वमा आमूल परिवर्तन भएको छ ।

मजदुर वर्ग शिक्षाको हिसाबले, चेतनाको हिसाबले र संगठनको हिसाबले अत्यन्तै सक्रिय र क्रियाशील छ । उसको सम्वादको क्षमतामा पनि तीव्र वृद्धि भएको छ । मजदुरको आर्थिक जीवनमा पनि ठूलो परिवर्तन भएको छ । अर्कोतिर पूँजीवादले पनि आफ्नो शक्तिलाई त्यसै गरी सुदृढ गरेको छ । विज्ञान तथा प्रविधिमा भएको तीव्र विकासलाई यसले सैनिकीकरणमा प्रयोग गरेको छ र सैनिक शक्तिलाई अत्यन्तै आधुनिकीकरण गरेको छ । शैक्षिक सामग्रीको अत्याधुनिकीकरण र सूचना संचालनको तीव्र विकासले गर्दा अब वर्ग संघर्षको रूपमै परिवर्तन भएको छ । विगतमा सशस्त्र संघर्ष, वर्ग संघर्षको उच्चतम रूप थियो भने वर्तमान विश्वमा यो रूप अब नाकाम सावित हुनेछ । अब हतियारको युद्ध र हिंसा मजदुरको मुक्तिको बाटो बन्न सक्दैन । शान्तिपूर्ण जनआन्दोलन, वार्ता र सम्वाद मात्र आउने समयको लागि मजदुरको अधिकार रक्षाको साधन बन्न सक्छ । के हो मजदुरको अधिकार ? हामीले के स्पष्ट हुनु जरुरी छ भने शान्ति, प्रजातन्त्र र समाजवाद - विश्वका मजदुरहरूको यो भन्दा अर्को ध्येय छैन । शान्ति हाम्रो चाहना हो प्रजातन्त्र हाम्रो अधिकार हो र समाजवाद हाम्रो साझा लक्ष्य हो । यीनै कुराको निम्ति विश्वका मजदुर एकजुट हुनु पर्छ र पूँजीवादले हामीमाथि थोपर्न खोजिरहेको चर्को शोषण, दमन र हिंसाको विरोधमा प्रतिरोध गर्नुपर्छ । संसारका मजदुरहरू आफ्ना साझा लक्ष्यमा एकताबद्ध भएर अघि बढे हामी शान्तिपूर्ण ढंगबाटै विश्वपूँजीवाद माथि ठूलो दवाव सृजना गर्न सक्नेछौं, समृद्ध जीवनको लागि समाजवादको बाटोतिर अगाडि बढ्नेछौं ।




श्रमिक खवरको यो हिरक अङ्क प्रकाशनले हामी नेपाली मजदुरका साथै विश्वकै मजदुरलाई थोरै भए पनि अगाडि बढ्न मद्दत गरोस् हामी सबै यही आशा राखौं । यो शताब्दी शान्ति, प्रजातन्त्र र समाजवादको शताब्दी हुनेछ । विश्व निरन्तर फेरिदैछ, समाज फेरिंदैछ र सामाजिक जीवन निरन्तर फेरिंदैछ । निरन्तर बदलिंदो जीवनलाई आत्मसात गर्दै मजदुर आन्दोलन भित्रको निम्नपूँजीवाद, रुढीवाद र कठमुल्लावादलाई चिर्दै आगामी दिनमा श्रमिक खवर नेपाली मजदुरहरूको माझ फुलिरहनेछ, फुलिरहनेछ ।




# श्रमिक खवर
## साठीदेखि चौहत्तरसम्मका आवरणहरू

**शार्दूल भट्टराई**

नेपालमा मजदुरद्वारा मजदुरकै लागि प्रकाशित पहिलो पत्रिका 'श्रमिक खवर' एउटा स्थापित र लोकप्रिय पत्रिका हो । श्रम र श्रमिकका विविध पक्ष, समस्या र समाधानका विषयहरूमा निर्विकल्प योगदान पुऱ्याउँदै आएको यो पत्रिका मजदुरका बीचमा मात्र सीमित छैन, नेपालको राजनीतिक क्षेत्र, विविध पेशाधर्मी समुदाय र बौद्धिक जगतमा समेत पुग्न सफल भएको छ । मजदुरद्वारा मजदुरकै लागि प्रकाशित पत्रिका भएर पनि सबैतिर पुग्न सफल हुनुमा यो पत्रिकामा संयोजित सामग्रीहरूको भूमिका प्रमुख रहेको छ । त्यसमा पनि 'श्रमिक खवर' ले समावेश गरेका आवरण कथाहरूको भूमिका ज्यादा रहेको छ ।

यहाँ समीक्षाका लागि निर्धारित अङ्क ६० देखि ७४ सम्मका आवरण सामग्रीहरू सबै श्रमसँग नै सम्बन्धित छन् । यद्यपि 'श्रमिक खवर' का यी आवरण कथाहरू राष्ट्रिय महत्त्वको सन्दर्भबाट अलग छैनन् । श्रम र श्रमिक सम्बन्धी राष्ट्रिय महत्त्वको सन्दर्भबाट अलग छैनन् । श्रम र श्रमिक सम्बन्धी राष्ट्रिय महत्त्वका विषय एवं घटनाहरूलाई नै 'श्रमिक खवर' ले आफ्नो आवरण सामग्रीको रूपमा प्रस्तुत गर्ने गरेको छ ।

'श्रमिक खवर' ले एउटा सान्दर्भिक र महत्त्वपूर्ण विषयलाई गम्भीरतापूर्वक उठाउने काम अङ्क ६० मा गरेको छ । सरकारले कमैया मुक्तिको घोषणा गरेपछि त्यही विषयलाई 'श्रमिक खवर' मा आवरण कथा बनाइएको छ । यो आवरण कथामा कमैया मुक्तिका लागि जिफन्ट लगायतको संस्थाले चलाएको आन्दोलनको समेत चर्चा गरिएको छ । कमैयालाई मुक्त गर्ने सरकारको घोषणा महत्त्वपूर्ण रहे पनि कमैयाहरूको पुनर्स्थापनाप्रति भने सरकार गम्भीर नरहेको कुरा आवरण लेखमा उठाइएको छ ।

पचास हजार कर्मचारीहरू आफ्नो पेशागत हकहितका निम्ति संघर्षमा उत्रिरहेको वेला २०१४ सालमा राजा महेन्द्रले लादेको आवश्यक सेवा सञ्चालन ऐनका आधारमा कर्मचारी हडतालमाथि प्रतिबन्ध लगाउने सरकारको निर्णय र त्यसबाट उत्पन्न प्रतिक्रियालाई समेटेर अङ्क ६१ मा आवरण लेख प्रकाशित गरिएको छ । आवश्यक सेवा ऐनका मौलिक हकअधिकार विरोधी प्रावधानहरूको उल्लेख गर्दै सम्पूर्ण श्रमजीवीलाई सरकारको निर्णयका विरुद्ध सचेत रहेनु पर्ने सन्देश यो आवरण कथाले दिएको छ ।

होटेल श्रमिककहरूले सेवा शुल्कका सम्बन्धमा चलाएको आन्दोलन र श्रमिकहरूको माग पूरा गर्ने सम्बन्धमा सरकारले गरेको लिखित प्रतिबद्धतालाई अङ्क ६२ मा आवरण सामग्री बनाइएको छ । सम्बद्ध पक्षहरूको धारणालाई समेत समेटेर होटेल श्रमिकहरूको लामो समयदेखिको माग पूरा हुनु पर्ने पक्षमा ध्यानाकृष्ट गराउने काम यो आवरण लेखले गरेको छ ।

नेपालको संगठित र संस्थागत यूनियन आन्दोलनले पचास वर्ष पूरा गरेको अवसरमा त्यसै विषयलाई आवरण कथा बनाइएको छ- अङ्क ६३ मा । नेपालको ट्रेड यूनियन आन्दोलनको आरम्भ, यसको विकास, यो आन्दोलनमा उत्पन्न विवाद र वर्तमान आन्दोलनको अवस्थाका बारेमा ऐतिहासिक अभिलेखहरू सहित आवरण कथा तयार गर्नु भएको छ- विष्णु रिमालले । लेखकले इतिहासका घटनाहरूलाई रोचक ढंगले प्रस्तुत गर्नु भएको छ । नेपालको ट्रेड यूनियन आन्दोलनको इतिहासलाई जीवन्त रूपमा उतार्ने यो आवरण लेख सफल रहेको छ ।

अङ्क ६४ मा 'मे दिवस' लाई आवरण कथा बनाइएको छ । आवरण कथा लेखक विष्णु रिमालले मे दिवसको महत्त्व, यसको इतिहास, मे दिवसको इतिहासमा देखिएका ऐतिहासिक घटनाक्रमहरू र विश्वका विभिन्न मुलुकभर मे दिवस मनाउन थालिएका सन्दर्भहरूलाई सामग्रीमा उल्लेख गर्नु भएको छ । नेपाल लगायत विश्वका विभिन्न मुलुकको मे दिवस र यसको इतिहासका विविध पक्षबारे जानकारी गराउन यो सामग्री महत्त्वपूर्ण रहेको छ । मजदुरहरू एकताबद्ध भएर अगाडि बढ्नु पर्ने सन्देश समेत यो सामग्रीले प्रवाहित गरेको छ ।

राजदरवार हत्याकाण्डको घटनालाई अङ्क ६५ मा आवरण कथा बनाइएको छ । उक्त घटनापछि उच्चस्तरीय छानवीन समितिले सार्वजनिक गरेको प्रतिवेदनलाई आधार मानेर शंकर पोखरेलले आवरण कथा लेख्नु भएको छ । उच्चस्तरीय समितिको प्रतिवेदनले राजदरवार हत्याकाण्डसँग गाँसिएर आएका अनेकौं रहस्यमय पर्दाहरू खोल्न नसकेको बताउँदै आवरण कथामा २३ वटा गम्भीर प्रश्नहरू

उठाइएको छ। हत्याकाण्ड रहस्यपूर्ण रहेको र वास्तविक तथ्य सार्वजनिक हुन नसकेको कुरालाई स्पष्ट गर्न यो आवरण लेख महत्त्वपूर्ण रहेको छ।




क्रान्तिकारी भूमिसुधार लागू गर्ने भनेर तत्कालीन प्रधानमन्त्री शेरबहादुर देउवाले संसदबाट गरेको घोषणा र त्यसपछि उत्पन्न प्रतिक्रियालाई अङ्क ६६ मा आवरण सामग्री बनाइएको छ। त्यसबाहेक डा. शिव शर्माद्वारा लिखित 'उच्चस्तरीय भूमिसुधार आयोगको प्रतिवेदनमा के छ?' भन्ने लेख र रमेश बडालद्वारा लिखित 'भूमिसुधार कार्यक्रमप्रति राजनीतिक पार्टीहरूको चुनावी घोषणा' भन्ने लेखलाई आवरण सामग्रीको रूपमा समावेश गरिएको छ। त्यस्तै, विगतमा भूमिसुधारका लागि भएका कानुनी प्रयास, भूमिसुधारका विदेशी अनुभवहरू, भूमिसुधारको विषयसँग जोडिएको कृषि श्रम जस्तो विषयलाई पनि आवरण सामग्रीकै रूपमा समावेश गरिएको छ। क्रान्तिकारी भूमिसुधार भनेको के हो र यसलाई कुन ढंगले लागू गर्नु पर्छ भन्ने विषयमा स्पष्ट दृष्टिकोण यो आवरण कथाले अगाडि सारेको छ।




अङ्क ६७ मा विश्वव्यापार संगठन र समकालीन विश्वलाई आवरण कथाको रूपमा प्रस्तुत गरिएको छ। उमेश उपाध्यायको मूल आवरण लेख र विष्णु रिमालको सहयोगी आवरण लेख यसमा समावेश गरिएको छ। सतहमा हेर्दा विश्व व्यापार संगठनका सिद्धान्तहरू राम्रै रहे पनि खुला बजार अर्थव्यवस्थालाई निर्विकल्प बनाउने आधुनिक पूँजीवादी राष्ट्रहरूको स्वार्थमा यो संगठनले काम गरिरहेको कुरालाई यो आवरण कथाले उजागर गरेको छ। विश्वव्यापार संगठनले श्रममाथि पारिरहेको नकारात्मक प्रभाव, यसबाट विश्वका विभिन्न मुलुकले भोग्नु परिरहेको पीडा र नेपालमा यो संगठनले प्रवेश गर्दा हुने असरका बारेमा पनि आवरण कथामा चर्चा गरिएको छ। यो सामग्री विश्व व्यापार संगठनको अहिलेको नकारात्मक भूमिकालाई उदाङ्गो पार्न सफल छ।




विद्यमान श्रम ऐनलाई सङ्कटकालको मौका छोपी सरकारले श्रमिकहरूको विरुद्धमा गर्न खोजेको संशोधनको निर्णयलाई अङ्क ६८ मा आवरण कथा बनाइएको छ। रमेश बडाल र विष्णु रिमालका दुई वटा लेख मार्फत् सरकारको श्रमिक वर्गको हकहित विरोधी नियतलाई स्पष्ट पार्ने काम भएको छ। सरकारको श्रमिक वर्ग विरोधी नीतिकै कारण सङ्कटकालको मौका छोपी अध्यादेश मार्फत षडयन्त्रपूर्ण ढंगले श्रम ऐनमा गर्न लागेको संशोधनप्रति सबैलाई सजग गराउन यो आवरण सामग्री सक्षम देखिएको छ।

अङ्क ६९ मा वैदेशिक रोजगारीमा रहेको नेपाली श्रमका बारेमा आवरण कथा रहेको छ। नेपालीहरू विदेश किन जान्छन्, कुन कुन मुलुकमा कसरी गएका छन्, कुन मुलुकमा कति नेपाली रोजगारीका लागि गएका छन्, उनीहरू कस्तो काम गरिरहेका छन् भन्ने जस्ता समग्र विषयलाई यो सामग्रीमा समेटिएको छ। उमेश उपाध्यायले लेख्नु भएको यो आवरण कथा नेपालीहरू रोजगारीका लागि विदेश जाने बढ्दो प्रवृत्ति र यसका विभिन्न पक्षबारे प्रकाश पार्न सफल छ। आवरण कथाकै अर्को सामग्रीका रूपमा विदेशी रोजगारीमा गएर फर्किएका नेपालीहरूबारे मञ्जु थापाले तयार गर्नु भएको सामग्रीमा विदेशमा नेपालीहरूले पाएको दु:खलाई मार्मिक रूपमा प्रस्तुत गरिएको छ।

मे दिवसलाई आवरण कथा बनाइएको छ अङ्क ७० मा। यो अङ्कमा आवरण कथाको रूपमा जिफन्टद्वारा आयोजित कार्यक्रमहरू, राजनीतिक पार्टीका धारणाहरू, जिफन्टको मे दिवस घोषणा, मे दिवसका अवसरमा विश्वभर आयोजित उल्लेख्य कार्यक्रमहरूलाई समेटिएको छ। आवरण कथा लेखक कवीन्द्रशेखर रिमालले यो मे दिवसका अवसरमा आयोजित कार्यक्रमहरूको सन्देश प्रवाहित गर्ने काम यो सामग्री मार्फत गर्नु भएको छ।

सहकारी अभियान अन्तर्गत जिफन्टले आफूलाई स्वास्थ्य क्षेत्रमा समेत संलग्न गराएको छ। श्रमजीवी वर्गलाई सस्तो र सुलभ ढंगले स्वास्थ्य सेवा पुऱ्याउने उद्देश्यले स्वास्थ्य क्षेत्रमा जिफन्टले लिएको अग्रसरतालाई अङ्क ७१ मा आवरण कथाको रूपमा प्रस्तुत गरिएको छ। विष्णु रिमालले तयार गर्नु भएको यो आवरण कथाले श्रमिक सहकारी अभियानको पहिलो खुड्किलोका रूपमा जिफन्टले स्वास्थ्य सहकारी संस्था शुरू गर्दा ३ वर्ष अघि राखेको उद्देश्य र अहिलेसम्म प्राप्त सफलतालाई समेटेको छ।

अङ्क ७२ मा आम निर्वाचनमा श्रम एजेण्डा भन्ने विषयलाई आवरण सामग्रीको रूपमा प्रस्तुत गरिएको छ। उमेश उपाध्यायले तयार गर्नु भएको यो आवरण

कथाले श्रमिक एजेण्डाका बारेमा केही महत्त्वपूर्ण सवालहरू उठाएको छ। विगत आम चुनावमा प्रमुख राजनीतिक पार्टीहरूले उठाएका श्रमिक एजेण्डा कस्ता थिए र अब कस्तो तयार गर्नु जरुरी छ भन्ने विषयमा यो आवरण कथा केन्द्रित छ। श्रमिक आन्दोलनका सबै कोणबाट उठेका र सबैको सहमति रहेका श्रम सम्बन्धी एजेण्डा प्रस्तुत गरेर राजनीतिक पार्टीहरूलाई समेत घच्घच्याउन यो आवरण लेख सफल रहेको छ।

समाजवादी मजदुर नेता लुइज इमासिओ लुला डा. सिल्भा ब्राजिलको राष्ट्रपतिको निर्वाचनमा विजयी भएको घटना विश्वकै चर्चाको विषय बन्न पुग्यो। एउटा मजदुर नेताको विजयलाई गौरवको विषय ठान्दै श्रमिक खवरले पनि अङ्क ७३ मा आवरण कथा प्रस्तुत गरेको छ। उमेश उपाध्यायले यो आवरण लेखमा ब्राजिलको राजनीतिक अवस्था, ब्राजिलको संसद च्याम्बर अफ डेपुटिजमा रहेको पार्टीहरूको प्रतिनिधित्व, राष्ट्रपति लुलाको सफलता लगायतका विषयहरूलाई आवरण लेखमा समेट्नु भएको छ। संक्षिप्त भइकन पनि यो आवरण लेखबाट विस्तृत जानकारी प्राप्त गर्न सकिन्छ।

अङ्क ७४ मा श्रमिकको सामाजिक सुरक्षाको विषयलाई आवरण कथा बनाएर प्रस्तुत गरिएको छ। रमेश बडालको मूल आवरण लेख र उमेश उपाध्यायको सहयोगी आवरण लेख यसमा समाविष्ट गरिएको छ। श्रमिकको सामाजिक सुरक्षाका लागि कानुनी व्यवस्था, सामाजिक सुरक्षा कोषको व्यवस्था सञ्चालन, निजी क्षेत्रमा सामाजिक सुरक्षाको व्यवस्था, निजामती र अन्य सरकारी कर्मचारीका लागि सामजिक सुरक्षा व्यवस्था, सामाजिक सुरक्षा सम्बन्धी भारतीय अनुभव आदि जस्ता विषयहरूलाई यो आवरण लेखमा समेटिएको छ। अहिले ज्वलन्त रूपमा उठ्ने गरेको सामाजिक सुरक्षाको सन्दर्भमा यो सामग्री सामयिक बन्न पुगेको छ। सामाजिक सुरक्षाको विधि र प्रक्रियाको दृष्टिले समेत यो आवरण लेखको महत्त्व रहेको छ।

आवरण लेख भनेको के हो? यो कस्तो हुनु पर्छ? यसका मान्यता र सीमा के हुन्? यी प्रश्नहरूको ठोस उत्तर छैन। आवरण लेख यस्तै हुनु पर्छ भनेर स्पष्ट रूपले परिभाषित पनि कसैले गरेको छैन। यद्यपि पत्रिकाको क्षेत्र र स्वरूप अनुसार आवरण लेखका लागि केही खास आधार र सीमा हुनु पर्ने मान्यता भने रहेको छ।

जनताको कुनै चासो नरहेको र महत्त्व पनि खासै नभएको विषय आवरण कथा बन्न सक्दैन। आवरण कथा पत्रिकाको आ-आफ्नो स्वरूप अनुसार जनताको चासो, चर्चा र महत्त्वको विषयमा हुनु पर्दछ। पत्रिकाको क्षेत्र र उद्देश्य अनुसार सकेसम्म धेरैको चासो रहेको गम्भीर विषयलाई आवरण कथाको सामग्री बनाउनु पर्दछ।




जुन घटना वा विषयलाई आवरण कथाको रूपमा प्रस्तुत गरिन्छ- त्यो घटना वा विषयका बारेमा सत्यतथ्यको समग्र जानकारी दिने क्षमता आवरण कथाले बोकेको हुनुपर्छ। घटना वा विषयको अपूरो जानकारीका आधारमा आवरण कथा बन्न नसक्ने मान्यता पनि रहेको छ। त्यस्तै, आवरण कथाको लेखक आवरण कथाको घटना वा विषयवस्तु सम्बन्धी विशेषज्ञ वा जानकार व्यक्ति हुनु पर्ने, प्रस्तुति रोचक हुनु पर्ने, भाषाशैली मीठो हुनु पर्ने, थोरैमा धेरै कुराको जानकारी दिने खालको हुनु पर्ने, सामग्रीले दिन खोजेको सन्देश सरल र स्पष्ट हुनु पर्ने, साजसज्जा आकर्षक हुनु पर्ने लगायतका मान्यताहरू पनि रहेका छन्।




आवरण लेख सम्बन्धी आम प्रचलनका यस्ता मान्यताहरूलाई आधार मानेर हेर्दा 'श्रमिक खवर' का सबैजसो अङ्क ती मान्यतामा रहेको पाइन्छ। सबैजसो आवरण कथाहरू जनचासोका दृष्टिले महत्त्वपूर्ण र प्रस्तुतिका दृष्टिले पनि राम्रा छन्।

कमैया मुक्ति र त्यसपछिको अवस्था, नेपालमा संगठित ट्रेड यूनियन आन्दोलनको पचास वर्ष, क्रान्तिकारी भूमिसुधार, श्रम ऐनमा संशोधन, विश्वव्यापार संगठन र समकालीन विश्व, वैदेशिक रोजगारीमा नेपाली श्रम, आम निर्वाचनमा श्रम एजेण्डा, श्रमिकको सामाजिक सुरक्षा विषयका आवरण कथाहरू स्तरीय रहेका छन्। यी आवरण कथाले जति गम्भीर विषयलाई उठाएका छन्, तिनको प्रस्तुति र सन्देश पनि गम्भीर नै रहेको छ। अन्य आवरण लेखहरू पनि सामयिक सन्दर्भका दृष्टिले उपयुक्त रहेका छन्। प्रस्तुतिलाई आम श्रमिक वर्गले बुझ्ने सरल र रोचक बनाउनु पर्ने कुरामा कमजोरी देखिए पनि समग्रमा 'श्रमिक खवर' का आवरण कथाहरू विषयवस्तुको छनोट अनुसार आफ्नो सन्देशलाई प्रभावपूर्ण ढंगले सम्प्रेषित गर्न सफल देखिएका छन्।



# देशको खबर: श्रमिक खबर

**राजेन्द्र दहाल**, सम्पादक, हिमाल खबर पत्रिका

'श्रमिक खबर' को साजसज्जा र यसमा प्रकाशित सामग्रीहरूमाथि टीकाटिप्पणी गरी सुधारका निम्ति सल्लाह-सुझाव समेत दिन कवीन्द्रजीले गर्नुभएको आग्रहलाई मैले नियत समयमा पूरा गर्न सकिन। त्यस निम्ति म लज्जित छु। तर, कबूल गरेको समयमा लेख्न किन सम्भव भएन त ? कुरा यहींबाट शुरू गरौं।

एउटा औपचारिक टिप्पणी लेख्न पत्रिकाका पाना सरसर्ती पल्टाउँदै दुई-चार वटा शीर्षक र विषयवस्तु छानेपछि पुगिहाल्ने सोचाइ थियो। त्यही अनुरूप टेबुलको दायाँतिर कागज र कलम ठीक पारेर एउटा अङ्कको पाना पल्टाउन थालें। तर सोचे अनुरूपको गतिमा पाना पल्टिएनछन्। पछि थाहा भयो, एउटै अङ्कले झण्डै दुई घण्टा खाइदिएछ। अर्थात् त्यस अङ्कका समाचार कथा, अन्तर्वार्ता चित्रकथा आदि सामग्री पूरै पढ्न पो थालेछु। यत्तिकैमा टिप्पणी लेख्न छुट्याएको समय सकियो। अर्को पटक पनि यस्तै भयो। फेरि पनि... । परिणामतः मैले नियमित समयमा 'श्रमिक खबर' का सम्पादकलाई आफ्नो टिप्पणी उपलब्ध गराउन सकिन।

'श्रमिक खबर' का पानाले मेरा आँखा र ध्यान खिच्नुका मुख्य दुई कारण हुनसक्छन्। पहिलो, यो पत्रिका मैले यसअघि सम्भवतः देखेकै थिइनँ, यदि देखेको थिएँ भने पढेको थिइनँ। नौलो वस्तुले स्वाभाविक रूपमै कसैको ध्यान आकर्षित गर्छ। दोस्रो कारण 'श्रमिक खबर' मा पस्किएका सामग्रीहरू मेरो पूर्वानुमानभन्दा भिन्न, धेरै जानकारीमूलक र सरल प्रस्तुतिमा पाउनु हो। नेपाली भाषामा, त्यो पनि श्रमिकहरूलाई लक्ष्य गरिएको प्रकाशनमा मननयोग्य कुरा के पो होलान् र भन्ने आग्रहले मेरो मस्तिष्कमा डेरा जमाएको हुँदा माथिको दोस्रो कारण महत्त्वपूर्ण हुन गएको हो। त्यस्तो आग्रहको स्रोत अरू नभएर, नेपाली भाषामा निस्कने थुप्रै संस्थागत प्रकाशन, बुलेटिन, मुखपत्र आदि नै हुन्, तर अब त्यता नलागौं।

'श्रमिक खबर' का दश-बाह्र अङ्क हेर्दा लाग्यो, नेपाली श्रमिकहरू भाग्यमानी छन्, किनभने तिनले आफ्नो दुनियाँसँग सम्बद्ध कुराहरू सरल नेपाली भाषामा, रंगीन छपाई र चिप्लो कागजमा पढ्न पाउँछन्। अरूको कुरा नगरौं, हामी पत्रकारहरूसँग यस्ता प्रकाशन छैनन्। कार्टून-चित्र, ग्राफिक्स आदिका माध्यमबाट जटिल विषयलाई सहज ढङ्गबाट गरिएको प्रस्तुति 'श्रमिक खबर' को सबैभन्दा ठूलो विशेषता हो भने अर्को उल्लेख्य पक्ष, श्रमिकसँग सरोकार राख्ने विषयमा गहन खोज र विश्लेषणयुक्त समाचार, कथाहरूलाई स्थान दिनु हो। कुनै अङ्कमा "नेपालका ट्रेड यूनियनहरू अप्ठ्यारो स्थितिमा" शीर्षक अन्तर्गत त्यस क्षेत्रको जति विशुद्ध विश्लेषणात्मक जानकारी दिइएको छ, त्यो हेरेपछि त्यसबारेमा जो-कोहीले आधिकारिक रूपमा आफ्नो धारणा बनाउन सक्छ।

मुलुकको राजनीतिक अन्यौल र हिंसा, संकटकाल आदि कारणबाट उद्योगधन्दा बन्द हुँदै गएको सतही सूचना यदाकदा प्रकाशित हुने नगरेका होइनन्, तर 'श्रमिक खबर' ले श्रमिक संख्या र यूनियनहरूको संख्यामा भएको कटौतीलाई छर्लङ्ग हुने गरी प्रस्तुत गरेको छ। कृषि मजदुरमध्ये झण्डै ६२ प्रतिशत अर्थात् बहुसंख्यक महिला छन्। तर, ज्यालाको अन्तर ठाउँ अनुसार एकदमै फराकिलो, रु.२० । देखि रु.१२० सम्म छ। सजिलै अनुमान गर्न सकिन्छ, तल्लो स्केलको ज्याला पुरुषको हैन महिलाकै हुन्छ। कत्रो विडम्बना !

समग्रमा, 'श्रमिक खबर' ले मूलप्रवाहका आमसञ्चार माध्यमहरूमा पर्नुपर्ने, तर नपरेका विषय र मुद्दाहरूलाई राम्रोसँग समेटेको पाइन्छ। 'श्रमिक खबर' को पाठक दायरा कति व्यापक छ भन्ने मलाई थाहा छैन। यदि पढ्नुपर्ने जतिले पढ्न पाएका छन् भने त खुशीको कुरा हो। हैन भने, राम्रो मिहिनेत गरिएका सामग्रीहरू केही सीमित व्यक्तिहरूको निम्ति मात्र हुनु हुँदैन। 'श्रमिक खबर' ले अनुसन्धान र खोज गरी तयार पारेका समाचार/विश्लेषणहरूलाई 'स्रोत सामग्री' को रूपमा आमसञ्चारका माध्यमहरूलाई उपलब्ध गराउनु श्रमसम्बन्धी मुद्दाहरूलाई मूलप्रवाहीकरण गर्ने एउटा विकल्प हुन सक्दछ।

विषयवस्तुको छनौट, भाषा र प्रस्तुतिमा राष्ट्रिय राजनीतिका तात्कालिक उतारचढाव र सन्तुलनको ठाडो असर परेको देखिन्छ। आफ्नो दलीय अवधारणामा दृढ रहेर विशुद्ध श्रमिकसम्बन्धी सवालमा चाहिँ भाषा र भावनात्मक संयमता प्रदर्शन गर्नसक्नु पत्रिकाको दिगो विश्वसनीयताको निम्ति लाभप्रद हुनसक्छ। त्यस्तै

सामग्री सङ्कलनको दायरालाई भौगोलिक र विषयगत दुवै हिसाबले फराकिलो पारेको नै राम्रो हुन्छ । १२ वटा अङ्कको चाङबाट "त्याण्डम्ली" झिकिएका दुई वटा अङ्कमा प्रकाशित अन्तर्वार्ता दुवै बारा जिल्लामा पर्नु संयोग मात्र पनि हुनसक्छ । तर, त्यस्तो 'नदेखिनु' राम्रो हुन्छ ।

श्रमिकहरूलाई आफ्नो अधिकार र सीमाप्रति उत्प्रेरित एवं सचेत तुल्याउने सामग्रीहरूको प्रस्तुति पर्याप्त मात्र छैन, प्रशंसनीय ढङ्गले सुबोध्य र महत्त्वपूर्ण छन् । तर, सँगै ध्यान दिनुपर्ने पक्ष, उत्पादकत्व र श्रमिकको समयानुकूल सीप वृद्धि पनि हुन् । विदेशी श्रमिक र नेपाली श्रमिकको क्रय शक्तिका बारेमा एउटा अङ्कमा साह्रै घतलाग्दो तुलनात्मक विवरण दिइएको छ । त्यसअनुसार, एक लिटर दूध किन्न पुग्ने पैसा कमाउन डेनिस र जर्मन श्रमिकले साढे दुई मिनेट, अमेरिकनले ४ मिनेट, पोलिसले साढे आठ मिनेट, चिनियाँले साढे १३ मिनेट, थाईले ३७ मिनेट काम गर्नुपर्छ । अनि नेपाली श्रमिकले चाहिँ ४ घण्टा ५२ मिनेट । ३३ घण्टा ३३ मिनेटको कमाइले मात्र एउटा नेपाली श्रमिकले मर्दा चाहिने कात्रो किन्न सक्छ । र, 'श्रमिक खबर' किन्न करीब ३ घण्टाको ज्याला आवश्यक हुन्छ ।

यी दृष्टान्त अति नै प्रभावशाली छन् । तर, यस्तो हुनाका आधारभूत कारणहरू के-के हुन् । यस निम्ति, उद्योगपति, सरकार, कानून अथवा हाम्रो समग्र आर्थिक नीतिमध्ये कुन बढी जिम्मेवार छन्, दयनीयताको यो दुष्चक्रबाट मुक्ति पाउन के गर्नुपर्छ भन्ने जस्ता प्रश्नहरूतिर पनि ध्यान जानु जरुरी हुन्छ । ज्यालाको मात्र कुरा गरेर उत्पादनशीलतालाई बिर्सँदा कतिपय मानिसहरू भ्रममा पर्ने सम्भावनालाई सम्पादकहरूले बिर्सन मिल्दैन ।

'प्रवासी' शब्दको अर्थ "अर्को देशमा गई लामो समयदेखि काम गरिरहेका तर पछि स्वदेश फर्कने नेपालीहरू" भन्ने जस्ता सानातिना त्रुटि र असावधानीलाई निमिट्यान्न पारेर 'श्रमिक' को परिभाषाभन्दा बाहिर पर्ने नेपालीहरू माझ पनि 'श्रमिक खबर' लोकप्रिय होवस् !







# हार्दिक श्रद्धाञ्जलि !



**कमरेड वकिलमान शाक्य**

२०४३ सालमा पेप्सीकोलामा पहिलो पटक मजदुर हुँदा उनको सपना ठूलो थिएन- गुजारा चलाउने र यूनियनको सदस्य बन्ने ! २०४५ सालमा नेस्वमयूको सदस्य भएपछि वकिलमान, पेप्सीका मजदुरहरूको पक्षबाट वकालत गर्न थाले । त्यसपछि शुरू भयो श्रृङ्खला शक्तिशाली बहुराष्ट्रिय कम्पनीका व्यवस्थापनसँग द्वन्द्व-वार्ता-संझौताको !

२०४९ सालमा पेप्सीको व्यवस्थापनसँग उनको अन्तिम सामना भयो, गैरकानुनी ढंगबाट उनी कामबाट निकालिए । त्यसपछि वकिलमानका सामु दुई वटा बाटा रहे, रोजगारीको नयाँ क्षेत्रमा प्रवेश गर्ने कि कानुनी लडाइ जारी गर्दै यूनियनमा पूर्णकालीन कार्यकर्ताको रूपमा काम गर्ने ? उनले धन कमाउने सम्भावना लत्याए र मजदुरकै सुख-दु:खमा रमाउने बाटो समाउँदै पूर्णकालीन जीवन शुरू गरे । २०५० सालदेखि उनी प्रेस यूनियनको कार्यालय सचिव, केन्द्रीय सचिव हुँदै जिफन्ट लेखा शाखाका एक महत्त्वपूर्ण स्टाफ पनि बन्न पुगे ।

उनको उचाइ छुने र अघि बढ्ने सम्भावना ज्यूँ का त्यूँ थियो । मिहेनत जारी थियो । यूनियन आन्दोलनको रापले उनलाई नेपाली ट्रेड यूनियन आन्दोलनको नेतृत्व तहमा विकास गरिरहेको थियो ।

अचानक... नसोचेको दुर्घटना भयो । २०६० साल जेठ ३० गतेको एका बिहानै आफ्नै निवासमा करेन्ट लागी उनको आकस्मिक तथा असामयिक दु:खद निधन भयो ।

हामीले कमरेड वकिलमानलाई गुमायौं । उनका तीन टुहुराहरूले आफ्ना अभिभावक गुमाए । बुढी आमा, जवान श्रीमती, वेसहारा बहिनी र अन्य नातेदारहरूले आफ्नो भर-अभरको सहारा गुमाए । एक क्षणमै सबै थोक चकनाचुर भयो ।

नेपाल ट्रेड यूनियन महासंघ कमरेड वकिलमानप्रति अश्रु मिश्रित श्रद्धाञ्जलि व्यक्त गर्दछ र उहाँको शोक सन्तप्त परिवारप्रति गहिरो समवेदना व्यक्त गर्दछ ।

अलबिदा कमरेड, तपाईं हामीहरू बीच अमर हुनुहुन्छ !



क. मोदनाथ प्रश्रित
स्थायी समिति सदस्य, नेकपा (एमाले)

# कमरेड मुकुन्द न्यौपानेको "दर्शन भनेको के हो ?" लेख मालाबारे

मजदुर आन्दोलन आधुनिक विश्वको सर्वाधिक शक्तिशाली आन्दोलन हो । मानव जातिको युगीन सपना समाजवाद हो र त्यसको नेतृत्वकारी शक्ति मजदुर वर्ग हो । मजदुर वर्ग सही दृष्टिकोण, सही लक्ष्य र सही कार्यक्रम सहित आफ्ना मित्रशक्तिहरूलाई ठीक ढंगले समेटेर अघि बढ्न सकेमा मात्र मानव जातिको सपना चाँडै साकार हुनसक्छ । त्यसैले मजदुर वर्गले सबभन्दा पहिले वैज्ञानिक दर्शनबाट आफ्नो चेतना र योजनालाई सज्जित गर्नु आवश्यक छ ।

यदि मजदुर वर्गले समाजवादमा पुग्ने ध्येयलाई मार्क्सवादी-लेनिनवादी दृष्टिबाट प्रष्ट रूपले ठम्याउन सकेन भने त्यो प्रतिक्रियावादीहरूका अनेकौं भ्रम जालहरूमा फँसेर गलत दिशातिर मोडिन्छ र लक्ष्यबाट च्युत हुन्छ । हामीले आफ्नै मुलुकमा देखिसकेका छौं- निरंकुश निर्दलीय पञ्चायती व्यवस्थाले आफ्नो लक्ष्य 'शोषणविहीन समाजको निर्माण गर्नु हो' भन्ने नारा दियो । त्यो नारा सहित भूमिसुधारको नाटक पनि देखाइएकोले केही मजदुरलाई पञ्चायती व्यवस्थाको लक्ष्य पनि समाजवाद जस्तै रहेछ क्यारे भन्ने भ्रम पऱ्यो र उनीहरू त्यसका पछि लागे । त्यसरी नै नेपाली कांग्रेसले पनि आफ्नो लक्ष्य 'प्रजातान्त्रिक समाजवाद' हो भनी प्रचार गरेकोले मजदुरहरूको अर्को जमात पनि त्यसको भ्रममा फँस्यो र अहिले पनि त्यसले कांग्रेसी झण्डा बोकिरहेको छ ।

इतिहासमा हामीले देखेका छौं- हिट्लरले पनि समाजवादको नारा दिएको थियो र अहिले पनि विश्वका अनेकौं पूँजीवादी पार्टीहरूले समाजवादको नक्कली नारा लगाइरहेका छन् । यसखाले तत्त्वहरूले समाजवादलाई फोटो स्टुडियोमा राखेको टोप जस्ता बनाएका छन् - जसले चाह्यो लगायो र फोटो खिच्यो हिंड्यो, बस् । मार्क्सवादी दर्शनको राम्रो ज्ञान नभएको कारणले नै ती सबैका पछाडि मजदुरहरूका केही जत्था अहिले पनि भ्रमवस लाम लागेका देखिन्छन् ।

नेपाल ट्रेड यूनियन महासंघले आफ्नो मुखपत्र 'श्रमिक खवर' र अन्य विभिन्न सामग्री एवं प्रशिक्षण मार्फत महासंघका सबै शाखाहरूमा मार्क्सवादी वैज्ञानिक दर्शनको व्यापक प्रचार गर्ने ज्यादै महत्त्वपूर्ण काम अघि बढाएको छ । यसै सन्दर्भमा 'श्रमिक खवर' को संख्या ६६ (असोज २०५८) देखि 'जिफन्ट' का अध्यक्ष र एमाले नेता क. मुकुन्द न्यौपानेको 'दर्शन भनेको के हो?' शीर्षक लेखमाला नियमित रूपमा प्रकाशित हुँदै आएको छ । यसरी लाखौं मजदुरका निम्ति दर्शन सम्बन्धी सामग्री नियमित रूपमा प्रकाशित गरिएको कुरा नेपालको सन्दर्भमा संभवतः पहिलो प्रयास हो भन्ने मलाई लाग्छ । यो ज्यादै खुसी र स्वागतयोग्य विषय हो ।

कमरेड मुकुन्द न्यौपाने दर्शनको गहन अध्ययन गर्ने र आफ्नो लेखन, प्रवचन र सामान्य बोलीचालीमा समेत मार्क्सवादी दर्शन र विभिन्न दार्शनिक सन्दर्भहरूको उदाहरण सहित सटिक अभिव्यक्ति दिने चिन्तक-नेता हुनुहुन्छ भन्ने कुरा धेरैलाई थाहा छ । उहाँले लामो समयदेखि पार्टीको मजदुर फाँटको जिम्मेदारी बोक्दै आउनुभएको छ र उहाँको अगुवाइमा नेपालको मजदुर आन्दोलन विभिन्न शाखा-प्रशाखा सहित महासंघको रूपमा अत्यन्त व्यवस्थित र सुगठित ढंगले अगाडि बढ्दै आएको छ । अहिले देशमा 'जिफन्ट' जस्तो शक्तिशाली र व्यापक मजदुर संगठन अर्को छँदैछैन भन्ने कुरामा हामीलाई गर्व छ ।

'श्रमिक खवर' मा संख्या ६६ देखि ७३ सम्म लगातार छापिँदै आएको दर्शन सम्बन्धी यस लेखमालामा क. मुकुन्दले 'दुई विश्व-दृष्टिकोण' बाट शुरू गरेर अध्यात्मवाद र भौतिकवाद बीचको संघर्ष, प्रकृति र समाजलाई हेर्ने दृष्टिकोण, मार्क्सवादी दर्शन के हो, यसले कसको हित गर्छ ? मार्क्सवादलाई श्रमिक वर्गले पथप्रदर्शक सिद्धान्त मान्नुको कारण के हो ? पदार्थ, चेतना, गति दिक्, काल, विश्वको विस्तार, वस्तुगत जगत्मा चेतनाको भूमिका आदि विषयमा विस्तृत रूपले व्याख्या गर्नुभएको छ । मार्क्सवादी दर्शन र त्यसको सामाजिक-आर्थिक लक्ष्यप्रति आस्थावान् भएर अघि बढ्ने मजदुर, किसान, महिला, वुद्धिजीवी लगायत सबैले आधारभूत रूपमा बुझ्नै पर्ने विषयहरू हुन् यी ।

सामान्यतया मानिसहरू दर्शन भनेको ज्यादै गहन, क्लिष्ट र उच्च बौद्धिक स्तरका सीमित व्यक्तिहरूले मात्र बुझ्न सक्ने विषय हो र आम जनतासँग यसको ज्ञान फैलिन

सक्तैन भन्ने धारणा राख्दछन् । वास्तविकता त्यस्तो होइन । दर्शनलाई बुझ्ने र बुझाउने शैलीमा रहेको कमजोरीको कारणले मानिसहरूमा त्यस्तो धारणा बन्न गएको हो । यदि जीवन र व्यवहारका अनुभवसँग गाँसेर उदाहरण सहित प्रस्तुत गर्ने हो भने दर्शनका सबै पक्षलाई बहुसंख्यक जनतासम्म सहज ढंगले लैजान सकिन्छ । अध्यात्मवादी दर्शन क्षेत्रका विद्वानहरूले शास्त्रीय ग्रन्थहरूको सरल व्याख्या, कथा-दृष्टान्त, कविता-भजन, गीत-उखान आदिको माध्यमबाट सर्वसाधारण अशिक्षित जनतालाई समेत आफ्नो दर्शनको स्वरूप र लक्ष्य सरल ढंगले बुझाउनमा हजारौं वर्षदेखि सफलता पाउँदै आएका छन् । अहिले पनि बहुसंख्यक सर्वसाधारण जनतामा ईश्वर-देवी-देवता, धर्म, परलोक, पुनर्जन्म, भाग्यवाद, मोक्ष आदि जस्ता कुरामा जुन अगाध विश्वास देखिन्छ, धार्मिक कार्यक्रमहरूमा जसरी उनीहरू मुठ्ठी खोलेर खर्च र दान गर्छन् - यो कुरा अध्यात्मवादका प्रचारक विद्वान्हरूको व्यापक सफलताको प्रष्ट प्रमाण हो । यो हामीले पनि सिक्नु पर्ने कला हो । जब मानिसको वास्तविक वर्तमान जीवनका कठिन समस्याहरूलाई पन्छाएर काल्पनिक (अदृश्य) ईश्वर, परलोक आदि जस्ता कुरामा त यसरी व्यापक जनताको दृष्टिकोण मोडेर हजारौं वर्षसम्म जनतालाई काल्पनिक लोकमा घुमाएर रनभुल्लमा पार्न सकिंदो रहेछ भने यसै जीवनका वास्तविक समस्या जालझेल, शोषण-दमन आदिको विश्लेषण गरेर यसै जीवनमा यसै धर्तीलाई जनताको वास्तविक स्वर्गको रूपमा परिणत गर्न सकिने कुरा सरल र रोचक ढंगले प्रस्त गर्ने हो भने मार्क्सवादी वैज्ञानिक दर्शनलाई पनि आम जनतासम्म लोकप्रिय बनाउन सकिन्छ । हो, कसैले दर्शनलाई सार-संक्षेपमा बुझ्लान् भने कसैले गहिरो र व्यापक रूपमा बुझ्लान् यो बेग्लै कुरा हो ।

मुकुन्द न्यौपानेले 'श्रमिक खवर' मा आठ श्रृङ्खलामा प्रस्तुत गर्नुभएको लेखमालाबाट सामान्य शिक्षितसम्मका जागरुक मजदुरहरूलाई आफ्नो मुक्ति र प्रगतिको मार्गदर्शक दर्शनका विविध पक्षहरूमा ज्ञान हासिल गर्न पक्कै पनि निकै सहयोग मिलेको छ । लेखकले यति मिहिनेत गरेर लेखमाला तयार गर्नुभएको र 'श्रमिक खवर' ले यसको नियमित प्रकाशन गरिरहेको सन्दर्भमा म आफूलाई लागेका केही कुरा र केही सुझाव प्रस्तुत गर्न चाहन्छु ।

'श्रमिक खवर' विभिन्न व्यवसायका लाखौं मजदुरहरूको पत्रिका हो । नेपालमा मजदुर वर्गको केही माथिल्लो हिस्सामा शिक्षाको स्तर राम्रै छ: तर अधिकांश मजदुरहरू आज पनि अल्प शिक्षित या अशिक्षित छन् । ती सबैलाई दर्शन, अर्थशास्त्र, इतिहास समाजशास्त्र आदि जस्ता विषयहरू बुझाउन सरल भाषामा, प्रष्ट बुझिने गरी अलि साना लेखहरू लेख्नु राम्रो हुन्छ । लेखहरू पनि रोचक प्रश्नोत्तर शैलीमा, सकेसम्म आफ्नै देशका व्यावहारिक उदाहरणहरू दिएर प्रस्तुत गरेमा बढी भन्दा बढी मजदुरहरूले राम्ररी बुझ्न सक्छन् । क. मुकुन्दको लेखमाला बौद्धिक र शैक्षिक स्तर अलि उच्च भएका र संस्कृत निष्ठ भाषा पनि छिचोल्न सक्नेहरूका लागि निकै उपयोगी र त्यसभन्दा तल्लो स्तरका लागि अलि गाह्रो पर्ने खालको भयो कि भन्ने मलाई लागेको छ । उहाँको भाषा कतिपय ठाउँमा एकदमै संस्कृत निष्ठ भएको छ र शिक्षित मजदुरलाई समेत हम्मे-हम्मे पार्ने खालको छ । उदाहरणको रूपमा यो वाक्य लिऊँ- "विस्तार (दिक्) वस्तुको अस्तित्वको यस्तो स्वरूप हो जसले भौतिक पदार्थको क्षेत्र, त्यसको आधार र त्यसको आयामलाई जनाउँछ । तर समयले वस्तु र अस्तित्वको विकासको दोस्रो पक्षलाई जनाउँछ । समयले भौतिक पदार्थमा भइरहेको अनुक्रमणलाई निरुपित गर्दछ ।" (संख्या ७० पृष्ठ २३)




नेपाली भाषामा दर्शन विषयको लेखाइ र पढाइ कम भएको, दर्शन सम्बन्धी सरल शब्दहरूको निर्माण भइनसकेको, लेखकहरूमा पनि नेपाली प्रत्यय लगाएर नयाँ-नयाँ शब्द बनाउनुको सट्टा अरु भाषाबाट बनि-बनाउ शब्द ल्याउने बानी परेको, अरु भाषाबाट नेपालीमा अनुवाद गर्नेहरूले पनि भाषाका सरल शब्दहरूको खोजी नगरी संस्कृत र अङ्ग्रेजी आदि शब्दको पैंचो बढाउँदै गएको आदि कारणले गर्दा मुकुन्द न्यौपानेलाई पनि लेख सरल पार्न गाह्रो भएको कुरा प्रष्टै छ । जब दर्शनमा लगातार पौडी खेल्ने लेखकलाई त विषयको भाव र अर्थ व्यक्त गर्न भाषाको यस्तो कठिनाइ पर्छ भने अशिक्षित र अल्पशिक्षित मजदुरहरूलाई त्यो भाषा छिचोलेर गुदी कुरा वा आशय बुझ्न कत्तिको गाह्रो होला भन्ने कुरा सजिलै अन्दाज गर्न सकिन्छ ।




अर्को कुरा- दर्शनका सम्बन्धमा एउटै शीर्षकमा लेखिएको यति लामो लेखमाला दुई-तीन महिनामा बल्ल छापिने पत्रिकामा खण्ड-खण्ड गरेर दिंदा त्यसको कौतूहल र आकर्षणले कत्तिको निरन्तरता पाउन सक्ला ? कथा, उपन्यास जस्ता विषय भए संभवत: आकर्षण लगातार रहन सक्दो हो । त्यसैले एक पटक 'श्रमिक खवर' ले यस लेखमालालाई फरक-फरक चेतनास्तरका मजदुरहरूले कुन रूपमा बुझे, कत्तिको बुझे, यो लेखमाला उनीहरूको लागि कत्तिको उपयोगी र लाभदायक भयो भन्ने जस्ता विषयमा प्रतिक्रिया माग्नु राम्रो होला । अथवा यस लेखमालाबारेको अन्तर्क्रिया पत्रिकाको निम्ति र स्वयं लेखकहरूको निम्ति पनि ज्यादै उपयोगी हुन्छ । बहुसंख्यक जनता नै भाषा र अभिव्यक्तिका मौलिक भण्डार हुनाले उनीहरूले संस्कृत वा अरु भाषाका शब्दहरूका ठाउँमा ठेट नेपाली शब्दहरूको जानकारी दिएर लेखक र पत्रकारलाई सहयोग गर्न सक्छन् ।

मेरो विचारमा यो स्तरको लेखमालालाई पत्रिकामा

क्रमशः दिनुभन्दा सिंगो पुस्तक आकारमा, पाठ्य पुस्तक वा प्रशिक्षण सामग्रीको रूपमा एकै पटक प्रकाशित गर्नु बढी राम्रो र उपयोगी हुन्छ। त्यस पुस्तकको आधारमा सरल व्याख्या गरेर बहुसंख्यक मजदुरहरूलाई दर्शनको आधारभूत ज्ञान र शिक्षितहरूलाई विशेष ज्ञान दिन प्रशिक्षण चलाउनु राम्रो हुन्छ। यस लेखमालालाई यदि पुस्तकाकारमा लैजाने हो भने निम्न कुरातिर ध्यान दिनु राम्रो हुनेछ।

● लेखमालामा दर्शनको मूलभूत प्रश्न बनेको वस्तु (शरीर) र चेतनाको सम्बन्ध बारे अनेकौं सरल, व्यावहारिक र घतलाग्दा उदाहरणहरू दिएर सजीव र आकर्षक व्याख्या प्रस्तुत गरिएको छ। त्यसैगरी चेतनाका विविध पक्ष वा अङ्गहरूबारे पनि राम्रो रूपमा विवेचन भएको छ। दर्शनका अरू विविध पक्षमा पनि यस्तै सजीवता र प्रष्टता उजिल्याउन समग्र लेखमालाको परिष्कार आवश्यक देखिन्छ।

● वस्तु र चेतनाको अन्तरको सन्दर्भमा चर्चा गर्दा (संख्या ७१ पृष्ठ २१) "मानिसभन्दा बाहिर र ऊभन्दा अलग इच्छा, अनुभूति, आकांक्षा, चेतना मानव चिन्तनको अन्य अभिव्यक्ति कहिल्यै थिएन" भनिएको छ। परम्परागत रूपमा मानवीय र अन्य प्राणीहरूको चेतना, अनुभूति आदिको गहन तुलनात्मक अध्ययन र अनुसन्धान नभएको सन्दर्भमा चेतना र अनुभूति जस्ता शब्द मानिससँग मात्र गाँसिन्थे। तर अहिले विज्ञानले विभिन्न प्राणीमा चेतनाको जुन अन्तरको गहन विश्लेषण गर्दैछ त्यस आधारमा अब चेतनाको कुरा गर्दा केवल 'मानिसभन्दा बाहिर' मात्र नभनी 'जीवजगत्भन्दा बाहिर' भन्न शुरू गर्नु सार्थक हुनेछ।

● "दर्शनको उदय वर्ग विभाजन र वर्ग स्वार्थको उत्पत्ति पछि भयो" (संख्या ६७ पृष्ठ २२) भन्ने भनाइ पनि अब मोटो सीमा निर्धारण मात्र सावित भएको छ। मानव समाजमा 'वर्गको उदयपछि दर्शनको उदय' भन्ने ठाउँमा 'वर्गको उदयपछि दर्शनको विकास' भन्नु उपयुक्त हुनेछ। किनभने नयाँ ढुङ्गे जुगदेखि फलामको जुगसम्म आउँदाको वर्ग विहीन समाजमा पनि दर्शनको उदय भइसकेको थियो भन्ने कुराको प्रष्ट प्रमाण ऋग्वेद हो। ऋग्वेदको समाज घुमन्ते जन (कविला) को समाज थियो तर त्यहाँ मानिसले दर्शन क्षेत्रका अनेकौं प्रश्नहरू अघि सारिसकेको थियो।







● लेखमालामा अध्यात्मवाद र पुरोहितवादलाई एकदमै समानार्थी शब्द जस्तो गरी प्रस्तुत गरिएको छ (संख्या ६६ पृष्ठ २०)। यसरी प्रस्तुत गर्दा दार्शनिक हलुकापन, पूर्वाग्रह अभिव्यक्त हुन्छ। निश्चय नै अधिकांश क्षेत्रमा पुरोहितवाद अध्यात्मवादकै अनुयायी हुन्छ, तर अध्यात्मवादका सबै पक्षहरूलाई पुरोहितवादले ढाकेको हुँदैन। वेदान्त दर्शनको मोक्षमार्गी ज्ञान, सिद्धान्त र कर्मकाण्डी पुरोहितवादको बीचमा ठूलो अन्तर्विरोध रहेको थियो। बुद्ध, जैन जस्ता आंशिक अध्यात्मवादी सुधारवादीहरू पनि पुरोहितवादको विरुद्ध ज्ञान र शुद्ध आचरणका पक्षपाती रहेको कुरातिर ध्यान दिनु आवश्यक छ।

● दुई विश्व दृष्टिकोणको विवेचनाको सन्दर्भमा यहाँ केवल पूँजीवाद र समाजवादका दुई पक्षको मात्र उल्लेख छ। विवेचनाको क्रममा पूँजीवादलाई सोलोडोलो रूपमै अध्यात्मवादी कित्तामा र समाजवादलाई भौतिकवादी कित्तामा राखेर वर्णन गरिएको छ। यदि युरोपमा बसेर यो लेखिएको भए केही हदसम्म ठीकै हुँदो हो। तर सामन्तवाद विरुद्ध नयाँ जनवादी वा जनताको बहुदलीय जनवादी कार्यक्रम लिएर काम गरिरहेका मजदुर किसानहरूको देशमा बसेर लेख्दा सामन्तवाद, पूँजीवाद र समाजवाद तीन वटै पक्षको उल्लेख गर्नु पर्छ। त्यसका साथै सामन्तवाद र अध्यात्मवाद, पूँजीवाद र यान्त्रिक भौतिकवाद एवं समाजवाद र द्वन्द्वात्मक भौतिकवादको समीकरणबाट विवेचना गरे मात्र हाम्रो देशका जनताले दर्शनका विरोधी पक्षहरूका साथै त्यसको विकासक्रमलाई वस्तुगत ढङ्गले राम्रोसित बुझ्न सक्छन्।

● यसै सन्दर्भमा "मार्क्सवादभन्दा पहिलेको भौतिकवाद यान्त्रिक भौतिकवाद थियो" (संख्या ६७ पृष्ठ २१) भन्दा पनि केही अन्योल देखापर्छ। आदिम समाजको भौतिकवाद प्राकृतिक भौतिकवाद थियो। त्यो यान्त्रिक भौतिकवाद थिएन। सत्रौं शताब्दी पछिको यान्त्रिक विकासले नै आधारभूतरूपमा यान्त्रिक भौतिकवादलाई अघि बढाएको कुरालाई प्रष्टचाउनु आवश्यक छ।

● लेखमालामा शुरूका अध्यायहरूमा भाषा शैली केही कमजोर देखिन्छ र पछिल्ला अध्यायहरूमा त्यसमा परिमार्जन हुँदै गएको छ। भाषामा 'व्यावहारिक, स्वाभाविक' जस्ता शब्दलाई 'व्यवहारिक, स्वभाविक' जस्ता रूपमा प्रस्तुत गरिएको छ। 'भट्कनु' को अर्थ विचलित हुनु या प्रथभ्रष्ट हुनु हो भने 'भड्कनु' मुटुको गति जस्तो सन्दर्भमा प्रयोग हुन्छ। तर यहाँ 'भड्कनु' दुवै अर्थमा प्रयोग भएको छ।

समीक्षा लेख छोटो बनाउन भनिएकोले यहाँभन्दा बढी लेख्नलाई ठाउँको अभाव छ। लेखमालालाई पुस्तकको रूप दिन आग्रह गर्दै उपयुक्त खाले सबै पक्षतिर पुनः परिकार र सम्पादन गर्न लेखकको चासो र जाँगर तीव्र रूपले जागोस् भन्ने हार्दिक कामना।

स्वयम्भू, २०५९ चैत्र ४

## श्रमिक स्तम्भमा अटाएका संघर्षका गाथा

# यहाँ पनि छन् आमा, पावेल, अस्त्रोवस्की र न्युगेन



– कुन्दन अर्याल

"गज्याङ मज्याङ गञ्जागोल
जति भित्र गयो त्यति भद्रगोल
माटोमुनि गाडिएको छ रातो हिरा
निकाल्नलाई हात बढाउँदा मैले देखें
चारैतिर छरिएका टिटानसका किटाणुहरू
तर पनि छैन परवाह
रत्तिभर छैन चिन्ता
सक्छु म मेरा साथीहरूसँग मिलेर
निकाल्न रातो हिरा"

मुकुन्द न्यौपाने वर्षौं अघि जब मुकुन्द न्यौपानेका नामले परिचित थिएनन्, त्यतिबेला पनि आफ्नो जीवनको उद्देश्य यसरी प्रष्ट पार्थे । छयालिस सालको ऐतिहासिक जनआन्दोलनले सामूहिक परिचयमा दिनरात सक्रिय भइरहेकाहरूलाई सार्वजनिक चहकमा ल्यायो । त्यसको सफलताले कैयन वेनाम सक्रिय युवाहरूलाई नाम दियो । कवितात्मक लयमा आफ्नो जीवनको उद्देश्य बताउने कवि उदय शर्मा त्यही क्रममा व्यक्तिगत परिचयका साथ देखा परे । सबैले थाहा पाए- उनी मुकुन्द न्यौपाने रहेछन् ।

श्रमिक खवरका पाठकहरूका निम्ति मुकुन्द न्यौपाने ट्रेड यूनियन महासंघका अध्यक्ष हुन् । त्यही नाताले उनी यसको सम्पादन वोर्डमा पनि रहेका छन् । तर संस्थाको मुख्य नेता भएका कारण मात्र उनी सम्पादक भएका होइनन् भन्ने प्रमाण यो पत्रिकाका हरेक अंकहरूले दिएका छन् ।

श्रमिक खवरमा प्रकाशित हुँदै आएको श्रमिक-स्तम्भमा मुकुन्द न्यौपानेले श्रमजीवीप्रतिको आफ्नो नैसर्गिक सरोकारलाई आकर्षक र प्रभावकारी रूपमा पोखेका छन् । उनले यस स्तम्भमा समेटेका श्रमपूजकहरू समाजका विशिष्ट वा अतिविशिष्टहरू होइनन् । उनीहरू अति साधारण नागरिकहरू हुन् । तर न्यौपानेका विचारमा ती सबैका कथा-व्यथा थुप्रै-थुप्रै मानिसलाई अभिप्रेरणा प्रदान गर्ने सामर्थ्य राख्दछन् ।

यस स्तम्भमा समेटिएका सबैले वास्तवमै जीवनभरको मेहनतबाट प्राप्त पाठलाई सहज रूपमा अभिव्यक्त गरेका छन् । त्यसैले देवीलाल बादेखि मोहन महतो कोइरी, मुनेश्वर चौधरी, यसोदा धिताल, मिङ्मार शेर्पा र विष्णुमाया न्यौपानेसम्मका जीवन-संघर्षका जीवन्त पात्रहरूको गाथा श्रमिक खवरका उल्लेखनीय सामग्रीहरू हुन् । न्यौपानेले सबैको विश्वास जितेका छन् । त्यही कारण सबैले हृदय खोलेर आ-आफ्नो संघर्षमय कथा बताएका छन् ।

संस्थाको प्रमुख भएर पनि कमरेड न्यौपानेले हरेक अंकमा यस्तो अन्तरवार्ता प्रस्तुत गर्न भ्याएका छन् । श्रमिक स्तम्भको महत्त्व यसको प्रस्तोताका कारण पनि बढेको छ । जीवनका अनुभूतिजन्य प्रश्नहरूको प्रस्तुतिमा मुकुन्द न्यौपानेको साहित्यिक व्यक्तित्वको छाप प्रष्टै देखिएको छ । आफ्नो जीवन्त-पात्रलाई उनले अत्यन्त प्राकृतिक र स्वाभाविक वाक्य बोलाएका छन् । यहाँनेर उनी अरुलाई सम्पूर्णतः मौलिक रूपमा पोखिन दिने कुशल अन्तरवार्ताकारका रूपमा देखिएका छन् ।

चौरान्नब्बे वर्षका देवीलाल बा उनीसँग भन्छन्- "बाबु, एक्लो भयो भने सबैले हेप्दो रहेछ । निम्छरो भयो भने सबैले हेप्दो र'छ । ...त्यसैले म सबै किसान मजदुर भाइहरूलाई भन्छु- निम्छरो नवन, एकजुट बन । तब मात्र तिम्रो मान-सम्मान बढ्नेछ ।"

मोहन महतो कोइरीले आठ सालको बारा-रौतहटको किसान आन्दोलनको विस्तारपूर्वक स्मरण गरेका छन् । दश सालमा बाराको गडहलमा बडाहाकिम दुर्गादत्तको आदेशमा आफ्ना साथी मुखलालको कसरी हत्या गरियो- उनले बताएका छन् ।

कैलालीको रिक्सा मजदुर यूनियनका तत्कालीन उपाध्यक्ष मुनेश्वर चौधरीको विचार र अनुभव पनि मुकुन्द न्यौपानेको स्तम्भमा समेटिएको छ । उनी भन्छन्-"यूनियन बनेपछि हाम्रो इज्जत बढेको छ । प्रहरीसँगको सम्बन्धमा सुधार आएको छ । प्रहरीले पनि हामीमाथि पहिले जस्तो दुर्व्यवहार गर्दैनन् । हामीलाई आफ्नो सम्मान बढेको अनुभव भएको छ ।"

जीवनका अनेक घुम्ती पार गरी ट्रेड यूनियनमा समाहित हुन पुगेका दोलखाका मिङमार शेर्पासँग न्यौपानेले पुराना कुराहरू विस्तारपूर्वक खोतलेका छन् । गलैंचा मजदुर यूनियनका महासचिव शेर्पा जीफन्टले आफूलाई आँखा देखाएको ठान्छन् । उनको भनाइ छ- "म वर्षमा दश रूपैंयाँ तलब खाने गोठालो । भारतका गल्लीमा पाँच रूपैयाँमा गिट्टी कुट्ने मान्छे, आज यति कुरा बुझ्ने भएँ । देशलाई बुझ्न सकें । अहिले यूनियनको जिम्मेवार ठाउँमा छु ।"

जीवनका उकाली ओरालीको कथा सुनाएर बुढेसकालमा विष्णुमाया न्यौपाने भन्छिन्- "श्रमको पूजा गर यसैले बचाउँछ ।"

किसान आन्दोलनमा लागेर ०२४-२५ सालमा तीन महिना जेल पर्ने बाराका खेदू साहले तीसको दशकको कठोर राजनीतिक परिवेशमा पनि कम्युनिस्ट पार्टीका सदस्यहरूलाई आश्रय दिएका थिए । एउटा गरीब कृषि मजदुर कसरी सशक्त राजनीतिक प्राणीमा परिणत भयो भन्ने कुराको वर्णन उनको जीवन केन्द्रित अन्तरवार्तामा पढ्न पाइन्छ । ०३८ सालमा उनी छ महिना जेल परेका थिए । त्यति मात्र होइन, उनी छयालिस सालको जनआन्दोलनका समेत एक जना सचेत योध्दा हुन् ।

त्रिपन्न वर्षको उमेरसम्ममा मुकुन्द न्यौपानेले जीवनका उकाली ओराली र अनेक मोडहरू पार गरिसकेका छन् । उनकै कविताको हरफ सापटी लिएर भन्दा "पालेबाट मन्त्रीसम्म पुग्दा" पनि उनी देशलाई बुझ्न यस्तै कथाहरू सुन्नु पर्छ भन्दछन् । ०३६-३७ सालदेखि उनले बेचिएका नेपालीहरू कथा मार्फत यस्ता संघर्षमय जीवन गाथाहरूलाई लिपिबध्द गर्न थालेका हुन् । त्यसक्रममा उनले गीती काव्यहरूको

---

# भूमिगत जीवनदेखि सरकारी ओहदासम्म

**(क. मुकुन्द न्यौपानेसँग २०५१ सालमा स्वीडेनका मजदुर नेता मातियस गार्डेलले लिएको अन्तर्वार्ताको मूल स्वीडिसबाट अंग्रेजीमा गरिएको रूपान्तरणको नेपाली उल्था)**

GEFONTs ordförande Mukunda Neupane är 45-årig liten korpulent man och tillhör proletariatet. Han har inget hus och ingen mark och hans barn måste bo hos hans föräldrar. Mukunda Neupane har ett långt och dramatiskt förflutet inom den underjordiska motståndsrörelsen.

Lång väg från underjorden till regeringsställning

– Intervju med Mukunda Neupane



Mattias Gardell (text) Michael Nord (foto)

उनी सगरमाथा नजिकैको कोशी अञ्चलको दुर्गम जिल्ला भोजपुरको गरीब किसान परिवारमा जन्मिएका हुन् । त्यहाँ स्कूलै थिएन, त्यसैले पढ्ने कुरा पनि भएन ।

न्यौपाने १७ वर्षका भएपछि परिवारसँगै मधेश झरे । युवा कवि पनि भएकाले गरीब, थात-वास नभएका मजदुरको गीत गाउन थाले र त्यतिखेरको विद्रोहको अंग बन्न पुगे ।

"मैले औपचारिक शिक्षा हासिल नगरेको भए पनि आन्दोलनको पक्षमा छलफल गर्ने थलो मेरो घर पनि बन्न पुग्यो ।" न्यौपाने भन्छन्- "दिउँसो हामी वेरोजगार युवाहरूलाई भेटघाट गर्थ्यौं । राती क्रान्तिकारी सिद्धान्त र विचारका बारेमा छलफल गर्थ्यौं ।"

२०२८ सालको झापा किसान विद्रोहमा न्यौपाने सामेल भए, त्यही आन्दोलन पछि गएर देशको संघर्षशील शक्तिको रूपमा विकसित भयो एमालेको रूपमा ।

"मैले थुप्रै सभाहरूमा भाग लिएँ" न्यौपाने पहिलेको घटना सम्झन्छन्- "यसपछि प्रतिक्रियावादीहरू मलाई गिरफ्तार गर्न लागि परे । म एउटा भिडन्तमा समातिएँ । सौभाग्यवस म नराम्रो सँग घाइते भएकोले अस्पतालमा भर्ती गरिएँ । प्रहरीहरूको पहरा हुँदा हुँदै अस्पतालबाटै उम्किएँ र भूमिगत भएँ ।"

**भूमिगत जिन्दगी**

छद्म भेषमा यता-उता चहार्दा-चहार्दै न्यौपाने भूमिगत सञ्जालको पनि सँगठक बने ।

"यसै समयतिर मैले मेरी श्रीमतीलाई भेटेको हुँ । उनी शिक्षिका थिइन् र यूनियन गतिविधिमा संलग्न थिइन् । हामीले बिहे गर्‍यौं । तर पहिलो सन्तान हुन्जेलसम्म सँगै सार्वजनिक ठाउँमा हिंडडुल गरेनौं ।"

"२०३० सालतिर विराटनगरमा मजदुरहरूको यूनियन बनाउने काममा पनि म संलग्न रहें । त्यो वेलाको कुरा संझँदा मलाई लाग्छ, हामीहरू असाध्यै उत्साही तथा

पनि रचना गरेका छन् ।

०५८ सालदेखि श्रमिक खबरका पाठकहरूले उनको श्रमिक स्तम्भ मार्फत यस्ता जीवन गाथाहरूसँग साक्षात्कार गर्ने मौका पाएका छन् । न्यौपाने भन्छन्- "श्रमप्रतिको निष्ठा दर्शाउने यस्ता कथाहरू मेरा जीवनका प्रेरणा स्रोत हुन् । र, म मेरा अनुभूतिसहित उनीहरूको भावना सबैका बीच बाँड्न चाहन्छु ।"

मजदुर नेता न्यौपाने भन्छन्- "समाजमा यस्ता जीवन्त पात्रहरू छन्, जसको कहानी हाम्रो लेखनीको विषयवस्तु बन्नु पर्छ । आमा, पावेल, निकोलाई अस्त्रोवस्की, हार्वड फास्ट वा न्युगेन वान ट्राई । आफ्नो भूमिकाले समाजलाई अग्रगति प्रदान गर्ने यस्ता नेपाली कर्मयोगीहरू हामी वरिपरि नै छन् । उनीहरूका बारेमा बताउन यो स्तम्भ शुरू गरिएको हो ।"

न्यौपानेका सजीव पात्रहरू कुनै विश्वविद्यालयको डिग्री हासिल नगरेको भए पनि जीवनका जटिलताहरू फुकाउन सफल छन् । चुनौतीहरूबाट उनीहरू भागेका छैनन् । उनीहरू सामाजिक काममा तल्लिन छन् । स्वयं प्रशिक्षित छन् । आफ्नो कर्मयोगद्वारा आफू वरिपरिका मानिसलाई उत्प्रेरित गरिरहेका छन् ।

लेखक-साहित्यकार मुकुन्द न्यौपानेले श्रमिक खबरको एक पत्रकारको भूमिका निर्वाह गर्दै उनीहरूलाई प्रकाशमा ल्याउने उद्देश्य राखेका छन् । यस्तै उद्देश्यका साथ उनले श्रमका उपासकहरूलाई प्रस्तुत गर्दै आएका छन् । यो स्तम्भले ट्रेड यूनियन आन्दोलनका एक शीर्षस्थ व्यक्तित्वको तृणमूलका आममानिसप्रतिको चासोलाई साँच्चै नै झल्काएको छ । त्यसैले श्रमिक खबरको श्रमिक स्तम्भ प्रेरणाको थलोका अतिरिक्त नेपाल ट्रेड यूनियन महासंघ-जिफन्टका निम्ति अन्तिम पंक्तिका श्रमजीवीहरूको स्थितिसूचक पनि हो ।

---

आशावादी थियौं ।"

"पुलिसलाई हामी सजिलै छक्याउँथ्यौं । तर आन्दोलनको क्रममा जेलबाहिर शुरूका आन्दोलनकारीहरूमध्ये हामी आठ जना जति मात्रै बाँकी रह्यौं । "फेरि भेटौंला है" भन्दै हामी देशभरि छरियौं ।"

न्यौपानेले त्यसपछिका दुई वर्ष एउटा जमिन्दारकोमा हलो जोत्दै संगठन गर्न थाले । त्यसपछि मात्रै फेरि विराटनगर र तराईका अरु भागमा यूनियन बनाउन जाने स्थिति बन्यो ।

"यस पटक हामीले तुरुन्तै कुनै माग राखेनौं । दमनको प्रतिरोध गर्न सक्ने शक्ति सुदृढ गर्ने रणनीतिमा लाग्दै संगठनको काम थालियो ।"

२०३६ सालमा नेपाल स्वतन्त्र मजदुर यूनियन स्थापना भयो । लामो समय पछि राष्ट्रिय स्तरमा बनेको संगठन यही नै थियो । भूमिगत र गोप्य रूपमा प्रचार अभियान थालियो । मुख्य रूपमा औद्योगिक क्षेत्र, यातायात, होटेल, ट्रेकिङ जस्ता क्षेत्रका श्रमिकलाई यो यूनियनको वरिपरि गोलबन्द गर्न थालियो ।

दश वर्ष पछि २०४६ साल साउन ५ गते एउटा समय आयो । यस अवधिमा बनेका ४ वटा संघहरूलाई मिलाएर जिफन्ट बनाइयो । जिफन्ट वृहद राजनीतिक आन्दोलनको अंग बन्यो । र, त्यसले राजाको निरंकुशता विरुद्ध र पंचायती व्यवस्थाको ठाउँमा संसदीय प्रजातन्त्र स्थापनामा आफूलाई पनि संलग्न गऱ्यो ।

**प्रजातान्त्रिक आन्दोलन**

"आन्दोलन फैलिँदै जाँदा, सत्ताधारीहरूले व्यापक दमन शुरू गरे" न्यौपाने सम्झन्छन्- "सयौं नेता/कार्यकर्ताको नाममा हत्या जस्तो अपराधिक आरोपमा पूर्जी काटियो । यद्यपि जनआन्दोलन थामिएन । जिफन्ट स्थापनाको एक वर्ष नबित्दै देशमा प्रजातन्त्र आयो, पंचायत ढल्यो ।"

२०४६ सालको चैतको अन्त्यदेखि न्यौपानेसँगै भूमिगत भएका थुप्रै नेताहरू सार्वजनिक भए । प्रजातन्त्रसँगै सार्वजनिक भएर उनी पनि यूनियन आन्दोलनलाई सुदृढ गर्न राष्ट्रव्यापि अभियानमा जुटे ।

२०४८ सालको पहिलो आम निर्वाचनमा न्यौपाने एमालेको तर्फबाट सांसद चुनिए । कुनै समय पुलिससँग लुकीछिपी हिंड्नु पर्ने न्यौपाने २०५१ सालको मंसीरसम्म आइपुग्दा सरकार सञ्चालन गर्ने उच्च तहमा पुगे ।

"यस्तो दोहोरो भूमिकामा रहँदा अप्ठ्यारो लाग्दैन ?" मैले सोधें- "एकातिर तपाई यूनियनको अध्यक्ष हुनुहुन्छ, अर्कोतिर सत्ताधारी पार्टीको नेता । मजदुरका स्वार्थसँग नमिल्ने कुरा आएमा के गर्नु हुन्छ?"

"संसदमा म मजदुरहरूकै प्रतिनिधि हुँ" न्यौपानेले भने- "मलाई थाहा छ मेरो धर्ती कुन हो । यूनियन र मजदुरका माग पूरा गर्नै पर्छ । यदि सरकारी नीति मजदुर- विरोधी भए, म मजदुरको पक्षमा हुनेछु । यदि नीति श्रमिकका पक्षमा रहे, मजदुर हितका लागि सत्ताको संचालनमा सहभागी हुनेछु ।"

न्यौपानेले आशावादी हुँदै आफूले के सुधार चाहेको हो बताए- "श्रम बजार नियमित गरिनु पर्छ, जसले गर्दा श्रमिकका आधारभूत अधिकार कानुनद्वारा निश्चित गर्न सकियोस् । कार्य घन्टा निश्चित गर्ने, न्यूनतम ज्याला लागू गर्ने, स्वास्थ्य बीमा र भूमिसुधार लागू गर्ने आदि-आदि ।"

यी उद्देश्यले ठोस कामको संकेत गरेको छ- समाजवादी सैद्धान्तिक आदर्श मात्र होइन । एमाले र जिफन्ट दुवै अहिले सर्वहारा वा कुनै पनि प्रकृतिको तानाशाहीको पक्षपोषण गर्ने विचारमा होइन, जनताको अधिकार अभिवृद्धि गर्ने खालको बहुलवाद र प्रजातन्त्रको पक्षमा उभिएको देखिन्छ ।

"पहिलो चरणमा सामन्तवादलाई ढाल्न बुर्जुवासँग हामीले सहकार्य गर्नै पर्छ ।" न्यौपाने भन्छन्- "हामी अहिले सामन्तको कब्जामा रहेको असीमित जग्गामा जनताको हक स्थापित गर्न चाहन्छौं । बहुसंख्यामा रहेका भूमिहीनहरूको आफ्नो जग्गा हुनै पर्छ । सामन्तका नाइकेहरूले अब आफ्ना दिन गए भनेर बुझ्नै पर्छ । यदि उनीहरू आधुनिक बन्न चाहन्छन् भने तिनीहरूले आफ्नो जग्गालाई पूँजीमा रूपान्तरण गरी उद्योगधन्धा शुरू गर्नु पर्छ ।"

"समाजको रूपान्तरण राता-रात हुँदैन" न्यौपानेले आफ्ना कुरा टुंग्याउँदै भने- "अलि अलि गर्दै, चरणबद्ध रूपमा हामी हाम्रो सपना पूरा गर्नेछौं र आफ्नो जीवनको मालिक आफैं हुनेछौं ।"

**प्रस्तुतीः विष्णु रिमाल**

**बाह्र वर्षको अथक प्रयास** - श्रम कानुनदेखि लिएर श्रम बजारको बदलिंदो स्थिति, क्रान्तिकारी भूमिसुधार, ट्रेड यूनियनका विभिन्न मुद्दाहरू, "श्रमिक" को जीवनीलाई प्रतिविम्वित गर्ने लेखहरू, राष्ट्रिय-अन्तरराष्ट्रिय मजदुर आन्दोलनसँग सम्बन्धित विषयहरूको चर्चा-विवेचना र विशेष गरी मजदुर आन्दोलनमा महिला सहभागिता र जेण्डर समानताका विविध पक्षहरूलाई सबैले बुझ्ने गरी सरल भाषामा, प्रभावकारी ढंगले अत्यन्त महत्त्वपूर्ण विषयलाई निरन्तर रूपले प्रकाशनमा ल्याई आज ७५ औं अङ्कमा प्रवेश गर्न गएको "श्रमिक खवर" प्रकाशन साथै प्रकाशक नेपाल ट्रेड यूनियन महासंघलाई मेरो हार्दिक बधाइ र शुभकामना।

गत तीन-चार वर्षदेखि समय-सयममा यस प्रकाशनलाई पढ्ने मौका पाएको छु। यसमा छापिएका लेखहरूको सूचनामूलक विषयवस्तु र विश्लेषणात्मक स्तरबाट धेरै नै प्रभावित छु। अझ आफ्नो विषय त जेण्डर र महिला सशक्तीकरण भएको हुनाले यस विषयप्रति श्रमिक खवरको

# श्रमिक खवरमा जेण्डर विषय

डा. ज्योती तुलाधर, बरिष्ठ जेण्डर तथा महिला विशेषज्ञ, आइएलओ, नयाँ दिल्ली



दृष्टिकोण र विश्लेषणात्मक प्रस्तुतिमा विशेष रुचि राख्दै आएको छु। ७५ औं अङ्क प्रकाशनको यस उपलक्ष्यमा आफूलाई दुई शब्द कोर्ने मौका दिनुभएकोमा प्रकाशकप्रति आभार पनि व्यक्त गर्न चाहन्छु।

**राम्रो लागेका पक्षहरू**

क) जेण्डर असमानताप्रतिको मूलभूत सोचाइ र प्रस्तुति अति नै गहन र सह्राहनीय पाएँ। ६१ अङ्कमा किटेर लेखिएको छ, "महिला आन्दोलन पुरुष विरुद्ध होइन, पितृसत्ता विरुद्ध हो", "पितृसत्ता भनेको प्रवृत्ति हो, यो मानिसको व्यवहारबाट अभिव्यक्त हुन्छ, त्यसैले पितृसत्तात्मक सोच र प्रवृत्ति पुरुषमा मात्र होइन, महिलामा पनि रहेको हुन्छ।" जेण्डर समानता भनेको के हो भन्ने मूलभूत कुरामा अल्मलिएर बसेका पाठक वर्गलाई यस्ता संवादले वास्तविकता छर्लङ्ग बुझाउँछ। साथै यस विषयमा ट्रेड यूनियनको चुनौती के हो, कुन दिशामा कदम चलाउनु पर्ने रहेछ, महिला र पुरुषमा भएका विभेदलाई बुझी महिला नेतृत्व बढाउनु पर्ने कारण के रहेछ - यस्ता महत्त्वपूर्ण कुराहरूलाई स्पष्ट पार्दै यस्ता गहकिलो संवाद जनसमक्ष समग्र रूपले पुगेमा जेण्डर समानताको अभियानमा सघाउ पुऱ्याउने सम्भावना अझ बढ्दछ। श्रमिक खवरले यस क्षेत्रमा आफ्नो जिम्मेवारी अति नै चित्त बुझ्दो गरी बहन गरेको मैले पाएँ।

ख) जेण्डर विषयमा यस प्रकाशनको प्रस्तुति र जल्दोबल्दो विषयहरूको पहिचान पनि समयानुकूल र अति अर्थपूर्ण पाएँ। यस्ता विषयवस्तु छानिएका छन् जसका छाप जनमानसमा सशक्त रूपले पर्नु पर्दछ - जस्तै "मुलुकी ऐनको एघारौं संशोधनबाट नेपाली महिलाहरूले पाएको अधिकार" (गम्भीर विषयवस्तुलाई क्रमबद्ध रूपमा सजिलोसँग बुझ्ने गरी सरल भाषामा तर विश्लेषणात्मक ढंगबाट प्रस्तुति), "प्रजनन स्वास्थ्य र कार्यथलो" ( समसामयिक र मनन गर्नु पर्ने कुरा), "सामाजिक सुरक्षा" बारे जानकारी, "जेण्डर समानताको विषयमा युरोपियन ट्रेड यूनियन महासंघ" (सूचनामूलक र तुलनात्मक), इत्यादि।

ग) हृदयस्पर्सी, प्रेरणादायक र रोचक महिला 'अनुकरणीय महिला' को जीवन गाथाको प्रस्तुति उत्साहजनक र उदाहरणीय छ।

घ) चित्र कथा गतिशील र रोचक छ। चित्रकथाहरू "महिलालाई काम पाउन गाह्रो छ।" "ज्याला", "बालश्रम" "कमैया" को संघर्ष, सूचनामूलक, आलोचनात्मक, विचार उत्तजेक र विश्लेषणात्मक छ साथै यसका भाषा र संवाद सटिक तथा प्रभावशाली बोलीचाली शैलीमा छ।

ङ) महिला मजदुर, महिला सहभागिता र विकासका साथै जेण्डर समानता सम्बन्धी कार्यक्रमहरूको जानकारी, टुक-गेपका मुद्दाहरूको विस्तृत विवरण, महिला विषयमा पाठ्य सामग्री, अनुसन्धान पुस्तक र सूचना सामग्रीको जानकारी - यी सबै कुराहरू पनि समावेश गरिएकोले "श्रमिक खवर" अझ सशक्त साधन भएको पाएँ।

**अझ प्रभावकारी बनाउनको लागि सुझावहरू**

- जल्दो बल्दो विषयवस्तुहरू बढाउने, जस्तै -
  - अनौपचारिक अर्थतन्त्र र जेण्डर गतिशीलता (डाइनामिक्स)
  - विश्वव्यापीकरण र महिलामा यसको प्रभाव
  - विभेद र महिलामा यसले पारेको प्रभाव
  - आइएलओका जेण्डर सम्बन्धी अभिसन्धिहरू
  - जेण्डर समानता सम्बन्धी धारणागत विश्लेषण
- पाठक प्रतिक्रियामा महिला पाठकहरूको संख्यामा वृद्धि गर्ने, महिलाको आवाज सुनौं।
- "महिलाको अवाज" ... चार अङ्कमा मात्र सीमित भएको।
- "महिला विशेष" लेखहरूका अतिरिक्त अरु लेखहरूमा पनि जेण्डर मूलप्रवाह गर्ने र तुलनात्मक सूचनाहरू समावेश गर्ने।



# बाह्र वर्षमा के भयो
## हाम्रो श्रमको संसारमा ?

**विष्णु रिमाल**

यो संयोग थिएन, प्रजातान्त्रिक वातावरणले उपलब्ध गराएको अवसर थियो । त्यसैले श्रमिक खवर प्रकाशनको आयु २०४६ सालको जनआन्दोलनले स्थापित गरेको बहुदलीय व्यवस्था जत्तिकै हुनपुग्यो । अहिलेको आर्थिक, सामाजिक र राजनीतिक माहोलमा श्रमको संसार अर्थात् हाम्रो श्रम बजारमा के परिवर्तन भयो ? यसबारे विविध क्षेत्रका व्यक्तित्वहरूको विचार श्रमिक खवरका पाठकहरूसामु प्रस्तुत गर्ने उद्देश्यले हामी सबैलाई उही प्रश्न सोधेका थियौं ।

- बाह्र वर्षमा हाम्रो श्रम बजारमा के भयो, के भएन? के हुनै पर्थ्यो, के गर्नै हुँदैन थियो ?
- ट्रेड यूनियनहरूले के गर्नु पर्थ्यो ? के गर्नै हुँदैन थियो ?
- रोजगारदाताहरू र सरकारले के गर्नु पर्थ्यो, के गर्नु हुँदैन थियो ?
- राजनीतिक पार्टीहरूले के गर्नु पर्थ्यो, के गर्नु हुँदैन थियो ?
- केका लागि ट्रेड यूनियनहरूलाई जस दिनुहुन्छ ?
- कुन कमी-कमजोरीका लागि यूनियनलाई आलोचना गर्नु हुन्छ ?
- र, श्रमिक खवरको प्रकाशक नेपाल ट्रेड यूनियन महासंघलाई तपाईं कसरी मूल्यांकन गर्न चाहनु हुन्छ ?

यो अग्रलेखसँगै हाम्रो अनुरोध स्वीकार्नु हुने महोदयहरूको विचार प्रस्तुत गरिएको छ ।

## १२ वर्षमा के भयो : एक झलक

| | | |
|---|---|---|
| २०४६ : | साउन ५ गते (२० जुलाई १९८९) | नेपाल ट्रेड यूनियन महासंघ स्थापना |
| २०४७ : | जेठ | नेपाल ट्रेड यूनियन कांग्रेस स्थापना |
| : | जेठ १४ | पहिलो पटक राष्ट्रिय श्रम सल्लाहकार समिति गठन, जिफन्टको प्रतिनिधित्व |
| : | असार | आई एल ओ को अन्तरराष्ट्रिय सम्मेलनमा नेपाली ट्रेड यूनियनको पहिलो पटक प्रतिनिधित्व |
| : | असार | महिला मजदुर र ट्रेड यूनियन आन्दोलनबारे पहिलो राष्ट्रिय कार्यशाला |
| : | साउन २९ | बहुदलीय व्यवस्थाको स्थापनापछि पहिलो पटक न्यूनतम वेतन निर्धारण |
| : | भदौ | श्रमिक खवरको प्रकाशन थालनी |




| | | |
|---|---|---|
| २०४८ : | भदौ ५ | नेपाल ट्रेड यूनियन महासंघद्वारा अध्यक्ष मुकुन्द न्यौपाने मार्फत श्रम सम्वन्धी ३ वटा पहिलो गैरसरकारी विधेयक संसदमा दर्ता |
| : | भदौ | ओरकर्स न्युज को प्रकाशन शुरू |
| : | असोज ४ | जिफन्ट अध्यक्षद्वारा प्रस्तुत विधेयक खारेज |
| : | फागुन ९ | सरकारद्वारा श्रम विधेयक-०४८ संसदमा दर्ता |
| : | फागुन २२ | छलफलको लागि सदनमा पेश |
| : | फागुन २९ | प्रतिनिधि सभाबाट संशोधन सहित श्रम ऐन-०४८ पारित |
| : | चैत्र १५-१८ | नेपाल ट्रेड यूनियन महासंघको प्रथम राष्ट्रिय महाधिवेशन |



| | | |
|---|---|---|
| २०४९ : | जेठ २ | श्रम ऐन-०४८ जारी |
| : | जेठ ७ | बालबालिका सम्वन्धी ऐन २०४८ जारी |
| : | कात्तिक २१ | बोनस ऐन-०३० चौथो संशोधन |
| : | मंसिर ११ | ट्रेड यूनियन ऐन-०४९ जारी |
| : | पौष २२ | सवारी तथा यातयात व्यावस्था सम्वन्धी ऐन- ०४९ जारी |
| : | फागुन | जिफन्टको केन्द्रीय महिला मजदुर विभाग गठन |
| २०५० : | जेठ २० | वैदेशिक रोजगार ऐन-०४२ पहिलो संशोधन |
| : | असार | जिफन्टद्वारा ट्रेड यूनियन शिक्षा (ट्रयु-क्याम्पेन) को थालनी |
| : | असार | जिफन्ट स्रोत केन्द्र स्थापना |
| : | भाद्र ९ | सवारी तथा यातयात व्यवस्था सम्बन्धी ऐन-०४९, पहिलो संशोधन |
| : | कात्तिक २३ | चिया वगान सम्वन्धी श्रम नियामवली २०५० जारी |
| : | कात्तिक २३ | श्रम नियमावलि-०५० जारी |
| : | मंसिर १४ | ट्रेड यूनियन नियमावली-०५० जारी |

बहुदलीय संसदीय प्रजातान्त्रिक व्यवस्था स्थापनाको बाह्र वर्ष बितेको छ। बहुदलको स्थापनासँगै 'श्रमिकद्वारा-श्रमिकहरूका लागि' प्रकाशित गर्दै आएको श्रमिक खवरले ७४ औं प्रयत्न पूरा गरी यो हिरक अंकमा प्रवेश गरेको छ। हिरक अंकको प्रकाशनका क्रममा 'श्रमको संसारमा' यो बाह्र वर्षमा के भयो भन्ने सामान्य आंकलन गर्ने प्रयत्न गरिएको छ।

**श्रम बजार**

राजनीतिक क्षेत्रमा बहुलताले प्रवेश पाउनासाथ विश्वव्यापी रूपमा आइरहेको 'आर्थिक उदारीकरण' को प्रक्रियाले नेपाली श्रम क्षेत्रलाई पनि प्रभावित गऱ्यो। राज्यको आर्थिक तथा औद्योगिक नीतिमा भएको उदारीकरणले पूँजीको विश्वव्यापीकरण प्रक्रियालाई नेपालमा प्रवेश गरायो। यसले प्रतिस्पर्धा र खुल्लापनको अवसर दिए तापनि धेरै नकारात्मक असर सृजना गऱ्यो। श्रमिकले ठ्याक्कै अनुभूति गर्ने असर भनेको सार्वजनिक संस्थानको निजीकरण र ठूलो संख्यामा श्रमिकलाई कामबाट हटाउने कार्य हो। मिश्रित अर्थ व्यवस्थाको जमानामा लागू गरिएको स्थायी काम, जनताको हितमा राज्यबाट दिइने अनुदान जस्ता श्रमिक पक्षीय केही व्यवस्था भताभुङ्ग भयो। काम हुँदा काम लगाउने, काम नहुँदा रोजगारीबाट बिना मुलाहिजा गलहत्याउने, आजभोलि रोजगारदाताले भन्ने गरेको हायर-एण्ड-फायरको कुनीतिले प्रश्रय पायो। धेरै काम थोरै श्रमिक हुँदा चर्को ज्यालामा काम लगाउने, थोरै काम - धेरै जगेडा श्रमिक हुँदा ज्यालामा 'घटाघट' गराई श्रमिकलाई 'बजारको वस्तु' सरहको व्यवहार गर्ने नराम्रो चलन शुरू गरियो। त्यति मात्र होइन, वर्षौंदेखि सञ्चालित कलकारखाना र उद्योगधन्धाले समेत अन्य वस्तुमा बढेको लागतलाई बराबरी गर्न श्रमिकले नियमानुसार पाउने सुविधा कटाई श्रम लागत घटाउन करारमा श्रम गराउने ठेकेदारी प्रथा थोपरियो।

नेपालको परम्परागत रोजगारी भनेकै कृषि आधारित हो। बाह्र वर्षको एउटा महत्त्वपूर्ण परिवर्तन भनेको कृषि क्षेत्र ओरालो लाग्ने र गैर कृषि क्षेत्र उकालो लाग्ने प्रवृत्ति पनि हो। कृषिमा रहेको स्वरोजगारी श्रमिकको संख्या ९० को दशकमा आउँदा घट्यो। ज्यालादारी श्रम ह्वात्तै बढेर गयो। तर अर्कातिर रोजगारीको अवसर भने एकदमै साँघुरिदै गयो।

उदारीकरणलाई नै दोष दिने ठाउँ छ, अनियन्त्रित रूपमा हाम्रो बजारमा प्रवेश गरेको विदेशी वस्तुको कारण स्वदेशी उद्योग सुक्न थाल्यो। सबैभन्दा ठूलो मार परेको स्वदेशी कपडा उद्योग यसको जिउँदो प्रमाण हो। तथ्याङ्क केलाउने हो भने २०४७ सालमा सालाखाला एक प्रतिष्ठानले १३५ जना श्रमिकलाई काम दिने नेपाली उद्योगहरू अहिले ९० जना जतिलाई मात्र काम दिन सक्षम छन्। यसको परिणति भनेको ठूलो संख्याको बेरोजगारी हो। तथ्याङ्कको भाषा बोल्ने हो भने सयमा ५ जना पूरा वेरोजगार र सयमा

४५ जना आधा काम पाउने श्रमिक हाम्रो देशमा छन्। एकातिर उद्योग बन्द हुने क्रम बढ्नु अर्कातिर वर्षेनी तीन लाखभन्दा बढीको संख्यामा नयाँ अनुहार कामको खोजीमा श्रमको संसारमा प्रवेश गर्नुले हाम्रो श्रम बजार र रोजगारीको स्थिति कति पेचिलो रहेको छ भन्ने सहजै अन्दाज गर्न सकिन्छ।

उदारीकरण र पूँजीको विश्वव्यापीकरणले 'श्रमको संसारमा' धेरै सीप जान्ने श्रमिकको माग बढ्यो। तर नीति निर्माणको तहमा रहेका राज्य संचालकहरूको भने नेपाली श्रमिकको त्यस्तो सीप बढाउने दिशातर्फ ध्यानै गएन। यसको नतिजाको रूपमा एकातिर बेरोजगारको डरलाग्दो भीड र अर्कातिर सीप जान्ने श्रमिकको ठूलो अभाव यस अवधिमा रहिरह्यो।

उदारीकरणले 'सस्तो र आवाज हीन' श्रमिकलाई प्रश्रय दिने शोषणमुखी नीति अँगाल्यो। त्यसले गर्दा एकातिर नेपालको काम विदेशीले पाउने र नेपालीले चाहिँ काम खोज्न विदेशिनु पर्ने नयाँ बाध्यता सृजना भयो। २०५० सालमा चार हजारको हाराहारीमा मात्र रहेका नेपालीहरू ०५९ सालमा सवालाखको संख्यामा विदेशमा काम गरिरहेको श्रम विभागको तथ्याङ्कले यो समस्या कति जटिल छ भन्ने बुझ्न गाह्रो पर्दैन।

**ज्यालाको अवस्था**

आठ घन्टा काम-आठ घन्टा आराम-आठ घन्टा मनोरञ्जन अर्थात् "तीन आठ" ले के पनि संकेत गर्छ भने, एउटा श्रमिकको आठ घन्टाको कमाइबाट जीवन साथी सहित दुई जना सन्तानलाई भरपोषण, आराम र मनोरञ्जन गर्न पुग्नु पर्छ। तर संसदीय प्रजातन्त्र पछिको "ज्याला प्रणाली" पनि 'मर्यादित जीवनतिर' नभएर 'गरिबीतिरै' सोझियो। दिनभरी कमाउने- बेलुका खाने र भोलिको गुजारा टार्न भोलि नै काममा जोतिनु पर्ने नियति नेपाली श्रमिकको रह्यो। रिति-रिवाज र सामाजिक कार्य जस्ता कुनै पनि कामको लागि ऋण काढ्नै पर्ने र बन्धक बस्नै पर्ने परिस्थितिमा खासै परिवर्तन आएन।

राज्य नवउदारतावादी बाटोमा लम्कियो, जसले नागरिकलाई, नागरिक हैन ग्राहक ठान्यो। धनीले होइन, गरीबले राज्यलाई तिरेको करले धनीको आवश्यकता पूरा गर्ने किसिमको नीति राज्यले अँगाल्यो। यसको परिणामस्वरूप निजामती सेवा वेकम्मा हुनपुग्यो। सार्वजनिक संस्थान अव्यवस्थाको शिकार भयो। निजी क्षेत्र असाध्यै कम ज्यालामा श्रमिकको श्रमको शोषण गर्ने प्रवृत्तिबाट प्रभावित हुन पुग्यो। यसले बहुदलको झण्डै आधा अवधि त हिंसा-हत्याको कुचक्रमा पिसिन पुग्यो।

औद्योगिक सम्बन्धको सन्दर्भमा भने उल्लेखनीय रूपान्तरण हुन गएको हामी महसुस गर्न सक्छौं। १० वर्ष अघिसम्म 'व्यवसायी र श्रमिक - बाघ र बाखा' को मनस्थितिमा श्रमिक जगत थियो। त्यसैले श्रमिकहरू आफ्ना असन्तुष्टि आकस्मिक कार्वाही (स्वतस्फूर्त हडताल वा

: फागुन ११-१३ नेपाल ट्रेड यूनियन कांग्रेसको प्रथम राष्ट्रिय अधिवेशन
२०५१ : फागुन न्यूनतम वेतनको पुनरावलोकन (भत्तामा रु. ३००/- थप)
: असार फ्रेडरिक नौमन फाउण्डेशनको संलग्नतामा नेपाल उद्योग बाणिज्य महासंघ भित्र औद्योगिक सम्बन्ध मंच स्थापना
: असार जिफन्टको आकष्मिक कोष परियोजना शुरू
: मंसीर २४-२७ जिफन्टद्वारा अन्तरराष्ट्रिय ट्रेड यूनियन सम्मेलन आयोजना



: माघ २ बालबालिका सम्बन्धी नियमावली २०५१ जारी
: फागुन २९ श्रमजीवी पत्रकार सम्बन्धी ऐन २०५१ जारी
: फागुन ८ मार्चमा संस्थान र सरकारी कार्यालयका महिला कामदार कर्मचारीलाई तलवी छुट्टीको घोषणा
: चैत (मार्च २१, १९९५) नेपालबाट आई.एल.ओ.को त्रिपक्षीयता सम्बन्धी अभिसन्धि नं १४४ पारित
२०५२ : जेठ ३ देशको पहिलो महासंघको रूपमा जिफन्ट दर्ता



: जेठ अन्तरराष्ट्रिय श्रम संगठनको बालश्रम निर्मूलन परियोजना (आइपेक) को राष्ट्रिय स्टेरिङ्ग कमिटी गठन, त्यसमा ट्रेड यूनियनहरूको प्रतिनिधित्व
: माघ १०-१३ कमैया मुक्ति मंच गठन र जिफन्टमा आबद्ध
: असार (जुन ३-१९) आई एल ओ को अन्तरराष्ट्रिय सम्मेलनमा जिफन्टको पहिलो पटक प्रतिनिधित्व
: असोज १ राष्ट्रिय श्रम प्रतिष्ठान-नेपाल गठन
: कात्तिक (नोभेम्बर २) फ्रेडरिक एवर्ट फाउण्डेशनको नेपालमा कार्यालय स्थापना




: मंसीर ४ बाल कल्याण समिति गठन
: पुस १८ श्रम अदालत कार्यविधि नियमावली २०५२ जारी
: पुस १८ श्रम अदालत गठन
: फागुन ९ नेपाल ट्रेड यूनियन कांग्रेस दोस्रो महासंघको रूपमा दर्ता
: चैत २ – ६ जिफन्टको दोस्रो राष्ट्रिय महाधिवेशन
२०५३ : असोज (अक्टोबर ४, १९९६) नेपालबाट आई.एल.ओ. को संगठन स्वतन्त्रता र

सामूहिक सौदावाजी सम्बन्धी अभिसन्धि नं ९८ पारित
: असोज (अक्टोबर ४, १९९६) नेपालबाट आई.एल.ओ. को बालश्रम सम्बन्धी अभिसन्धि नं १३८ पारित
: पुस ८ श्रमजीवी पत्रकार सम्बन्धी नियमावली २०५३ जारी
: फागुन २८-२९ नेपाल ट्रेड यूनियन कांग्रेसको विशेष राष्ट्रिय अधिवेशन
: चैत श्रम ऐन-०४८ बमोजिम राष्ट्रिय श्रम सल्लाहकार समिति गठन
: चैत न्यूनतम वेतन निर्धारण समिति गठन




२०५४ : वैशाख नेपाल ट्रेड यूनियन कांग्रेसमा विभाजन
: असार १२ सवारी नियमावली २०५४ जारी
: साउन २९ तेस्रो महासंघको रूपमा डिकोण्ट दर्ता
: असोज १ न्यूनतम वेतनको पुनरावलोकन
: मंसिर ८-१० प्रथम राष्ट्रिय श्रम सम्मेलन
: माघ १५ श्रम ऐन-०४८ को पहिलो संशोधन




: माघ १५ वैदेशिक रोजगार ऐन-०४२ को दोस्रो संशोधन
: फागुन ११-१३ ट्रेड यूनियन कांग्रेसको दोस्रो राष्ट्रिय अधिवेशन
: चैत्र १७ ट्रेड यूनियन ऐन-०४९ पहिलो संसोधन
२०५६ : असार ३१-साउन १ जिफन्टको आयोजनामा समसामयिक विषयमा उच्चस्तरीय परिसंवाद कार्यक्रम




: साउन ५ जिफन्टको १० औं वार्षिकोत्सव कार्यक्रम आयोजना
: मंसीर राष्ट्रिय श्रम नीति जारी
: पुस २९ कृषि मजदुरहरूको न्यूनतम ज्याला निर्धारण
: पुस २- ४ भारतको नयाँ दिल्लीमा जिफन्टबाट प्रवासी नेपाली मजदुर सम्बन्धी कार्याशाला आयोजना
: माघ १६ वोनस (पहिलो संशोधन) नियमाली २०५६ जारी
: माघ १६ राष्ट्रिय कल्याणकारी कोष गठन
२०५७ : वैशाख १३ न्यूनतम वेतनको पुनरावलोकन (३१६ वृद्धि)

वाइल्ड क्याट स्ट्राइक) बाट पोख्ये । अहिले हिजोका 'बाघ' हरूलाई सामाजिक सहयात्री मान्न श्रमिक वर्ग भित्रै देखि तयार भएको छ । आकस्मिक हडताल जस्ता 'श्रम कार्वाही' लाई कानुनी संघर्षको घेरामा बाँधियो । दवाव-हिंसा-द्वन्द्वको साटो श्रम विवाद अब संवाद-वादविवाद-सहमति हुँदै अपेक्षित उपलब्धि प्राप्त गर्ने तहमा पुगिसक्यो । अनावश्यक बलिदानबाट श्रमिक आन्दोलनको गौरवगाथा गाउनुको साटो सहमतिबाट उपलब्धि प्राप्त गर्ने व्यवहारिक बाटोमा श्रमिक आन्दोलन अघि बढ्यो ।

तर यी उपलब्धि कसैको दयामा वा क्रमिक सुधारको स्वाभाविक प्रक्रियाबाट प्राप्त भएको भने किमार्थ होइन । 'सेवा, उद्योग र कृषि' तीनै क्षेत्रमा रहेका श्रमिकहरूले गरेका ठूल-ठूला श्रमिक आन्दोलनलाई यस प्रसँगमा उल्लेख गर्न सकिन्छ । तिनीहरूमा यातायातको सवारी ऐन सम्बन्धी राष्ट्रव्यापी हडताल, निजामती कर्मचारीहरूको हडताल, होटल क्षेत्रको १० प्रतिशत सेवा शुल्कको लागि भएको आन्दोलन, कार्पेट मजदुरहरूको ३१ सूत्रीय माग आन्दोलन, गार्मेन्ट मजदुरहरूको ज्याला वृद्धि आन्दोलन, जुट मीलका मजदुरहरूको आन्दोलन, संस्थानका ५० हजार श्रमिकहरूको संघर्ष, शिक्षक आन्दोलन आदिलाई प्रतिनिधि उदाहरणको रूपमा लिन सकिन्छ ।

बाह्र वर्षको बीचमा गणनायोग्य उपलब्धि पनि श्रमको संसारमा भएको छ । यी उपलब्धिलाई औद्योगिक सम्बन्धका माध्यम (टुल्स) पनि भन्न सकिन्छ । यस बीचमा श्रम संगठनहरूको संस्थागत विकास, कानुन, प्रजातान्त्रिक अधिकार र विकसित भएका प्रजातान्त्रिक संस्थाहरू, शिक्षा, तालिम, श्रम सम्बन्धी मनग्गे प्रकाशन र अनुभवको व्यापक आदान-प्रदान, राष्ट्रिय तथा अन्तरराष्ट्रिय संयन्त्रहरूमा श्रमिकको बढ्दो सहभागिता, नीतिगत तहमा हस्क्षेप गर्ने क्षमताको वृद्धि र प्राप्त अवसरलाई यो अवधिका उपलब्धिको रूपमा गर्वका साथ उल्लेख गर्न सकिन्छ ।

विवाद, दंगा-फसाद, अस्वस्थ प्रतिस्पर्धा र विभाजनको कुचक्रलाई सक्दो निस्तेज पार्दै सामाजिक सहयात्री बीच अनेकतामा एकताको खोजी गर्ने प्रयत्न यो अवधिको प्रशंसनीय उपलब्धि हो । ट्रेड यूनियनहरूको बालश्रम निवारण सम्बन्धी धुलिखेल घोषणा, तीन ट्रेड यूनियनहरू बीच प्राथमिकताको साझा अवधारणा, जेण्डर प्रवर्धन र समानताको साझा संयन्त्र, एकल यूनियन निर्माणको लागि उच्चस्तरीय कार्यदल र हालै श्रम कानुनको सामयिक परिमार्जनको लागि भएको द्विपक्षीय सहमतिलाई यस सन्दर्भमा उदाहरणको रूपमा लिन सकिन्छ । यो उदाहरण "केही भएन", "सबै खत्तम" जस्ता सजिलो प्रतिक्रिया व्यक्त गर्ने त्यस्ता "पानी माथिका ओभान" हरूका लागि उपयुक्त जवाफ हो भन्ने हामीलाई लाग्छ । श्रमको संसारमा 'कमैया मुक्ति', 'कृषि श्रमिकलाई न्यूनतम ज्याला' र 'अनौपचारिक क्षेत्रमा संगठन स्वतन्त्रताको अधिकार' जस्ता उपलब्धिलाई खेलांचीको रूपमा लिइँदैन, लिनु हुँदैन । कठिन संघर्षबाट

प्राप्त ठूला उपलब्धिका रूपमा बुझ्नु पर्छ ।

यसका साथै हाम्रो संसारको अँध्यारो पाटो पनि जवरजस्त छ । सबैभन्दा प्रमुख अड्चन भनेको रोजगारदातामा रहेको व्यावसायिक अकुशलतालाई लिन सकिन्छ । आफ्नो लगानीको एक-एक पाइको नाफा-नोक्सानमा हिसाब गरेर अघि बढ्नु पर्ने व्यवसायीहरूको संस्थामा खातिरदारी संस्कृतिले पाएको डरलाग्दो स्थानलाई यस सन्दर्भमा उल्लेख गर्न सकिन्छ । दोस्रो पक्षको रूपमा सरकारलाई चर्चा गर्न सकिन्छ । सरकारी संयन्त्रमा पनि श्रम प्रशासनलाई किटेरै भन्नु पर्दा त्यो निरीह छ, यसले सबै हिसाबले वर्तमान चुनौतीलाई सामना गर्ने ल्याकत राख्दै राख्दैन ।

तेस्रो पक्षको रूपमा राजनीतिक-सामाजिक क्षेत्रमा रहेको मानसिकतालाई लिन सकिन्छ । संसार कति अघि बढिसक्यो र हामीले कुन सृजनशीलताबाट विकासको तीव्र वेगलाई पछ्याउने हो भन्नु भन्दा पनि श्रमिक वर्ग र ट्रेड यूनियनको चर्चा गर्दा कि त २०० वर्ष अघिको आँखाबाट विश्लेषण गर्ने कि 'बजारको माल' कै रूपमा व्यवहार गर्ने अतिवाद हामीकहाँ जस्ताको त्यस्तै छ । सारमा निम्न प्रश्नहरूलाई विभिन्न कुना र छेउबाट उठाइएको पाइन्छ ।

१. यूनियन राजनीतिक हुन्छ या गैर राजनीतिक ?
२. यूनियनले रोजगार पाएकाहरूको मात्रै हित गर्ने कि वेरोजगारको समस्या पनि हेर्ने ?
३. श्रम एजेण्डा राजनीतिसँग जोडिन्छ कि स्वतन्त्र हुन्छ ? श्रम एजेण्डाको दायरा कति फराकिलो हुन्छ ?
४. यूनियन र राजनीतिक पार्टी बीचको सम्बन्ध, पार्टी र भ्रातृ संस्थाको जस्तो हुनुपर्छ वा संरक्षक र संरक्षित जस्तो वा कस्तो हुनु पर्छ ?
५. कसले कसलाई नियन्त्रण गर्नु पर्छ ? यूनियनले पार्टीलाई वा पार्टीले यूनियनलाई ? यूनियनले राजनीतिलाई वा राजनीतिले यूनियनलाई ?
६. विद्यमान श्रम कानुन श्रमिक प्रति ढल्केको छ, ठीकै छ, गलत छ वा अपूर्ण छ ?
७. यूनियनले औद्योगिक सम्बन्ध सुधार र विकास गर्न योगदान गरे या "राजनीति" मात्र गरे ?
८. यूनियनहरू कार्यालय आधारित हुनु पर्ने कि मैदान आधारित ?
९. दवाव र सम्वादबाटै उपलब्धि प्राप्त हुने अवस्थामा पनि यूनियनले हडताल र तोडफोडबाटै जानु पर्ने तर्क गर्नु उचित हुन्छ ?
१०. समकालीन ट्रेड यूनियन आन्दोलन राजनीतिक भयो, अर्थवादी भयो वा ट्रेड यूनियनवादी भयो ? आदि ।

यस अंकमा विभिन्न प्रबुद्ध व्यक्तिहरूले माथिका प्रश्नहरू उठाउनु भएको छ, र आफ्ना उत्तर समेत व्यक्त गर्नु भएको छ । हामीले हाम्रा धारणा समयक्रममा सार्वजनिक गरी नै रहेका छौं । त्यसैले यी प्रश्नहरूमा थप बहस र अन्तरक्रिया अझै जारी रहनेछ ।

| | | |
|---|---|---|
| | : वैशाख १९ | जिफन्ट स्वास्थ्य सहकारी क्लिनिक उद्घाटन |
| | : वैशाख १९ | जिफन्टको केन्द्रीय कार्यालय, मनमोहन मजदुर भवनको उद्घाटन |
| | : वैशाख १९-२१ | जिफन्ट तेस्रो राष्ट्रिय महाधिवेशन |
| | : वैशाख | न्यूनतम ज्याला वृद्धि |
| | : जेठ १६ | बिराटनगर जुटमील हडताल, |
| | : असार २६ | संस्थान र बैंकका ५० हजार श्रमिकहरू हडतालमा |
| | : साउन २ | कमैया मुक्तिको घोषणा |



| | | |
|---|---|---|
| | : साउन ४-५ | तीन वटा ट्रेड यूनियन महासंघद्वारा बालश्रम विरुद्ध साझा धुलिखेल घोषणापत्र जारी |
| | : भदौ १ | बैंक लगायत १२ क्षेत्रमा आवश्यक सेवा सञ्चालन ऐन लागू |
| | : भदौ ९ | एकल यूनियन निर्माणको लागि जिफन्ट र एनटीयूसी उच्चस्तरीय कार्यदल गठन |
| | : कार्तिक ८ | जेन्डर समानता र प्रवर्द्धनको लागि ट्रेड यूनियन कमिटी गठन |
| | : मंसीर २६ | होटल व्यवसायीहरूको हडताल |



| | | |
|---|---|---|
| | : चैत्र २ | १० प्रतिशत सेवा शुल्कको लागि अधिराज्यव्यापी होटल मजदुरहरूको हडताल |
| | : चैत्र २ | होटल क्षेत्रमा आवश्यक सेवा सञ्चालन ऐन लागू |
| २०५८ | : जेठ ३-४ | जिफन्टको अयोजनामा बाँधाश्रम सम्बन्धी दक्षिण एशियाली कार्यशाला |
| | : साउन ३२ | तत्कालीन प्रधानमन्त्रीद्वारा राजनीतिक-आर्थिक-सामाजिक परिवर्तनको लागि आठ बुँदे कार्यक्रम घोषणा |
| | : मंसीर २० | लेबोर नेपाल डट ओआरजी वेभ पोर्टलको स्थापना |



| | | |
|---|---|---|
| २०५९ | : मंसीर १३ | सन् २००३ का लागि ट्रेड यूनियनहरूको साझा प्राथमिकताका एजेण्डामा सहमत |
| | : पुस १ | श्रमको संसारमा जेण्डर समानता प्रवर्द्धनका लागि त्रिपक्षीय घोषणा |
| | : माघ | डिकोन्टको पहिलो राष्ट्रिय अधिवेशन |
| | : फागुन ११ | एनटीयूसीको तेस्रो राष्ट्रिय अधिवेशन |
| | : चैत्र १-३ | दक्षिण एशियाली महिला ट्रेड यूनियन कार्यकर्ताहरूको सम्मेलन |

# ट्रेड यूनियन र राजनीतिक पार्टीको बीच आइडिलोजिकल अफिलियसन हुनु पर्दछ

श्री गिरिजाप्रसाद कोइराला, सभापति–नेपाली कांग्रेस



**श्रमिकहरूबारे**

मलाई के लाग्छ भने, बुद्धिजीवी (काम गर्ने) श्रमिक छन्- व्हाइट कलर, (उनीहरू) र (अन्य) श्रमिकहरूको संगठन एउटै गराउनु हुँदैन । उनीहरू व्हाइट कलरको माग र मजदुरको माग अर्कै हुन सक्दछ । तर एफिलेसन (सम्बद्धता) एउटै (महासंघ) मा गरे हुन्छ । त्यो वेलामा त (व्हाइट कलरहरू) थोरै थिए तर अहिले त धेरै भएका छन् । अहिले यसलाई अलग गरेर (संगठित) गरेमा राम्रो हुन्छ । मैले बारम्बार पार्लियामेन्टमा भनें, ट्रेड यूनियनलाई चाहिँ एउटै बनाउनु पर्छ । जस्तो कि (महासंघहरूको) महासंघको रूपबाट ...सबै स्थानबाट इलेक्टेड (निर्वाचित) भएर (त्यो) महासंघ आवस् । जसरी प्रजातन्त्र बल्लतल्ल हुर्किन लागेको छ, त्यस्तै ट्रेड यूनियन पनि बल्लतल्ल हुर्कंदैछ । त्यसैले यसलाई जसरी भए पनि बलियो बनाउनु पर्छ । माधवजी (एमालेका महासचिव) सँग पनि कुरा भएको थियो मेरो ! सबैको (एउटै) महासंघ बनाऔं । जसले (गर्दा ट्रेड यूनियन) स्ट्रेन्थेन (सुदृढ) पनि हुन्छ, कम्पिटेटिभ (प्रतिस्पर्धी) पनि हुन्छ । जबसम्म कम्पिटेटिभ हुँदैन तबसम्म स्ट्रेन्थेन पनि हुँदैन । त्यसैले मजदुरलाई पनि कम्पिटेटिभ बनाउनु पर्छ । स्ट्रेन्थेन ल्याउनको लागि एउटै बनाउनु पर्छ महासंघ भन्ने मेरो भनाइ हो ।

**रोजगारदाताको भूमिका**

यहाँ साइकोलोजीकल (मानसिकताको) कुरा छ दुईटाको बीचमा । यो कुरामा उनीहरू लेबर लज (श्रम कानून) एसेप्ट (स्वीकार) गर्न चाहँदैनन् । उनीहरूलाई के लागेको छ भने यो हामीमाथि लादिएको छ । ट्रेड यूनियन भनेको खालि मजदुरको फाइदाको लागि मात्र नबनेर उनीहरूको फाइदाको लागि पनि हो भन्ने कुरा बुझ्नु पऱ्यो । मजदुरको फाइदाको साथ साथ उनीहरूको फाइदा छ भन्ने कुराको ज्ञान हुनु पऱ्यो । अहिले दुइटाको बीचमा ग्याप (बुझाइको खाडल) छ । त्यो ग्यापलाई बुझेमा यो त्यतिकै समाप्त भएर जान्छ, दुइटैले एक दोस्रोलाई सहयोग गरेर जान्छन् । अरु मुलुकमा पनि त्यही भएको हो ।

**सरकारको भूमिका**

सरकारमा परसनली (व्यक्तिगत रूपमा) म इनभल्भ (संलग्न) भएको हुनाले मेरो सोचाइ र अरुको सोचाइ फरक हुन सक्छ । जहिले पनि म भन्थें ट्रेड यूनियनलाई बलियो बनाउनको लागि कानुनहरू यस्तो बनाउनु पर्छ ताकि उनीहरू आफ्नो अधिकारबाट बञ्चित हुन नपरोस् । त्यो किसिमको (अधिकारको लागि) कन्भिन्स गर्न (चित्त बुझाउन) पऱ्यो । मन परेन कि "ल (कानून) को कुरा" भन्दिने गर्दछन् । अब अपोइन्टमेन्ट गर्दा (काममा लगाउँदा) टेम्पोररी (अस्थायी) भन्दिने गर्दछन् । त्यसैले

(कानून प्रति) कन्फिडेन्स बढाउनु पऱ्यो । जबसम्म त्यस्तो व्यवस्था हुँदैन, ट्रेड यूनियन पनि बलियो हुँदैन, उद्योगपतिले पनि उद्योगको उन्नति गर्न सक्दैन । ट्रेड यूनियनको कोअपरेसन (सहयोग) उद्योगले लिनै पर्छ अनि मात्र उद्योगको उन्नति हुन सक्छ ।

कतिपय मुलुकमा जस्तै श्रीलंकामा, बंगलादेशमा मैले हेरें, उनीहरूले इसेन्सीयल प्रडक्ट (विदेशी मुद्रा कमाउन आवश्यक पर्ने उत्पादन) को एउटा इन्डस्ट्रीयल एरिया (फ्रि ट्रेड जोन) भनेर छुट्याएका छन् । उनीहरूको तलब-सुविधा सबै अलग छ र स्ट्राइक (हडताल) पनि केही समयसम्म गर्न नपाउने तर सुविधा चाहिँ धेरै दिएको रहेछ । यस किसिमबाट उनीहरूले निश्चित समयको लागि मजदुरसँग सम्झौता गरेका छन् । यहाँ पनि हामीले त्यसै गरी सम्झौता

गर्नु पर्छ । त्यसमा तीन पक्ष- सरकार, मजदुर र उद्योगपतिको सम्झौता सँगै गर्नुपर्छ । अर्को कुरा, श्रम कार्यालयका श्रम निरिक्षकहरू पनि इमान्दार हुनु पर्छ र उनीहरूको पनि आउट लुक (दृष्टिकोण) पनि (सही) हुनु पर्छ, त्यो पनि यहाँ भएको छैन । (सरकारले) यो सब गर्नु पर्छ भन्ने लाग्छ ।

**राजनीतिक पार्टीको भूमिका**

राजनीतिक पार्टीको रूपमा मेरो अलिकति विरोध के मा छ भने ट्रेड यूनियन राजनीतिबाट अलग हुनुपर्छ । आइएलओका प्रतिनिधिहरू पनि आउँछन्, उनीहरू पनि भन्छन् - ट्रेड यूनियनलाई राजनीतिभन्दा अलग राख्नु पऱ्यो । एक जना ब्रिटिस आएका थिए, अनि मैले उनलाई भनें "तिम्रो त प्राइममिनिस्टर (प्रधानमन्त्री) नै लेबर पार्टीका छन्, कसरी त्यसलाई अलग पार्छौ ! त्यसकारणले पोलिटिक्स (राजनीति) भनेको एक दोस्रोसँग गाँसिएको छ । अहिले ट्रेड यूनियन एउटा फ्रि मुभमेन्ट (स्वतन्त्र आन्दोलन) हुनुपर्छ भन्ने (विचार) छ मेरो । तर कुनै कुनै हिसाबले (राजीतिसँग) गाँसिन्छ त्यो । कुनै कुनै इस्यु (विषय) सँग- पोलिटिक्स (राजनीति)सँग गाँसिन्छ । त्यसरी गाँसिए तापनि इण्डिपेन्डेन्ट हिसाबले लिएर जानु पर्छ ट्रेड यूनियनलाई । मेरो पार्टीले (यसमा) कन्भिन्स गरेको छ, तपाईंहरूको (पार्टी) ले पनि गरेकै होला!

**ट्रेड यूनियन र राजनीतिक पार्टी बीचको सम्बन्ध**

ट्रेड यूनियन र राजनीतिक पार्टीका बीच आइडियोलोजिकल (विचारको) हिसाबले अफिलियसन (आबद्धता) हुनु पर्दछ, तर राजनीतिक (विवादको) क्षेत्रमा उनीहरू आउन हुँदैन । हामीले (राजनीतिक पार्टीहरूले) एउटा कुरा गरौंला, त्यसले उनीहरूलाई, ट्रेड यूनियनहरूलाई असर गरिरहला । अब (प्रत्यक्ष) अफिलियसन भयो भने (पार्टीको पक्षमा) जानै पर्ने हुनु पर्दछ । त्यसैले ट्रेड यूनियनहरूले स्वतन्त्र विचार पनि राख्नु पर्दछ । स्वतन्त्र विचार राख्दाखेरी मलाई के लाग्छ भने यसले राजनीतिक शक्तिहरूलाई पनि नियन्त्रण गरेको हुन्छ । यदि (पार्टी) गलत दिशातिर जान लाग्यो भने ट्रेड यूनियनले त्यसलाई अलिकति नियन्त्रण गर्दछ । त्यसैले (ट्रेड यूनियनले) आफूलाई अलग गरेर राख्नु पर्दछ, नत्र स्वतन्त्र ट्रेड यूनियन आन्दोलन सम्भव हुँदैन ।

**१२ वर्षको अवधिमा ट्रेड यूनियन**

ट्रेड यूनियनलाई सबभन्दा बढी केमा (जस दिने) भन्दा ट्रेड यूनियनको यत्रो व्यापकता बढेको छ । ट्रेड यूनियन आइएलओको सदस्य बनेको छ, यसको शक्ति अन्तरराष्ट्रिय स्तरमा पनि रिकग्नाइज्ड (सर्वस्वीकृत) भइसकेको छ । त्यो उपलब्धि उपलब्धी हो नि





त! जुन आन्दोलन चलिरहेको छ, तपाईंहरूले गरिरहनु भएको छ, त्यसबाटै प्राप्त भएको हो । त्यो नेगेटिभ (नकारात्मक) आन्दोलन छैन, त्यो आन्दोलन पोजिटिभ (सकारात्मक) दिशातिर गइरहेको छ । मलाई सोध्नु हुन्छ भने जब तपाईंहरूको एउटै महासंघ बन्नेछ, सबै भन्दा बढी फुल्ली सेटिस्फाईड (पूरा सन्तुष्ट) हुनेछ, त्यस कुराले मलाई ! (ट्रेड यूनियनलाई) अझ व्यापक बनाउन मेरो के को-अपरेसन (सहयोग) चाहिन्छ, म गर्न तयार छु ।

**ट्रेड यूनियनहरूको आलोचना**

ट्रेड यूनियनमा काम गर्दा, व्हाइट कलरले मजदुरहरूलाई अगाडि बढाउने दिशातर्फ जानु पर्छ । उनीहरूको नियन्त्रण व्हाइट कलरले गर्ने होइन, उनीहरूको सहभागितामा/एकतामा जोड दिनु पऱ्यो । डेभलपमेण्ट (विकास) को काममा, ट्रेड यूनियनको डेभलपमेण्टको काममा उनीहरूमा पनि सेन्स अफ पार्टिसिपेसन (सहभागिताको अनुभूति) हुनु पऱ्यो । जुन त्यो वेला मलाई पनि गाह्रो परेको थियो । डेमोक्रेसी (प्रजातन्त्र) आएपछि हाम्रो भूमिका के ? भनेर अहिले पनि सोध्छन् । त्यो भूमिका दिने काम तपाईंहरूले गरिदिनु पर्छ । फ्रि (स्वतन्त्र) ट्रेड यूनियन भएपछि डेमोक्रेसीकै आधारमा भयो । फ्रि ट्रेड यूनियनले पनि पार्टिसिपेसन (सहभागिता) को प्रोग्राम (कार्यक्रम) ल्याएर उनीहरूलाई पनि संलग्न गराउनु पर्छ । फ्रि ट्रेड यूनियनले पनि सेन्स अफ पार्टिसिपेसन दिन सकेन भने व्हाइट कलर र अर्कोको नयाँ नेतृत्व निस्कन्छ । त्यसले विभाजन निम्ताउँछ, त्यस्तो निक्लन दिनु भएन ।

**नेपाल ट्रेड यूनियन महासंघलाई सुझाव**

मैले भनिहालें नि, महासंघलाई स्ट्रेनथेन (सुदृढ) गराएर जानु पर्छ । महासंघमा त्यस्ताको पनि प्रतिनिधित्व गराउनु पऱ्यो जसले सुदृढ हुँदै पनि जान्छ । नत्र पछि आएर त्यस्तो शक्ति निस्कन सक्छ जसले व्हाइट कलर र लेवोरहरूको (मजदुरहरूको) बीचमा फाटोको स्थिति ल्याउन सक्छ । त्यस्तो नहोस् भनेर, त्यस्तो किसिमबाट व्यवहार गराउनु पऱ्यो भन्ने मलाई लाग्छ ।



# श्रमिकलाई "शारीरिक र मानसिक" श्रम गर्नेको रूपमा विभाजन गर्ने होइन

**क. माधवकुमार नेपाल, महासचिव–नेकपा (एमाले)**

**१२ वर्षमा हाम्रो श्रम बजार**

विगत १२ वर्षमा नेपालको श्रम बजारमा श्रमशक्तिको अत्यधिक वृद्धि हुनु पर्दथ्यो । रोजगारीको नयाँ-नयाँ क्षेत्रको उपलब्धता हुनु पर्दथ्यो । जसले गर्दा धेरै मजदुर त्यहाँ प्रवेश गर्न सक्दथे, धेरै भन्दा धेरै नेपाली छोरा-छोरीहरूले रोजगारी पाउन सक्दथे । दोस्रो कुरो, उनीहरूको रोजगारीको सुनिश्चितता हुनु पर्दथ्यो ।

यसो नहुनुमा दुई वटा पक्ष छन्, यस बीचमा देशको औद्योगिक उत्पादनमा वृद्धि हुन सकेन । औद्योगिक संस्थाहरू राम्ररी चल्न सकेनन् । त्यसको फलस्वरूप भएका मजदुरहरूको जीवनस्तर खस्कँदै गयो, उनीहरूको जीवन बेहाल हुन थाल्यो, उनीहरूले पाएको रोजगारी गुम्ने अवस्थामा समेत पुग्न थाल्यो । अर्को हो, उदार अर्थतन्त्रका कुरा ! जति जति अन्तरराष्ट्रिय वित्तीय संस्थाहरूको दवावमा नेपालका शासक वर्गहरू पर्न थाले, त्यति-त्यति मात्रामा श्रम बजार अनिश्चित हुन थाल्यो । यसरी श्रम बजारको अनिश्चितताले गर्दा उनीहरूको उत्पादकत्व क्षमतामा असर पर्न थाल्यो, उनीहरूको उत्पादन गर्ने उर्जामा त्यसले असर पार्न थाल्यो ।

नेकपा (एमाले) को सरकारको (नौ महिनाको अवधिका) कुरा गर्ने हो भने हामीले सिधै उत्पादकत्व वृद्धि गर्नका लागि प्रयास गर्‍यौं । हामीले नीतिगत कुरालाई पहिलो प्राथमिकता दियौं । निकै ठूलो संख्यामा रहेका बेरोजगार कृषक वा अर्धवेरोजगार कृषकहरू बीचमा क्रान्तिकारी भूमिसुधारको कदम चाल्ने एउटा सोचाइ बनायौं । दोस्रो, देहातमा रहेका कृषि मजदुरहरूलाई पनि उपयुक्त ढंगबाट दैनिक ज्यालाको व्यवस्था गरिनु पर्दछ भन्ने सोचाइ अगाडि बढाउन थालेका थियौं । तेस्रो, श्रमसँग जोडिएको अरु पक्षहरूलाई (चाहे त्यो सुकुम्बासीहरू नै किन नहुन्), विभिन्न उपायहरूबाट कसरी रोजगारीमा समाहित गर्न सकिन्छ भन्ने उपाय गर्न थाल्यौं । चौथो, एक प्रकारले अत्यन्तै नराम्रो ढंगले (घाटामा) चलिरहेका हाम्रा औद्योगिक संस्थानहरूको "विमारी"लाई हटाएर कसरी राम्ररी संचालन गर्न सकिन्छ भन्ने उपायको खोजीमा हामी लाग्यौं ।

**रोजगारदाताहरूको भूमिका**

नेपालको रोजगारदाता भनेका पूँजी र उद्योगसँग सम्बन्धित व्यक्तिहरू हुन् । उनीहरूले, नेपाली श्रमिकहरूलाई रोजगारी दिने र उनीहरूको सीपवृद्धि गर्ने, नेपाली श्रमिकका सीपबाट नहुने- नेपालीले नगरेको काममा विदेशीहरूको लागि पनि गर्न ठाउँ दिने...जस्ता नीति लिनु पर्दथ्यो या भनौं, राज्यले त्यस्तो नीति लिनु आवश्यक थियो । तर हामीले के देख्यौं भने ( कानुनमा) नेपालीहरूलाई प्राथमिकता दिनु पर्दछ भन्ने कुरा लेखिए तापनि रोजगारदाताहरूले (विशेषगरी) भारतीय श्रमिकलाई ल्याएर त्यहाँ राख्ने काम गरे । कतिपय व्यवसायीले नेपाली श्रमिकलाई सकेसम्म हटाउने, स्थायी गर्न नचाहने, उनीहरूको सीप वृद्धि गर्न नचाहने, वृत्ति विकास गर्न नचाहने, दुःख दिने समेत काम गरे । आफ्नो पूँजी र उद्यमशीलता भन्दा पनि अनुचित ढंगबाट लाभ उठाउन खोजिरहेको कुराको भण्डाफोर हुन्छ भनेर नेपाली श्रमिकरुलाई त्यसको शिकार बनाउने या नेपाली श्रमिकहरूले विरोध गर्छन् भनेर, विरोध मथ्थर पार्न उनीहरूलाई हटाइदिने खालका प्रवृत्तिहरू पनि देखा परे । यहाँसम्म कि, रोजगारदाताहरू हायर र फायरका पक्षमा रहेको पाइन्छ । उनीहरू श्रमिकलाई स्वेच्छाचारी ढंगले कामबाट फाल्न चाहन्छन् ।

रोजगारदाता भन्ने वित्तिकै उनीहरूको चाहना हुन्छ कि उनीहरूले लगानी गरेको पूँजी चाँडो फिर्ता होस् । पूँजीको मुनाफा प्राप्त होस् या उद्यमशीलताको कदर हुन सकोस्, उनीहरूको संस्था पनि फस्टाउन सकोस् । उनीहरूको त्यो चाहना पनि स्वाभाविक हो । उद्योगको विकास र विस्तारसँगै उनीहरूको पनि भविष्य सुनिश्चित हुने भएकोले श्रमिकले पनि इमान्दारिताका साथ, नियमका साथ काम गर्नु पर्ने आवश्यकता पर्दथ्यो । यी सबै कुराहरूमा रोजगारदाता र रोजगारी प्राप्त गर्ने श्रमिक, दुवैको बीचमा सुमधुर सम्बन्धको आवश्यकता पर्दथ्यो ।

**सरकारको भूमिका**

नेकपा (एमाले) सामेल भएको वा नेकपा (एमाले) को सरकार बाहेक अन्य सरकारहरूको पालामा श्रम बजारलाई पनि बढ्ता राजनीतीकरण गर्ने कोसिस गरियो । राजनीतीकरण गर्ने कोसिसमा सरकारी स्वामित्वका प्रतिष्ठानहरूमा आफ्ना आसेपासेहरू भर्ना गर्ने, अर्कोलाई पन्छ्याउने/हटाउने कोसिसहरू पनि भए । आफ्ना मान्छेलाई भर्ना गरेपछि कामप्रति इमान्दार हुनु भन्दा पनि समस्या र बखेडा खडा गर्ने काममा पनि उनीहरू

संलग्न भए। त्यसले गर्दा पनि केही जटिलता उत्पन्न भए।

तर हामीले सोच्नु पर्ने कुरा विगतमा राज्यतर्फबाट जिम्मेवारी पाएको जुन निकाय हो, त्यो निकायबाट सुस्पष्नीति आउनु पर्दथ्यो। आन्तरिक श्रम बजारको निम्ति पनि आन्तरिक श्रमिकहरूको हितको निम्ति पनि एउटा सोचाइ बनाउन आवश्यकता पर्दथ्यो। नेपालका श्रमिकहरूहरूलाई देश भित्र कहाँ खपत गर्न सकिन्छ, उनीहरूको जीवन यापन गर्ने समस्यालाई हल कसरी गर्न सकिन्छ भन्ने चिन्तन गर्नुपर्थ्यो।

राज्यले राजस्व र आम्दानी दुवै प्राप्त गर्ने कामहरू गर्नु पर्दछ। श्रमिकको हितको पक्ष र उद्योगको हितको पक्ष, संस्थाको हित-पूँजीको हित...उद्यमशीलताको मर्यादाको पक्ष, यिनीहरू वीच सर्वथा उचित संयोजनको आवश्यकता पर्दछ। एउटा पक्ष हावी हुने र अर्कोलाई चाहिँ पूरै पन्छाउने स्थिति होइन, दुईटैको सह-अस्तित्वबाट दुइटैको विकास सम्भव हुन्छ।

हामीकहाँ श्रम बजारको सूचनाको निम्ति एउटा वैज्ञानिक संयन्त्र छैन। जसले गर्दा जसलाई रोजगारी चाहिएको छ उसले नाम दर्ता गर्ने, उसको सबै खुबी हेर्ने, सीप वृद्धि गर्ने ... जस्तो किसिमको काम हुन सकिरहेको छैन। यस्ता संयन्त्रको आवश्यकता पर्दछ र राज्यले व्यवस्था गर्नु पर्दछ।

तेस्रो पक्षको रूपमा राज्य रहन्छ, त्यसले लगानीकर्ता र श्रमिक पक्षको बीचमा एउटा सुमधुर सम्बन्धको विकासमा योगदान गर्नुपर्ने आवश्यकता पर्दथ्यो। तर जस्तो किसिमको राज्यको नीति हुनु पर्दथ्यो, त्यहीँ नै त्रुटि भएको हुनाले राज्यले रोजगारदातालाई र मजदुरको हितलाई जसरी संरक्षण गर्नु पर्थ्यो त्यो गर्न नसकेकोले हामीले यस क्षेत्रमा अनेकौं जटिलताहरू, अप्ठ्याराहरू पाएका छौं।

**राजनीतिक पार्टीहरूको भूमिका**

हामीले आफ्नो पार्टीबाट कारखानाका मजदुरहरूलाई प्रोत्साहित गर्ने काम गरेका छौं। द्वन्द्वहरूलाई हल गर्नका निम्ति प्रयासहरू गरेका छौं। सदन-संसदमा आवाज उठाउने काम गरेका छौं, कानुन निर्माण गर्नका लागि पहल गर्ने काम गरेका छौं, र रोजगारी प्रवर्द्धनका लागि पनि विभिन्न उपायहरूको खोजी गर्ने बारेमा आफ्नो तर्फबाट पहल गरेका छौं। यसरी राजनीतिक पार्टीको हैसियतले नेकपा (एमाले) ले आफ्नो नीति-कार्यक्रमको माध्यमबाट मजदुर क्षेत्रको समस्यालाई उच्चतम महत्त्व दिएको छ।

हामी कम्युनिस्ट हौं र हाम्रो पार्टी कम्युनिस्ट हो। कम्युनिस्ट पार्टी भनेको नै सर्वहारा वर्ग- मजदुर वर्गको अगुवा दस्ता हो। कम्युनिस्ट पार्टीले संसारभरीका मजदुरहरूलाई एकताबद्ध हुने कुरालाई पहिलो महत्त्व दियो र मजदुर वर्ग, उत्पीडित जनता र राष्ट्रहरूको पक्षपोषण गर्दै आयो। कम्युनिस्ट पार्टी भएको हुनाले नै हाम्रो पार्टीले पनि त्यो कर्तव्य पूरा गऱ्यो। २०३६ सालमा संभवतः कम्युनिस्ट पार्टी नै थियो जसले नेपालमा मजदुर वर्गको बेग्लै संगठनको आवश्यकता महसुस गऱ्यो।



अहिले मजदुरहरूको बीचमा जुन जागरण आएको छ त्यसमा नेकपा-एमालेको



सबैभन्दा ठूलो योगदान थियो भन्ने कुरोलाई, कसैले पनि अस्वीकार गर्न सक्दैन। त्यसो हुनाले आफ्नो तर्फबाट पार्टीगत रूपमा, नीतिगत रूपमा, संगठनात्मक रूपमा, गतिविधि र क्रियाकलापको रूपमा, चासो-सरोकार राख्ने कुरामा, संसदमा आवाज उठाउने कुरामा, सडकको आन्दोलनको कुरामा र विषयवस्तु उठान गर्ने कुरामा पनि हामीले मजदुरको समस्याहरूलाई उच्चतम प्राथमिकता दिएका छौं।

**ट्रेड यूनियनहरूको भूमिका**

ट्रेड यूनियनले आम रूपमा गरेको पहिलो राम्रो कुरा भनेको विभिन्न पृष्ठभूमिबाट आएका मजदुरलाई संगठित गर्ने काम गऱ्यो। संगठनको चेतना प्रवाह गऱ्यो। दोस्रो, मजदुरहरूमा आफ्नो हक-अधिकारको भावना जागरण गर्न सक्यो। तेस्रो-मजदुरहरूमा आधुनिक विचारको प्रवेश गराउन सक्यो। अन्याय-अत्याचारका विरुद्ध संगठित रूपमा उत्रिनको लागि प्रेरित गऱ्यो र अघि बढाउन पहल पनि गऱ्यो। उनीहरूलाई विभिन्न हिसाबले खुबी, सीप, क्षमताहरू वृद्धि गराउने कुरामा पनि ट्रेड यूनियनहरूले महत्त्वपूर्ण भूमिका खेलेका छन्। त्यसमा पनि नेपाल ट्रेड यूनियन महासंघ (जिफन्ट) अग्रपंक्तिमा रहेको छ भन्न पाउँदा हामीलाई खुसी अनुभव हुन्छ।

योसँगै ट्रेड यूनियनका कामको सन्दर्भमा स्थानीय संकीर्ण भावनाबाट प्रभावित हुने खतरा पनि देखा परेको छ। कहिलेकाहीं आफूले उठाएको कदमले आफ्नै नोक्सान हुन सक्दछ भन्नेमा विचार पुगेन कि भन्ने पनि देखिएको छ। यूनियनले, मजदुरले उठाएका कुरालाई पनि विभिन्न कोणबाट हेर्न सक्नु पर्दछ, मजदुरको तात्कालिक हित होइन, दीर्घकालीन हित हेर्न सक्नुपर्दछ। सुविधा माग्ने हो तर त्यो सुविधा माग्दाखेरि के विचार गर्नुपर्छ भने त्यो कारखानाले त्यति दिन सक्ने अवस्था छ कि छैन? आफ्नो हितको मात्र कुरा सोचियो भने आफ्नै दीर्घकालीन हितको पनि रक्षा हुन सक्दैन भन्ने कुरा बुझ्न जरुरी छ।

दोस्रो, ट्रेड यूनियन अलि बढ्ता एनजीओ जस्तो भएको छ, राजनीतिक अभियानमा उत्रने कुरामा कमी भयो भन्ने गुनासोको पक्ष पनि छ। हुन त हाम्रो देशको श्रम बजार पर्याप्त विकास हुन सकेको छैन। पर्याप्त विकास हुन नसकेको, पूँजीको अभाव रहिरहेको, भएका उद्योगधन्दा पनि राम्ररी चल्न नसकेको

देशमा मजदुर आन्दोलनलाई कुन तहसम्म चलाउँदा खेरि उपयुक्त हुन्छ भन्ने बारेमा सोच्नु जरुरी छ। हामी कि त अरु देशको नक्कल गरेर त्यो ढंगको आन्दोलन चल्नुपर्छ भन्ने सोचाइ राख्छौं, कि त आन्दोलनबाट डराउने खालको- खाली सम्झौतामा मात्र जाने खालको सोचाइ बोक्छौं। यहीं नै हामीले सन्तुलनको खोजी गर्नु पर्ने आवश्यकता पर्दछ। यहाँको जटिलतालाई बुझेर, यहाँको आवश्यकतालाई पनि बुझेर, मजदुरहरूलाई विभिन्न हिसाबले कसरी संगठित र परिचालित गर्न सकिन्छ सोच्नुपर्छ। उनीहरूमा चेतना र जागरण पैदा गर्न, कारखाना र सिंगो समाजप्रतिको जिम्मेवारी कसरी महसुस गराउन सकिन्छ भन्ने बारेमा ट्रेड यूनियनले समग्र पक्षलाई विचार गरेर अगाडि बढ्नु पर्ने खाँचो छ।

ट्रेड यूनियन जस्ता संघ-संस्थाहरू आफ्नो वर्ग-समुदायको हितको निम्ति नै खोलिनु पर्दछ। त्यो वर्ग र समुदायको हितको लागि उनीहरूले आफ्नो तर्फबाट सृजनात्मक-रचनात्मक रूपमा लागेर त्यो वर्गको विश्वास जितेर नै उनीहरू बलियो हुन सक्दछन्।

**ट्रेड यूनियन र राजनीतिक पार्टी बीचको सम्बन्ध**

राजनीतिक पार्टीको कर्तव्य भनेको यस्ता (ट्रेड यूनियन) संघ-संस्थालाई बलियो बनाउनमा, स्थापित बनाउनमा र क्रियाशील बनाउनमा सकारात्मक र सहयोगी हुनु पर्दछ। दुई बीचको सम्बन्ध सहयोगी नहुनु पर्ने कुरो पनि छैन। मजदुर समाजबाट अलग छैन, देशबाट अलग हुँदैन। देशमा घटिरहेका घटनाहरू, समाजमा घटिरहेका घटनाहरूबाट उनीहरू अछुतो रहन सक्दैनन्। राजनीतिक पार्टी- विशेष गरी कम्युनिस्ट पार्टी सिंगो समाजको रूपान्तरण गर्ने, समाजका सबै वर्ग, तह, समुदायका जनताको समृद्धिको लागि सबैलाई गोलबन्द गर्ने उद्देश्यका साथ अगाडि बढेको हुन्छ भने ट्रेड यूनियन आफ्नो समुदायको हकहितको रक्षा गर्ने हुन्छ। यस दिशामा नेपालमा राजनीतिक पार्टी र ट्रेड यूनियनको सम्बन्ध सन्तोषजनक छ भन्ने मलाई लाग्दछ।

**शारीरिक श्रम गर्ने र मानसिक श्रम गर्ने श्रमिकहरू**

विकसित मुलुकहरूमा शारीरिक र मानसिक श्रमिकहरूको एउटै ट्रेड यूनियन रहिआएको छ। पूँजीपतिहरूद्वारा संगठित रूपमा मजदुरको हितमाथि कुठाराघात गर्ने, उनीहरूको अधिकारमा कटौती गर्ने स्थिति बन्न थालेपछि मजदुरहरूले पनि आफ्नो यूनियनको दायरालाई फराकिलो बनाउनु पर्ने आवश्यकता महसुस हुँदै गयो। शारीरिक श्रम गर्ने र मानसिक श्रम गर्ने दुइटैलाई एउटै छाता संगठनमा गोलबन्द गरेर, मजदुरको शक्तिमा वृद्धि गर्ने काम विभिन्न देशमा भएको छ। त्यसो हुनाले यो दिशातर्फको यात्रालाई स्वाभाविक रूपमा लिनु पर्ने र त्यसलाई प्रोत्साहित गर्नु पर्ने आवश्यकता छ।

हामीकहाँ मानसिक श्रम गर्ने एउटा समूहलाई अधिकृत स्तर र नन्-अधिकृत स्तरको रूपमा छुट्याउने, अधिकृतहरूलाई यस्ता संस्थाहरूमा गोलबन्द हुनबाट वञ्चित गर्ने कोसिस एकातर्फ छ भने अर्कोतर्फ मजदुरहरू, कर्मचारीहरू मध्येको मानसिक श्रम गर्नेहरूको तल्लो तप्कालाई पनि संगठित हुन नदिने प्रयास जारी छ।

त्यसो हुनाले श्रमिकलाई "शारीरिक र मानसिक" श्रम गर्नेको रूपमा विभाजन गर्ने होइन, उनीहरूलाई एउटै छातामा गोलबन्द गरेर, उनीहरूको शक्तिलाई वृद्धि गर्ने निर्णय प्रभावकारी र सशक्त हुन सक्छ।

**एकल ट्रेड यूनियन निर्माण सम्बन्धी धारणा**

मजदुरहरू व्यक्तिगत रूपमा विविध संस्थामा आबद्ध हुन सक्छन्। उनीहरूको अधिकारमा कसैले पनि हस्तक्षेप गर्न हुँदैन। तर काम गर्ने प्रतिष्ठान, कारखाना वा संस्थान जेसुकै होस् त्यस ठाउँमा एउटै यूनियन हुँदा सशक्त आवाज उठाउन सजिलो हुन्छ। एकल ट्रेड यूनियन भनेको, श्रमिकले काम गर्ने ठाउँको आधिकारिक निकाय हो भन्ने मैले बुझेको छु, त्यस्तो एउटै आधिकारिक निकाय हुनै पर्छ। मजदुरलाई एकताबद्ध गर्ने हिसाबले, आन्दोलनलाई सशक्त पार्ने हिसाबले, सहकार्यलाई अघि बढाउने हिसाबले र विभाजनलाई तोड्ने हिसाबले यो उपयोगी पनि छ, उपयुक्त पनि छ। यो दिशामा अझै धेरै प्रयास गर्नु पर्ने र संकीर्णता र विभाजनकारी प्रवृत्तिको विरुद्ध जुझ्नु पर्ने आवश्यकता पनि छ।



# श्रमिकखवरले लाखौं श्रमिकलाई शिक्षा र सूचना प्रदान गर्ने भूमिका निर्वाह गर्न सक्छ

**श्री लैला टेग्मो रेड्डी, निर्देशक,**
**अन्तरराष्ट्रिय श्रम संगठन (आइएलओ), काठमाडौं**

श्रमिक खवरको ७५ औं अंक प्रकाशनका लागि हार्दिक बधाइ।

मलाई श्रमिक खवरको ७५ औं अंक प्रकाशन गर्न लागेको थाहा पाउँदा खुसी लागेको छ। यस खुसीको अवसरमा म तपाईं तथा त्यस कार्यमा संलग्न टीम सबैलाई बधाइ ज्ञापन गर्न चाहन्छु।

मलाई यसो भन्न पाउँदा ज्यादै खुसी लागेको छ, श्रमिक खवरले विविध विषयमा सूचना प्रवाह गरिरहेको छ। त्यसमा श्रमिक व्यवस्थापन सम्बन्ध, राष्ट्रिय अर्थतन्त्र, सामाजिक-राजनीतिक विषय सहित श्रम कल्याणका महत्त्वपूर्ण घटना एवं अन्तरराष्ट्रिय श्रम आन्दोलन र सम्बद्ध व्यक्तित्वबारे महत्त्वपूर्ण सूचना र विचार छन्।

म विश्वस्त छु, श्रमिक खवरले भविष्यमा पाठकहरू बीच विशेष गरी नेपाली श्रमिक बीच लोकप्रियता हासिल गर्नेछ। यसले अनौपचारिक अर्थतन्त्र, ट्रेड यूनियन एकता एवं ऐक्यबद्धता, सबैका लागि मर्यादित काम र शान्ति तथा पुनर्निर्माणमा ट्रेड यूनियनको भूमिका विषयमा महत्त्वपूर्ण भूमिका निर्वाह गरिरहेको छ।

यसमा कुनै शंका छैन कि, नेपाल ट्रेड यूनियन महासंघ (जिफन्ट) ले श्रमिक खवरको नियमित र लगातार प्रकाशनको माध्यमद्वारा लाखौं श्रमिकलाई शिक्षा र सूचना प्रदान गर्न ट्रेड यूनियनले गर्नसक्ने नेतृत्वदायी भूमिका निर्वाह गर्न सक्छ।

म श्रमिक खवरका आगामी अंकहरू सफलतापूर्वक प्रकाशन होस् भन्ने शुभकामना दिंदै ७५ औं अंकको हार्दिक सफलताको कामना गर्दछु।



# ग्रामीण अर्थतन्त्र बलियो बनाउन कृषिलाई आधुनिकीकरण नगरी उपाय छैन

**श्री शेरबहादुर देउवा, सभापति-नेपाली काँग्रेस (प्रजातान्त्रिक)**

**श्रम बजार र ट्रेड यूनियन**

नेपालको श्रम बजारका मुख्य दुई कुरामा ध्यान दिनु पर्छ - उद्योग र श्रम। उद्योग फस्टाउनु पर्‍यो, श्रमिक पनि। यहाँ त उद्योग पनि फस्टाउन सकेको छैन, श्रमिक पनि फस्टाउन सकेको छैन। उद्योग नफस्टाइकन श्रमिक फस्टाउन सक्दैन। उद्योग फस्टाउनु भनेको श्रमिकहरूले शोषणबाट मुक्ति पाउनु हो। श्रमिक एउटा पार्ट (भाग) हो। उद्योगको सबैभन्दा ठूलो हकदार हो। त्यसकारण, उद्योगपति र श्रमिक बीच पारिवारिक सम्बन्ध हुनुपर्छ। यसमा, यो उद्योग-व्यवसाय हाम्रो हो र यसको उन्नतिमा नै हाम्रो उन्नति हुन्छ भन्ने श्रमिकले ठान्नु पर्छ।

**रोजगारदाता र सरकारको भूमिका**

अहिलेको समस्या बेरोजगारी समस्या हो। रोजगारी दिलाउने उद्योग नै हो, अर्को उपाय नै छैन, चाहे साना उद्योग होस्, वा ठूला उद्योग वा कृषि उद्योग। कृषि आधुनिकीकरण हुन सकेको छैन। ८० प्रतिशत जनता कृषिमा आधारित छन्। ती गाउँमा बस्छन्। ग्रामीण अर्थतन्त्र बलियो बनाउन कृषिलाई आधुनिकीकरण नगरी उपाय छैन। कृषकलाई नै मजदुरको रूपमा लान सकिन्छ। यसको निम्ति सरकारले नै पहल गर्नु पर्छ।



उपयुक्त नीति बनाउनु पर्‍यो।

देशको वेरोजगारी समस्याको सम्बन्धमा लगानी जुटाउनु पर्‍यो। नयाँ-नयाँ उद्योगधन्धा खोल्न प्रोत्साहित गर्नु पर्‍यो। बिना लगानी उद्योग-धन्दा चल्दैन। एक्सरसाइज गर्नु पर्‍यो, बीउ चाहियो, लगानी चाहियो। नयाँ-नयाँ बाटाहरू खोज्नु पर्‍यो। कृषकलाई पनि मजदुर मान्नु पर्छ, कृषकहरू सबभन्दा मिहिनेत गर्ने जात हुन्, मिहिनेती हुन्। ग्रामीण अर्थतन्त्र बलियो बनाउन कृषकलाई मजदुर मान्नुपर्छ। कृषिमा आधुनिकीकरण गर्नु पर्छ। कामका लागि नयाँ-नयाँ कुराहरू आउनु पर्‍यो, कृषिमा बायोटेक्नोलोजी आवश्यकता छ। हाइ-टेक्नोलोजी आउनु पर्‍यो। नेपालका लागि धेरै सम्भावना बढ्छ, वेरोजगारी पनि घट्छ, आम्दानी पनि बढ्छ। विदेशमा पनि पठायो भने फाइदा पनि हुन्छ।

**ट्रेड यूनियनको कमी-कमजोरीहरू**

ट्रेड यूनियनहरूप्रति आलोचना केही छैन। सुझाव-जहाँ हुनुहुन्छ त्यसलाई आफ्नो सम्पत्ति मान्नुस्, जुन उद्योगमा काम गर्नुहुन्छ, जुन व्यवसायमा काम गर्नु हुन्छ, त्यसलाई आफ्नो भनेर काम गर्नोस्। तर पहिले उत्पादन त गर्नुपर्‍यो नि !

जिफन्टलाई शुभकामना छ।



# ट्रेड यूनियनले संगठित श्रम क्षेत्रको सीमित जिम्मेवारी निर्वाह गऱ्यो

**श्री पशुपति शमसेर जबरा, अध्यक्ष–राष्ट्रिय प्रजातन्त्र पार्टी**

**श्रम बजार**

श्रम बजारमा के भयो भनेर बाह्र वर्षको अन्तरालमा हेर्दाखेरि ट्रेड यूनियनले आफ्नो संगठन विस्तार निकै गर्ने मौका पायो। धेरै नयाँ कानुनहरू निर्माण भए, जसले संगठित श्रमको हित र उनीहरूको स्वार्थको संरक्षण गर्ने ठाउँ उपलब्ध गर्ने काम गऱ्यो। संगठित श्रम शक्तिको बारेमा यथेस्ट प्रगति भएको छ, यही रूपमा यसलाई लिन सकिन्छ।

**ट्रेड यूनियनको भूमिका**

ट्रेड यूनियनको कर्तव्य संगठित श्रमप्रति मात्र छ कि नेपालको सम्पूर्ण श्रम शक्तिप्रति छ ? यी दुई प्रश्न मेरो विचारमा एक अर्काप्रति द्वन्द्व भएका प्रश्नको रूपमा छन्। यसलाई केलाएर मात्र हामी ट्रेड यूनियनको रोल (भूमिका) निर्धारण गर्न सक्छौं जस्तो लाग्छ। सबभन्दा पहिलो, अहिले भएका उद्योगहरूको श्रम संगठित गर्ने, उनीहरूको हकहित प्राप्ति र संरक्षण गर्ने कुरामा ट्रेड यूनियन सफल भएको जस्तो मलाई लाग्छ।

नेपालमा अहिले वेरोजगारीको समस्या, साँच्चै ठूलो समस्याको रूपमा रहेको छ। यदि ट्रेड यूनियन र पार्टीहरू नेपालको त्यो सम्पूर्ण श्रमशक्ति, जसले रोजगार खोजिरहेको छ...जसले रोजगार नपाएर अहिले विद्रोहको स्थिति मुलुकमा उत्पन्न भइरहेको छ, त्यो पट्टि पनि फर्किनु पर्छ कि पर्दैन? त्यो पट्टि पनि उनीहरू संवेदनशील हुनु पर्छ कि पर्दैन भनेर हामीले हेऱ्यौं भने, जति मात्रामा संगठित क्षेत्रमा प्राप्त गरेको सफलता छ त्यसको तुलनामा नेपालबाट भौंतारिएर अन्य मुलुकमा जान बाध्य वेरोजगार, त्यो असंगठित र गरिबी झेलिरहेका नेपाली प्रति चाहिँ आफ्नो कर्तव्य ट्रेड यूनियन र पार्टीहरूले पुऱ्याउन नसकेको मैले पाएको छु।

**रोजगारदाता र सरकारको भूमिका**

रोजगारदाता भनेको लगानीको मौका पाएपछि (पूँजीको) प्रयोग गर्ने वर्ग हो। उनीहरूले लगानीको क्षमता र लगानीको मौका अनुसार लगानी गर्ने कुरा हो। यो बाहेक, संभवतः लगानीकर्ता भनेको वैदेशिक लगानीकर्ता हो। तर वैदेशिक लगानीकर्ताको अभाग्यवस दृष्टिकोणले-श्रम बजारमा जुन रेजिडिटी हाम्रो संगठनहरूले, कानुनहरूले, ट्रेड यूनियनहरूले सृजना गरेको छ, त्यसले गर्दा उनीहरूलाई लगानी गर्न मुश्किल भएको छ भन्ने भनाइ छ।

वैदेशिक लगानीकर्ताको धारणा, स्वदेशी लगानीकर्ताको धारणा र संगठित श्रमशक्ति पट्टि जिम्मेवार रहेको ट्रेड यूनियन धारणालाई वृहत वेरोजगारी कसरी समाधान गर्ने धारणा भनेर सरकारले हेर्नु पऱ्यो। सरकारले सबैलाई समेटेर हेर्दाखेरि रोजगारीको क्षेत्र कसरी बढाउने र लगानी कसरी आकर्षित गर्ने भन्ने हुनुपऱ्यो जसले नेपालमा भएको अत्यन्त ठूलो वेरोजगारीलाई समाधान गरोस्।

**राजनीतिक पार्टीहरूको भूमिका**

पार्टी भनेको सरकारमा जान खोज्ने यन्त्र हो। पार्टीहरू सरकारमा जान खोज्दा कुनै समूहलाई संगठित गरेर त्यहाँ जान खोज्छ। सरकारमा पुगिसकेपछि उसको जिम्मेवारी उसलाई त्यहाँ पुऱ्याउने समूहमा मात्र सीमित हुँदैन, उसले सम्पूर्ण मुलुकलाई हेर्नु पर्छ। मुलुकको वृहत वेरोजगारी र आफूप्रति बफादार श्रमशक्ति बीच सन्तुलन गरेर उसले अगाडि बढ्नु पर्छ।

**ट्रेड यूनियनहरूको भूमिका**

कानुन निर्माण गराउन दवाव शक्तिको रूपमा ट्रेड यूनियनले भूमिका खेले र मुख्यतया सरकारले पनि त्यो भूमिका निर्वाह गऱ्यो। कानुन निर्माणमा संसदले पनि भूमिका निर्वाह गऱ्यो, जहाँ सबै पार्टी उपस्थित थिए र ट्रेड यूनियनले मजदुरका कानुन ल्याउनमा सरकारलाई, पार्टीहरूलाई प्रेरित गऱ्यो। अर्को कुरा, ०४६ सालको तुलनामा यो क्षेत्रमा संगठनको विकास भएको देख्छौं।

**ट्रेड यूनियनको कमी–कमजोरीहरू**

ट्रेड यूनियनले संगठित श्रम क्षेत्रको सीमित जिम्मेवारी निर्वाह गऱ्यो, तर श्रम वर्गको विकराल वेरोजगारीको समस्या पट्टि ध्यान पुऱ्याउन सकेन।

**श्रमिक खवर पत्रिका सम्बन्धमा**

तपाईंहरूको प्रकाशन देखेर म अत्यन्त प्रभावित छु, तपाईंहरूमा (यस प्रकाशनमा) कुनै किसिमको स्रोत साधनको कमी भएको देखिन्न, लेखकहरूले पनि राम्रो लेख्नु भएको छ। त्यो क्षेत्रलाई परिचालन गरेर आफ्नो प्रकाशनलाई जसरी (प्रभावकारी) पार्नु पर्छ त्यो गर्न सक्नु भएको देखिन्छ।



# संसारका सबै पूँजीपति वर्ग, शोषकहरू उस्तै हुन्

क. नारायणमान विजुक्छें, अध्यक्ष-नेपाल मजदुर किसान पार्टी

**बाह्र वर्षमा के भयो ?**

म एक मार्क्सवादी-लेनिनवादीको नाताले समाजको परिवर्तनमा मजदुर वर्गको धेरै ठूलो भूमिका हुन्छ भन्ने ठान्दछु। यसकारण यो वर्ग पूँजीपति वर्ग भन्दा हरेक कुरामा अगाडि बढेकै हुनु पर्छ, अनि मात्र हामीले देशलाई नेतृत्व प्रदान गर्न सक्छौं। यस ढंगले हेर्दाखेरि हामीले गर्नु पर्ने धेरै कामहरू यो १२ वर्षमा गर्न सकेनौं। उदाहरणको निम्ति मजदुरहरूलाई हामीले राजनीतिक रूपले पनि अगाडि बढाउन सकेका छैनौं, वर्गीय रूपमा पनि हामीले अझै खँदिलो ढंगले संगठन गर्न सकेका छैनौं।

**श्रमिक वर्ग त्यो वेला, अहिले**

संसार परिवर्तनशील छ, उत्पादनका साधनहरूमा आएको परिवर्तनले नै मान्छेको तह निर्धारित गर्छ। मार्क्सवादको सिद्धान्तको मूल कुरो अहिले पनि फरक परेको छैन। हिजो शारीरिक श्रम बढ्ता हुन्थ्यो भने अहिले विज्ञान र प्रविधिको विकासले त्यसमा परिवर्तन आएको छ तर वर्ग संघर्षमा परिवर्तन आएको छैन। उदाहरणको निम्ति मार्क्सकै पालामा विजुलीको आविष्कार भयो, तत्काल मार्क्सले विजुलीले मजदुर आन्दोलनमा के फरक पर्ला र, भन्ठान्नु भयो। सय जना काम गर्ने ठाउँमा बिजुलीबाट चल्ने मेशिनले काम गर्ने भएपछि केही मान्छे त हट्ने निश्चित थियो। त्यसले मजदुर आन्दोलनलाई अझ दह्रो बनाउँछ मार्क्सले भन्नुभयो। अहिले कम्प्युटरको जमाना छ, धेरै कुरा यान्त्रीकीकरण र मेशिनीकरण भएकोले शारीरिक श्रमलाई हल्का पनि पार्छ, साथसाथै मजदुरहरूलाई विस्थापित पनि गर्छ। त्यसकारण मजदुर आन्दोलनले सोच्नु पर्दा हाम्रा मजदुरहरूलाई आजको प्रविधिसँग परिचित र प्रतिस्पर्धी गराउनु पर्‍यो। शैक्षिक स्तर उठाउनु पर्‍यो भन्नुको अर्थ त्यही हो। हामीले आफ्ना मजदुरहरूलाई शिक्षित पार्न सकेको खण्डमा मजदुर आन्दोलनको जीत हुन्छ।

**शारीरिक श्रम, मानसिक श्रम गर्नेको कुरा**

पहिले शारीरिक श्रम गर्नेलाई मात्र मजदुरको रूपमा लिइन्थ्यो तर त्यो होइन। शारीरिक वा मानसिक काम गर्ने दुवै किसिमको श्रमिकहरूलाई हामी मजदुरै भन्छौं। वैज्ञानिकहरू पनि मजदुरै हुन्, तिनीहरूले मेन्टल (मानसिक) श्रम गर्छन्। हामी शारीरिक श्रम गर्छौं। किसानहरूकै कुरा गर्दाखेरि पनि अब यस्ता ट्याक्टरहरू बनिसकेका छन् जो इलेक्ट्रोनिक्स ईक्वीपमेन्ट जडान गरिएका छन्, यसो स्वीच थिचिदिएपछि सबै जोतेर आफ्नो ठाउँमा आइपुग्ने! सबै काम त्यसैले गर्छ। कारखानामा पनि त्यस्तै हो। त्यसकारण अहिले हामीले मजदुर शब्दको प्रयोग गर्दाखेरि शारीरिक श्रम गर्ने मात्र होइन कि मेन्टल श्रम गर्ने कर्मचारीहरू, शिक्षकहरू, डक्टरहरू, वैज्ञानिकहरू, इन्जिनियरहरूलाई लिएको खण्डमा फरक पर्दैन। सबैले ज्याला पाउने हो, सबैले तलब पाउने हो। मानसिक श्रम गर्नेलाई शारीरिक श्रम गर्नेसँग फरक पारिदिए पछि मजदुर आन्दोलन निस्क्रिय हुन्छ, यस कुरामा हामीले ध्यान दिनु पर्छ, किनभने शिक्षित मजदुरहरूलाई अलग गरिदिए पछि त हामी कमजोर हुन्छौं, हुन्छौं।

**ट्रेड यूनियनहरूले के गर्ने**

ट्रेड यूनियनहरूले अहिले नयाँ आउनेहरूलाई सांस्कृतिक रूपले अगाडि बढाउनु पर्छ, तालिमहरू दिनु पर्छ- रोजगारीको विषयमा पनि, स्तरको विषयमा पनि। जस्तो अहिले कम्प्युटर आइरहेको छ, मजदुरहरूलाई कम्प्युटरको ज्ञान दिने, मेशीनको ज्ञान दिने ! साथसाथै राजनीतिक रूपले पनि युवा मजदुरहरूलाई ट्रेन्ड (तालिम दिने) गर्नु पर्दछ। नत्र पेशामा मात्र लाग्दा के दुर्गति हुन्छ भन्ने कुरा सोभियत संघ र पूर्वी युरोपले देखाइहाल्यो। त्यहाँका यूनियनहरूले आर्थिक पक्षलाई मात्र ध्यान दिए, इन्सेन्टीभलाई मात्र ध्यान दिए।

मजदुरको हकहितको कुरा समाजवादमा हुन्छ, समाजवाद मजदुरहरूले चलाउने विषय हो। अरु देशका मजदुर आन्दोलनलाई मद्दत गर्नु पर्छ, अरु देशमा समाजवाद नभएसम्म हाम्रो देशको ( समाजवाद पनि) जान्छ भन्ने जस्ता राजनीतिक कुरा बिर्सन थाले पछि, एक-एक पाइला गरेर पूँजीवादको पुनर्स्थापना भयो। अरु तेस्रो विश्वको मुलुकमा जस्तो स्थिति छ, अहिले पूर्व सोभियत संघमा पनि त्यही हालत छ। यो स्थिति नहोस् भनेर अहिले हाम्रा युवा मजदुरहरूलाई हामीले राजनीतिक रूपले तालिम गर्नु पर्छ। यसो भन्नुको अर्थ राजनीतिक दर्शनको बारेमा ज्ञान दिनु पर्छ, राजनीतिक व्यवस्थाको बारेमा ज्ञान दिनु पर्छ। अनि ज्ञान दिनु पर्छ, मजदुरहरूको आन्दोलनको सैद्धान्तिक विषयमा, समाजवादको विषयमा- साम्यवादको विषयमा। यसरी ज्ञान दिंदा खेरि हामी मजदुरहरूले खाली तलबको निम्ति मात्र काम गर्ने होइन, समाजमै ठूलो परिवर्तन ल्याउन, समाजको रूपान्तरणको निम्ति, क्रान्तिको निम्ति नेतृत्व दिनु पर्छ भन्ने ज्ञान दिनुपर्छ। यसको निम्ति हामी शिक्षित हुनु पर्छ भन्ने कुरा तिनीहरूले बुझ्नेछन्। यही काम हामीले गर्न पाएनौं कि, जति हामीले गर्नु पर्ने हो त्यति गर्न सकेनौं जस्तो लाग्छ।

**रोजगारदाताहरूको व्यवहार**

यो त वर्ग संघर्षको एउटा पाटो नै भयो। तिनीहरूले हामी मजदुर, किसानहरूलाई दासको रूपमा व्यवहार गरिरहेका छन्। त्यति मात्र होइन अहिले उनीहरू मजदुर ऐनलाई पनि लागू गर्न चाहिरहेका छैनन्। कतिपय मजदुरहरूलाई कामबाट निकालि दिएका छन्। कानुन एउटा छ, व्यवहार अर्को छ। तीतो अनुभव भन्नु पर्दा, सायद हाम्रा नेताहरूलाई पनि मजदुर ऐनको बारेमा जानकारी

छैन कि । कम्युनिस्ट पार्टी भनेको, नेपाल मजदुर किसान पार्टी भनेको मजदुरहरूकै पार्टी हो, कामदार वर्गकै पार्टी हो । उसकै प्रतिनिधित्व गर्ने पार्टी हो । तर मजदुर ऐनको विषयमा हामीलाई नै थाहा छैन । यसमा हामी अलिकति पछि परेको जस्तो मलाई लाग्छ । हाम्रा आजका युवकहरू पनि भोलि मजदुरै हुन्छन् । युवक संगठन, विद्यार्थी संगठनहरूमा समेत मजदुर सिद्धान्तहरू, मजदुर ऐनहरू हामीले पढाएको खण्डमा हाम्रो मजदुर आन्दोलन अझै सशक्त हुने म देख्छु ।

काग जहाँ पनि कालो हुन्छ भने जस्तै संसारको सबै पूँजीपति वर्ग, शोषकहरू उस्तै हुन् । तिनीहरूले घुमाई-फिराई मजदुरहरूलाई शोषण गर्ने काम गर्छन् । त्यसकारण अरु देशमा पनि, खास गरी समाजवादी देशमा कारखानाको बन्दोबस्तमा मजदुरहरूको प्रतिनिधि राख्ने हुन्छ । त्यतिवेला थाहा हुन्छ कति नपुग छ, कति नोक्सान छ, के के लिने-दिने भनेर । यसकारण हामीले भन्ने कुरा त्यही हो- कारखानाको संचालक समितिमा मजदुरको पनि प्रतिनिधित्व हुनुपर्छ । यसबाट कति फाइदा भो, कति बेफाइदा भो सायद कारखानै समाप्त हुने हो कि भन्ने कुरो हामी पनि त सोच्न सक्छौं !

केही दिन अगाडि म इटा-टायल कारखाना गएको थिएँ । साना-साना इटा-टायल कारखाना सधैं नाफामा, तर एउटा समाजवादी देश चीनले समाजवादको एउटा टुक्रोको रूपमा दिएको त्यो ( भक्तपुर इटा-टायल कारखाना) चाहिँ ड्याक पर्छ । कुनै हालतमा पनि ड्याक पर्न नपर्ने- त्यहाँका कर्मचारी, महाप्रबन्धकहरूले दुई-तीन वटा घर बनाउने, दुई-तीन वटा कार राख्ने । भ्रष्टाचार गरेरै त्यो कारखानालाई खत्तम पारियो । उनीहरू निजीकरण गर्ने पक्षमा छन्, अहिले । यो कुरामा हामी अहिले एकदम क्रिटीकल (आलोचक) भएर जानु पर्ने, त्यसरी जान सकेनौं जस्तो मलाई लाग्छ ।

प्रजातन्त्र पछि आएका सरकारहरू पूँजीवादी सरकार भएको हुनाले मजदुर वर्गको हितमा काम नभएको हो । मजदुर वर्गको पक्षमा जसले लड्नु पर्ने हो त्यस्ताको सरकार नआएको हुनाले यस्तो भएको हो । उदाहरण नै छ, एउटा कारखाना हुनेको तीन/चार वटा कारखाना भइसक्यो, उनीहरूले चाहिँ ड्याक पऱ्यो भनेर हामी पत्याउँछौं र? लखपतिहरू करोडपति भइसकेका छन् । तर मजदुरहरूको स्थितिमा खास परिवर्तन आएको छैन, त्यसो हुनाले उनीहरूको ( पूँजीपतिको) जुन भनाइ छ, त्यो गलत हो, असत्य हो ।

**ट्रेड यूनियनले गरेको जस पाउने काम**

असंगठित मजदुरहरूलाई संगठित गर्ने जुन प्रयासहरू भएका छन् त्यो स्वाभाविक रूपले राम्रो कुरा हो तर त्यसलाई अझ हामीले परिमार्जित गर्नुछ । अझ संगठित गर्नुपर्छ- अझ संमृद्ध गर्नुपर्छ र सुसंस्कृत गर्नुपर्छ । पूँजीपति वर्ग जुन हिसाबले अगाडि बढेको हुन्छ त्यही अनुसार हामी पनि अगाडि बढ्न सकेनौं भने उनीहरूसँग बराबरीमा भिड्न सकिदैन ।

**ट्रेड यूनियनको आलोचना**

सबै कुरा त मलाई थाहा छैन । तपाईंले पत्रिका निकाल्नु भएको पनि यसैपालि मात्र थाहा पाएँ । त्यो पत्रिका हेर्दाखेरि स्तरीय पत्रिका छ, त्यसको धेरै मूल्य पनि पर्छ । पत्रिकाहरू निकालेर सूचित पार्ने कामहरू गर्न अझ बाँकी छ । यहाँ पनि कति मजदुरहरू छन्, कसैको हातमा म अखबार देख्दिन । मजदुर आन्दोलनबारे उनीहरू कुरा गर्दैनन्, किताब पढ्दैनन् । यसले के संकेत गर्छ भन्दा हामीले उनीहरूलाई सुसंस्कृत पार्ने, राजनीतिक रूपमा शिक्षित गर्ने कामहरू गर्न सकेनौं कि जस्तो लाग्छ ।



जस्तो कि पहिले-पहिले हामी श्रमिकको बारेमा अथवा देशको मजदुर आन्दोलनको बारेमा पाएको एउटा पत्रिकालाई पनि सबै जनाले पढ्थ्यौं । एक जनाले पढ्थ्यो सबै जनाले सुन्थे । पत्रिका चोरी-चोरी ल्याउनु पर्ने थियो । अहिले त खुला ढंगले पत्रिका बेच्दाखेरि पनि पत्रिका पढ्दैनन् । यो हाम्रो कमजोरी पक्ष जस्तो मलाई लाग्छ । मजदुरहरू जहिलेसम्म बौद्धिक रूपमा अगाडि बढ्न सक्दैनन् तब सम्म समाजमा परिवर्तन गर्ने भूमिका, राज्यसत्ता कब्जा गर्ने- समाजवाद ल्याउनु पर्छ भन्ने कुरा बुझ्दैनन् । त्यसपछि त पूँजीपतिले चाहेको जस्तै हुने भई हाल्यो-तिमीहरू त मजदुर हौ, राजनीति नगर भन्नु र हामीले पनि राजनीति नगर्नु भनेको सरोवरी हुने भइहाल्यो । यसले त पूँजीपति वर्गलाई नै सहयोग गर्ने भएको हुनाले त्यसमा अलिकति बढ्ता ध्यान दिनु पर्ने म अनुभव गर्छु ।

**राजनीतिक पार्टीले के गर्नुपर्थ्यो ?**

विभिन्न मजदुर संगठनहरूको बीचमा अन्तरक्रिया गर्नु पर्छ । राजनीतिक विश्वास फरक-फरक होला, हाम्रा संगठनहरू फरक फरक होलान् । तर साझा समस्याहरू पनि त छन् । ती समस्याहरूलाई साझा ढंगले आन्दोलनबाट समाधान गर्नको निम्ति बरोबर बैठकहरू हुनु पर्छ । जहाँसम्म सदनमा श्रम ऐनको बारेमा बिल (२०४८ सालको विधेयक) प्रस्तुत भयो, हामीले सदनमा के राख्यौं भन्ने कुरा हाम्रा मजदुर साथीहरूलाई थाहा रहेनछ । हामीले त्यो बिल प्रस्तुत गर्नुभन्दा पहिले नै कारखाना-कारखानामा गएर- "...हामीले बिल पेश गर्दैछौं, हामीलाई समर्थन चाहिन्छ, यो बिल पास भएपछि हामीलाई यति यति फाइदा हुन्छ" भनेर उनीहरूलाई सचेत पार्ने काम गर्नु पर्ने रहेछ जस्तो लाग्यो मलाई । त्यति गरेपछि संसदमा गएर हाम्रा प्रतिनिधिले हाम्रो निम्ति आवाज उठाएका छन् है भनेर उनीहरूले पनि बुझ्ने थिए । अनि संसदमा के भो, पूँजीपति वर्गले हामीलाई के र किन दिएन भनेर ठूला ठूला मास मिटिङहरूमा जाँदा वर्गीय चेतना, वर्गीय भावना विकास हुने थियो । मजदुरहरूको कुरा पास भएन भने "यो संसद भनेको पूँजीपति वर्गको थलो रहेछ, हामी मजदुरहरूको कुरा पास भएन" भनेर मजदुर आन्दोलनलाई अगाडि बढाउन पनि हामीलाई सहयोग हुन्थ्यो । त्यसमा हामी अलिकति पछि पऱ्यौं कि?

मलाई लाग्छ यो विषयमा सोचेर अन्तरक्रिया होस्, आ-आफ्ना अनुभव पनि आदान-प्रदान हुन्छ । त्यसले नेपालको मजदुर आन्दोलनलाई पनि हित गर्छ । अर्को कुरा महिलाहरूको मजदुर आन्दोलनको बारेमा पनि हामीले ध्यान दिनु पर्छ । अहिले त महिला शिक्षा पनि अगाडि बढिरहेको छ, एसएलसी पास गर्ने दिदी-बहिनीहरू पनि धेरै भयो, काम पाउँदैनन्, हामीले तालिम दिएका छैनौं । ...शहरहरूमा दुई दुई जना तीन तीन जना हाम्रा महिला दिदी-बहिनीहरूले काम पाएपछि एउटा ठूलो महिलाहरूको पंक्ति तयार हुन्छ । यसबाट हाम्रा मजदुर आन्दोलनको ठूलो शक्ति तयार हुन्छ । यसलाई पनि हामीले ध्यान दिउँ, नयाँ फोर्सलाई मजदुर आन्दोलनमा सञ्चालन गर्न सजिलो हुन्छ भन्ने मलाई लाग्छ ।

**नेपाल ट्रेड यूनियन महासंघप्रति टिप्पणी**

ट्रेड यूनियन महासंघले सबै विचारसँग सम्बन्धित पार्टी र संगठनहरूसँग मजदुर आन्दोलनको विषयमा चाख राख्नुभयो र काम गर्नु भयो, त्यो साह्रै सह्रानीय छ । एक आपसमा हामीले आफ्ना अनुभवहरू आदान-प्रदान गर्न पाएको खण्डमा मजदुर आन्दोलनकै हित हुन्छ र त्यसले देश र जनताको हित हुन्छ । हाम्रो राजनीतिक उद्देश्यमा पनि यसबाट सहयोग पुग्छ भन्ने मलाई लाग्छ । यसको निम्ति धेरै धन्यवाद पनि छ ।

# उद्योग रहे मात्र ट्रेड यूनियन रहन्छ हुँदैन



**श्री विनोद बहादुर श्रेष्ठ, कार्यवाहक अध्यक्ष-नेपाल उद्योग बाणिज्य महासंघ**

**विगत १२ वर्षमा श्रमबजार**

बितेका १२ वर्षको अवधिमा नेपालको श्रम बजारको आकार संख्यात्मक रूपले ठूलो भए पनि रोजगारी उल्लेखनीय रूपमा बढ्न सकेको पाइँदैन । संगठित क्षेत्रमा उद्योगको संख्यामा वृद्धि भए पनि रोजगारीको दर करिव-करिव स्थिर जस्तै छ । श्रम बजारमा मध्यम-स्तरीय प्राविधिक जनशक्तिले केही हदसम्म रोजगारी पाएको र सेवा क्षेत्रमा महिला रोजगारी बढेको देखिन्छ । महिला श्रमिकको श्रम बजारमा प्रवेश समेतको कारण माग भन्दा आपूर्ति अत्यधिक भएकोले श्रमिकको सौदावाजी गर्ने क्षमतामा कमी, कम ज्यालामा काम गर्नु पर्ने बाध्यता एवं असगंठित क्षेत्रमा श्रमिकको प्रवाह बढ्न गएको छ । यसबाट श्रमिकको जीवनस्तरमा खासै सुधार हुन सकेको छैन र श्रमिकहरू श्रम बजारमा रोजगारीका अवसर बढ्न नसकेकोले रोजगारी गुम्ने भयले चिन्तित देखिन्छन् । आर्थिक गतिविधिमा हालका वर्षहरूमा आएको मन्दीले श्रमिक कटौतीको संभावना झन् बढ्न गएको छ । बितेका वर्षमा श्रम बजारमा माग र आपूर्ति बीचको असन्तुलन कम गर्न प्रभावकारी नीति र रणनीतिको अवलम्बन हुन सकेन । अस्थिरता र अन्योलका कारण वाञ्छित रूपमा लगानी बढ्न नसकी श्रम बजारमा खासै सुधार हुन सकेन ।

**ट्रेड यूनियनहरूको काम र भूमिका**

ट्रेड यूनियनको काम र भूमिकामा निश्चित रूपमा श्रम बजारको अवस्थाले ठूलो प्रभाव पार्दछ । श्रम बजारमा कामको अवसरको कमी र बढ्दो वेरोजगारीको स्थितिमा ट्रेड यूनियनको भूमिका सुविधा वृद्धि भन्दा पनि उद्योगको उत्पादकत्व वृद्धिमा बढी केन्द्रित हुनुपर्ने हो । ट्रेड यूनियनले कामदारहरूलाई उनीहरूका अधिकारबारे जनचेतना वृद्धि गर्ने काम गरे तापनि कार्य संस्कृतिको विकासमा खासै जोड दिन सकेको पाइँदैन । ट्रेड यूनियनहरू पेशागत हितको संरक्षणका साथै उद्योगको विकास र विस्तार प्रति जिम्मेवार रहनु पर्दछ ।

**रोजगारदाता र सरकारको भूमिका**

असल औद्योगिक सम्बन्धको विकास र प्रवर्द्धनमा सरकार, रोजगारदाता र ट्रेड यूनियन सबै पक्षले आ-आफ्नो तर्फबाट जिम्मेवारीपूर्ण भूमिका निर्वाह गर्नु पर्दछ । बितेका १२ वर्षमा सरकारी पक्षबाट श्रम क्षेत्रका लागि स्पष्ट नीति र दिशानिर्देश हुन सकेको छैन । बजारमुखी अर्थतन्त्रमा सरकारको भूमिका क्रमशः सहजकर्ताको रूपमा सीमित राखी न्यूनतम नियन्त्रण हुनु पर्दछ ।

रोजगारदाताहरूमा व्यवस्थापन कार्यशैली र सोचमा फरक आएको छ तापनि मानव संसाधनको विकासमा उचित ध्यान जान सकेको छैन ।

राजनीतिक पार्टीहरूले ट्रेड यूनियनलाई भोट बैंकको रूपमा सोच्ने चलन रहेको छ । पार्टीले आफ्नो उद्देश्य पूर्तिका लागि ट्रेड यूनियनलाई पार्टीको अंग सरह लिनु हुँदैन । ट्रेड यूनियनहरू राजनीतिक पार्टीको नजिक रहने यथार्थमा भए पनि पार्टीकै अंग सरह प्रस्तुत हुने प्रवृत्तिले यूनियनहरू पेशागत संगठनको रूपमा सशक्त भूमिका निर्वाह गर्न सफल हुन सक्दैनन् । यो प्रवृति नेपालका ट्रेड यूनियनहरूमा पनि विद्यमान छ ।

**ट्रेड यूनियनहरूलाई जस दिने**

ट्रेड यूनियनको प्राथमिक कार्य पेशागत हित भए पनि उद्योग रहे मात्र ट्रेड यूनियन रहन्छ भन्ने कुरालाई बिर्सनु हुँदैन । रोजगारदाता र ट्रेड यूनियनको कार्य हरेक दृष्टिकोणबाट भिन्न हुन सक्दैन । उद्योगको उत्पादकत्व वृद्धि र प्रतिस्पर्धा क्षमता बढाउन ट्रेड यूनियनको भूमिका अहम् विषय हो । श्रमिकलाई सशक्तीकरण गर्ने कार्यका अलावा उद्योगको समग्र विकासका लागि ट्रेड यूनियनहरूबाट संचालित गतिविधि र प्रदर्शित व्यवहारका लागि ट्रेड यूनियनहरूलाई जस दिनु पर्दछ ।

**ट्रेड यूनियनका कमी-कमजोरीहरू**

ट्रेड यूनियनहरू आफ्नो दायित्व निर्वाह गर्न कति सफल र असफल छन्, उनीहरूको कमी-कमजोरीको पहिचान यसैबाट हुने गर्दछ । अनुभवको कमीले कार्यशैलीमा कमी-कमजोरी रहे पनि यसमा क्रमिक सुधारको संकेत देखिएको छ । संक्षेपमा भन्नु पर्दा ट्रेड यूनियनहरूमा निम्न कमी कमजोरीहरू रहेको पाइन्छ ।

(१) राजनीतिक पार्टी र आस्थाबाट बढी मात्रामा निर्देशित ।
(२) वर्गीय हितको नाममा स-साना कुरालाई मुद्दा बनाएर प्रस्तुत हुने प्रवृत्ति ।
(३) कामदार श्रमिकको सीप विकास र उनीहरूको अवस्था सुधारका लागि क्रियाशील हुन नसकेको ।
(४) राजनीतिक कारणबाट विभाजित ।
(५) आर्थिक मागलाई मात्र चर्को रूपमा उठाउने ।
(६) रोजगारदाताको विरोध गर्न पछि नपर्ने तर राम्रा पक्षको सराहना, सहयोगको लागि प्रस्तुत हुन नसकिरहेको ।

**श्रमिक खवरको प्रकाशन सम्बन्धमा**

श्रम सम्बन्धमा विविध पक्षको विश्लेषणात्मक प्रस्तुति, विभिन्न रोचक एवम् सूचनामूलक सामग्री सहितको प्रकाशन अत्यन्त सराहनीय छ । यसको निरन्तरताको कामना गर्दछु ।



# दलगत स्वार्थका लागि मजदुरहरूलाई प्रयोग गरिनु दुर्भाग्यपूर्ण रह्यो

श्री राजेन्द्र खेतान, प्रथम उपाध्यक्ष-नेपाल उद्योग बाणिज्य महासंघ

**१२ वर्षमा हाम्रो श्रम बजार**

विगत १२ वर्ष श्रम बजार प्रवर्धनका लागि अधिक महत्त्वपूर्ण समय रह्यो। यो अवधिमा श्रमिकको रोजगारीको सुरक्षाको एवं रोजगारीको अवसरहरू व्यापकरूपमा वृद्धि हुनुका साथै रोजगारको संख्यामा समेत वृद्धि हुन गयो। यस अवधिमा रोजगारदाता एवं श्रमिकहरूको बीचमा आपसी समझदारीमा अभिवृद्धि हुन गई सम्बन्ध प्रगाढ हुन गएको छ।

उपरोक्त उपलब्धिहरू हुँदा हुँदै पनि अझ त्रिपक्षीय (श्री ५ को सरकार, ट्रेड यूनियन र रोजगारदाता) रूपमा कार्यगत एकता रहेको खण्डमा मजदुर यूनियन र रोजगारदाताको बीचमा दुरी कम हुन गई कामका प्रकृति अनुसारका मौसमी, दक्ष एवं अदक्ष जस्ता श्रमिकहरूको स्पष्ट परिभाषा गरी मुलुकमा विद्यमान वेरोजगारको स्थितिलाई श्रम बजारको माध्यमबाट व्यवस्थित एवं भरपर्दो बनाउन सकिने थियो।

विभिन्न समयहरूमा भिन्ना-भिन्नै कारण एवं तरिकाले गरिने हडतालहरूले लगानीकर्तामा असामञ्जस्यताको स्थिति पैदा हुन गई वामे सर्दै गरेको औद्योगीकरणको गति नै पछि पर्न गई रोजगारीका अवसरहरू समेत न्यून हुन गएको फलस्वरूप रोजगारदाताले पनि रोजगारीको सुरक्षालाई महत्त्व दिएको कुरा नकार्न सकिंदैन।

**ट्रेड यूनियन, रोजगारदाता, राजनीतिक पार्टी र सरकारको भूमिका**

विशेषतः सबै तहबाट त्रिपक्षीय (श्री ५ को सरकार, ट्रेड यूनियन र रोजगारदाता) एवं द्विपक्षीय (रोजगारदाता र ट्रेड यूनियन) अवधारणा स्वीकार गरी सो अनुरूप ट्रेड यूनियनहरूले सह्राहनीय भूमिका निर्वाह गरेको कारणले सक्षम एवं काम गर्ने वातावरण तयार हुनुको साथै उत्पादकत्व, व्यवसायजन्य सुरक्षा तथा स्वास्थ्य जस्ता अवधारणाहरूमा उल्लेखनीय विकास भएको छ।

औपचारिक क्षेत्रमा न्यूनतम ज्याला (तलब) को निर्धारण गर्नुका साथै हरेक तहमा त्रिपक्षीय (श्री ५ को सरकार, ट्रेड यूनियन र रोजगारदाता) तथा द्विपक्षीय (रोजगारदाता र ट्रेड यूनियन) को भूमिकालाई स्वीकार गरिनु पनि एउटा उल्लेख्य पक्ष रह्यो। यसैगरी श्री ५ को सरकार तथा रोजगारदाताहरूले औपचारिक रोजगारका क्षेत्र व्यवस्थित गर्न ठोस भूमिका निर्वाह गरेको पाइयो।

तर, श्रम बजारलाई व्यापक बनाउने कुरामा कुनै पक्षको पनि विशेष ध्यान पुगेको पाइएन, जसले गर्दा युवा जनशक्तिद्वारा अपेक्षा गरिएको रोजगारीको अवसरबाट धेरैले वञ्चित रहनु पर्‍यो।

अन्त्यमा राजनीतिक दलहरूले आफ्ना दलगत स्वार्थका लागि मजदुरहरूलाई प्रयोग गरिनु दुर्भाग्यपूर्ण रह्यो भन्नु अत्युक्ति नहोला।

**ट्रेड यूनियनलाई दिइने जस**

ट्रेड यूनियनले मजदुरहरूलाई आफ्नो हक एवं अधिकारका बारेमा जागरुक बनाउनुको साथै कार्यगत क्षेत्रसम्म निजहरूको नेतृत्व विकास एवं निर्माणमा पुर्‍याएको योगदान सह्राहनीय एवं महत्त्वपूर्ण छ।

**ट्रेड यूनियनप्रति आलोचना**

ट्रेड यूनियनहरूद्वारा कहिलेकाहीं व्यापारका आर्थिक अवस्थाका बारेमा गलत अनुमान लगाई त्यस्तो अवस्थामा आर्थिक मागहरू राखी आफ्नो क्रियाकलाप सीमित राख्नाले रोजगारी प्रवर्द्धनमा नै असर पर्न गएको देखिएको हुँदा यस प्रकारको क्रियाकलाप निरुत्साहित हुनु पर्दछ।

**नेपाल ट्रेड यूनियन महासंघप्रतिको धारणा**

एउटा बलियो संगठित संस्था जसले श्रमिकहरूलाई सेवा प्रदान गरिरहेको छ तथा त्यसका संचार माध्यमले भविष्यप्रति आस्थावान श्रमिक बनाउने काममा योगदान पुर्‍याउनुका साथै गतिशील श्रमिक संसार निर्माणमा महत्त्वपूर्ण योगदान पुर्‍याइरहेको पाएको छ।



# औद्योगिक सम्बन्ध विकासका लागि नीतिगत रूपमा स्पष्ट हुन सकेको छैन

श्री सुरज वैद्य, सभापति-रोजगारदाता परिषद्, नेपाल उद्योग बाणिज्य महासंघ

**श्रम बजार**

नेपालको श्रम बजार ज्यादै असन्तुलित छ। विगत १२ वर्षको अवधिमा संगठित क्षेत्रले उल्लेखनीय रूपमा रोजगारीका थप अवसरको सृजना गर्न सकेको पाईंदैन। असंगठित क्षेत्रमा रोजगारीको चाप बढेको र यसबाट अर्ध वेरोजगारीको संख्या बढ्नुको साथै श्रमिकले उचित ज्याला माग गर्ने क्षमतामा कमी आएको छ। श्रम बजारमा रहेको बेरोजगार जनशक्तिलाई रोजगारी दिन लचिलो कानुनी तथा नीतिगत सुधार हुनुपर्नेमा सो हुन सकेको छैन।

**ट्रेड यूनियनहरूको भूमिका**

बढी राजनीतिमुखी हुन नहुने। ट्रेड यूनियनले आर्थिक सामाजिक वातावरणका साथै श्रम बजारको स्थिति हेरी व्यवहारिक भूमिका निर्वाह गर्न आफूलाई तयार गर्नु पर्दछ। यसो नभएमा ट्रेड यूनियन पेशागत हिसाबले बलियो हुन सक्दैन। श्रमिक हक हितको साथै उद्योग-प्रतिष्ठानको विकासमा पनि ट्रेड यूनियन उत्तिकै चिन्तित रहनु पर्दछ।

**रोजगारदाता र सरकारको भूमिका**

रोजगारदाता पक्षले ट्रेड यूनियनलाई सहयात्रीको रूपमा सहजरूपमा लिनु पर्ने हुन्छ। हाम्रो सोच र व्यवहारमा अझै परिवर्तन हुन बाँकी देखिन्छ। हाम्रो अभ्यास त्यति लामो नभएकाले यसमा केही कमीहरू भए पनि आपसी छलफल र संवादका माध्यमबाट आपसी विश्वास सृजना गर्न रोजगारदाता क्रियाशील भएको पाइन्छ।

सरकारी पक्ष औद्योगिक सम्बन्ध विकासका लागि नीतिगत रूपमा स्पष्ट हुन सकेको छैन। आफ्नो भूमिकालाई कुन रूपमा अघि बढाउने, नियन्त्रण र नियमित कसरी गर्ने द्विविधा रहेको पाइन्छ।

**राजनीतिक पार्टीहरूको भूमिका**

राजनीतिक पार्टीहरूले ट्रेड यूनियनलाई आफ्नै अङ्ग ठान्ने र आफ्नो स्वार्थमा प्रयोग गर्ने चलन छ। ट्रेड यूनियनहरू राजनीतिक पार्टीको नजिक बस्न चाहने र संरक्षण खोज्नु सीमित रूपमा स्वभाविक भए पनि बढी राजनीति उन्मुख ट्रेड यूनियन आन्दोलनले आजको वातावरणमा सकारात्मक परिणाम ल्याउन सक्दैन। राजनीतिक पार्टीहरूले ट्रेड यूनियनलाई अनावश्यक रूपमा प्रयोग गर्नु हुँदैन। उनीहरूका गतिविधिमा बढी चासो राखी आफ्ना अनुकूल गराउन खोज्नु ट्रेड यूनियनकै विकासका लागि पनि बाधक हुन सक्दछ।

**ट्रेड यूनियनलाई जस दिने**

ट्रेड यूनियनहरू आफ्नो भूमिका निर्वाह गर्न सक्षम र सवल हुनुपर्दछ। आफ्नो वर्गीय एवं पेशागत हितका साथै ट्रेड यूनियनको भूमिका उद्योगको उत्पादकत्व वृद्धिमा केन्द्रित रहनु पर्दछ। कामदारलाई अनुशासित बनाउने, कार्य संस्कृतिको विकास गर्ने र उद्योगको उत्थानको लागि संचालन गरिने कार्यक्रम र रचनात्मक सुझाव र सहयोगका लागि ट्रेड यूनियनहरूलाई जस दिनु पर्दछ।

**ट्रेड यूनियनका कमी कमजोरीहरू**

विगत १२ वर्षको अवधिमा ट्रेड यूनियनहरूले खुलारूपमा काम गर्न पाएका छन्। यस अवधिमा अनुभवको कमी-कमजोरीहरू पनि देखिएका छन्। यो कुरा रोजगारदाता पक्षमा पनि छ। संक्षेपमा भन्नुपर्दा ट्रेड यूनियनहरूमा निम्न कमी-कमजोरीहरू रहेको पाइन्छ -

१. उद्योगको स्थिति र अन्य वातावरणको अध्ययन नगरी मागदावीमा मात्र जोड दिनु
२. राजनीतिक आग्रह र पूर्वाग्रह रहनु
३. रोजगारदाता वा व्यवस्थापनको विरोध मात्र गर्नु तर ठीक कुरामा समर्थन गर्न नसक्नु
४. स-साना विषयमा विवाद उठाउनु
५. सुविधा बढाउन दवाव दिने बाहेक उत्पादकत्व वृद्धिका लागि प्रतिबद्धता नदेखाउनु
६. सहयोगी-सहयात्रीको भूमिका न्यून रहनु

**श्रमिक खवर पत्रिका सम्बन्धमा**

सूचनामूलक विविध सामग्री समावेश गरिएको पत्रिकाको प्रकाशन प्रशंसनीय छ। म यो पत्रिकाको प्रगति र निरन्तरताको कामना गर्दछु।



# विगतमा जे जति त्रुटिहरू भए पनि तिनीहरू मानवीय कमजोरी हुन्

**श्री ललित बहादुर थापा-महानिर्देशक, श्रम तथा रोजगार प्रवर्द्धन विभाग**

**श्रमिक खवर एक समीक्षा**

नेपाल ट्रेड यूनियन महासंघले प्रकाशित गर्दै आएको श्रमिक खवर ७४ औं अंक पूरा गरी ७५ औं अंकमा अर्थात् हिरक अंकमा प्रवेश गर्न लागेको सुन्दा खुसी लागेको छ। श्रम क्षेत्रमा प्रकाशित हुने समाचारमूलक एवं वैचारिक पत्रपत्रिकाहरूको निकै अभाव छ। यो अभावलाई श्रमिक खवरले केही हदसम्म पूरा गर्दै आएको हो। यसले यति लामो प्रकाशनलाई निरन्तरता दिनु आफैमा खुसीको कुरा हो। यसै प्रसँगमा विगत अंकहरूले समेटेका मूलभूत विषयहरूतर्फ एक दृष्टि दिएर हेर्दा देखा परेका केही विषयहरूका आधारमा यो समीक्षा गर्ने प्रयास गरिएको हो।

प्राप्त श्रमिक खवरका विगत अंकहरू हेर्दा विभिन्न समसामयिक समाचारहरूलाई उच्च प्राथमिकता प्रदान गर्दै प्रकाशित गरिएको देखिन्छ। प्रकाशनभित्र नेपालमा विद्यमान श्रम सम्बन्धको अवस्था, औद्योगिक शान्ति र त्यसका लागि आवश्यक सैद्धान्तिक पक्षहरू, व्यवहारमा देखिएका समस्या र समाधानका लागि गरिएका प्रयासहरू यसभित्र उल्लेख पाइन्छ। विद्यमान नेपालको कृषि क्षेत्रको अवस्था, कृषि मजदुरहरूको अवस्था, कृषि श्रमिकहरूको पक्षमा गरिएका प्रयासहरू र यसमा सुधारका लागि गरिनु पर्ने वैचारिक आधारहरूलाई समेत श्रमिक खवरहरूले समेट्दै आएको पाइन्छ।

नेपालको श्रम क्षेत्रमा संगठित प्रतिष्ठानहरूको अवस्था, त्यहाँ काम गर्ने कामदार कर्मचारीहरूको अवस्था र सुधार गर्नु पर्ने समाधानका उपायतर्फ पनि श्रमिक खवरले आफ्ना विचारहरू राख्दै आएको छ। नेपालको वैदेशिक रोजगारीको अवस्था, व्यवस्था र त्यसमा विद्यमान समस्या र समाधानका उपायहरू उल्लेख गर्ने कार्यमा पनि यो प्रकाशन निकै सबल रूपमा देखा पर्दछ।

अन्तरराष्ट्रिय क्षेत्रमा आएका व्यवस्थापकीय परिवर्तनहरू, भूमण्डलीकरणको सन्दर्भमा ट्रेड यूनियन मुभमेन्टमा आएका परिवर्तनहरू, त्यसले दिएका दिशाबोधहरू तथा त्यस परिप्रेक्ष्यमा नेपालको विद्यमान अवस्थालाई पनि श्रमिक खवरका अंकहरूले समेट्न सफल भएका छन्।

नेपालमा विद्यमान ट्रेड यूनियन अभियान र त्यसमा देखा परेका बाधा-व्यवधानहरू र समाधानका दिशामा चालिनु पर्ने कदमहरूको बारेमा पनि सशक्त अभिव्यक्तिहरू देखा परेका छन्। ज्याला-मजदुरी एवं न्यूनतम ज्याला, सेवाशुल्क आदिको विषयमा पनि प्रकाशन अगाडि बढेको छ।

सरकार, व्यवस्थापन, र ट्रेड यूनियनहरू बीच विद्यमान सम्बन्ध, त्यसमा हुनुपर्ने सुधारहरू, श्रम कानूनका विद्यमान अवस्था र त्यसमा आउनु पर्ने सुधारहरू आदिको विषयमा पनि श्रमिक खवरले ट्रेड यूनियन महासंघका आफ्ना विचारहरू प्रस्तुत गर्न सफल भएको छ।

श्रमको क्षेत्रमा महिला र बालबालिका सम्बन्धी समस्या र समाधानका विषयहरू, लैङ्गिक विभेद र त्यसमा समानता कायम गर्ने विषयहरू पनि त्यत्तिकै सशक्त रूपमा अघि बढाउँदै भूमि, भूमिहीन किसान, कमैयाप्रथा, भूमिसुधार जस्तो मूलभूत विषयहरूलाई पनि प्रकाशनले विषयवस्तुभित्र समावेश गरेको पाइन्छ।

त्यसैगरी मानव, श्रम वैज्ञानिक खोज, श्रम क्षेत्रमा समर्पित राष्ट्रिय तथा अन्तरराष्ट्रिय व्यक्तित्वहरूको परिचय, अन्तरराष्ट्रिय क्षेत्रमा आएका श्रमिक अवधारणाहरू, अन्तरराष्ट्रिय क्षेत्रका श्रमिक संघ-संस्थाहरूको परिचय जस्ता विषयहरू पनि समावेश भएको पाइन्छ। त्यसैगरी व्यवसायजन्य स्वास्थ्य, सुरक्षा र रोगहरूको परिचय र त्यसबाट बच्न अपनाउनु पर्ने विविध पक्षहरूको प्रस्तुति पनि त्यत्तिकै सशक्त रूपमा राखिएको देखिन्छ।

त्यसैगरी श्रम क्षेत्रमा विद्यमान नव प्रविधि र ट्रेड यूनियन विषयहरू प्रस्तुत गर्दै आधुनिक प्रविधिको जानकारी समेत यसले दिँदै आएको छ। आइएलओ तथा यसको भूमिका र नेपाली श्रम क्षेत्रमा भए-गरेका कार्यहरूको प्रस्तुति पनि समेटेको पाइन्छ।

नेपाल भित्र विद्यमान बाँधाप्रथा, कमैयाप्रथा जस्ता विकृति र विसँगतिहरूको सम्बन्धमा आफ्ना अवधारणाहरू प्रस्तुत गर्दै श्रमिक खवरले श्रमसँग सम्बन्धित विभिन्न नीति कथाहरू समेत प्रस्तुत गरेको देखिन्छ। यसले सामाजिक सुरक्षाको क्षेत्रमा भए गरेका कामहरू, विद्यमान अवस्था र हुनुपर्ने सुधारहरूको सम्बन्धमा पनि विभिन्न समाचार र विचारहरू प्रस्तुत गर्दै आएको देखिन्छ। यसरी श्रमिक खवरले समेट्न खोजेका मूलभूत विषयहरू यिनै हुन्। अन्य विषय साना-तिना रूपमा समेटिएको देखिए तापनि यहाँ उल्लेख गरिरहनु आवश्यक नपर्ला। नेपालको श्रम प्रकाशनको क्षेत्रमा यो पत्रिका आफैमा एउटा इतिहास बनिसकेको छ। यसमा जे जति प्रस्तुतिहरू भएका छन् तिनीहरूको प्रशंसा नगरिरहन सकिन्न। तर पनि यसले समेट्नु पर्ने कुरा धेरै छन्। जसलाई आगामी प्रकाशनहरूले साधन स्रोत र जनशक्तिको विकास सँगसँगै समेट्दै जानेछ भन्ने मलाई पूर्ण विश्वास छ।

**श्रम बजार**

विगत बाह्र वर्षमा हाम्रो श्रम बजार परिवर्तन पश्चात स्वाभाविक रूपमा आउने संक्रमण कालबाट गुज्रिन पुग्यो। नेपाल अधिराज्यको संविधान २०४७ ले दिएको संगठन गर्ने अधिकार र त्यस अन्तर्गत आएका विभिन्न श्रम कानूनले ट्रेड यूनियन अभियानलाई तीव्र गतिले अगाडि बढायो। विश्वमा आएका नयाँ अवधारणा, सूचना प्रविधिको विकास, भूमण्डलीकरण, खुला तथा उदार बजारमुखी अर्थव्यवस्थाको विकास जस्ता कुराहरूले श्रम क्षेत्रलाई जुन रूपमा प्रभावित पार्दै गयो, त्यसै रूपमा हाम्रो श्रम बजार विकसित एवं व्यवस्थित हुनुपर्थ्यो, तर त्यस्ता कार्यहरू हुन सकेनन्। भएका कार्यहरू पनि परिवर्तनको गति सँगसँगै गतिशील हुन सकेनन्।

**ट्रेड यूनियनको भूमिका**

ट्रेड यूनियनहरूले विगत बाह्र वर्षको अवधिमा आफूलाई विस्तारित गर्दै संगठित हुने कार्य तीव्र गतिले अगाडि बढाए। तर यो विस्तार सँगसँगै ट्रेड यूनियनहरूले आफूलाई राजनीतिक धरातलभित्र बढी आबद्ध गर्दै लगेको अनुभव गरियो। वास्तवमा ट्रेड यूनियनहरू राजनीतिभन्दा श्रमिक हकहितमा एकत्रित, समन्वित र विस्तारित हुँदै एकैसाथ संगठित एवं संस्थागत रूपमा आफूलाई विकसित गर्नेतर्फ क्रियाशील हुनु पर्थ्यो। माथि उल्लेखित परिवर्तनको सन्दर्भमा ट्रेड यूनियनहरूले आफ्ना सोच र कार्यक्रमहरूलाई समसामयिक रूपमा परिवर्तित गर्दै परिवर्तनसँग एकीकृत गर्दै जानु पर्दथ्यो।

**रोजगारदाताको भूमिका**

त्यसैगरी रोजगारदाताहरूले एकाएक तीव्र गतिले उपरोक्त पृष्ठभूमिमा बढ्दै गएको ट्रेड यूनियन अभियानलाई एउटा बाधक तत्वको रूपमा स्वीकार गरेको अनुभूति भयो। तर ट्रेड यूनियन रोजगारदाताहरूको विरोधी वा बाधक तत्व नभएर सहयोगी र साधक तत्वको रूपमा आएको हो भन्ने अनुभूति गर्नु पर्दथ्यो। यस्तो अनुभूति ट्रेड यूनियनहरूले पनि दिलाउन सक्नु पर्दथ्यो। जुन कार्य हुन सकेन। जसले गर्दा औद्योगीकरणको दिशामा श्रमसम्बन्ध एउटा बाधक तत्वको रूपमा प्रस्तुत हुन आएको छ।

**सरकारको भूमिका**

त्यसैगरी सरकारले पनि विद्यमान ऐन-नियमहरूको तर्जुमा हुँदैमा समस्याको समाधान हुन्छ भन्ने अनुभूति लिएर बस्ने मात्र होइन प्रत्येक ऐन कानूनहरूको कार्यान्वयन छिटो-छरितो निष्पक्ष एवं प्रभावकारी रूपमा गर्नु पर्दथ्यो र कार्यान्वयनको क्रममा देखा परेका कठिनाइहरूलाई संशोधन गर्दै श्रमिक र रोजगारदाता बीच सुमधुर एवं आत्मीय सम्बन्ध स्थापित गर्ने दिशामा मध्यस्थता एवं सहजकर्ताको भूमिका निर्वाह गर्दै औद्योगीकरणका बाधा र व्यवधानहरूको निराकरण तथा रोजगारीका पर्याप्त अवसरहरू सृजना गराउनु पर्दथ्यो। यिनै कमी-कमजोरीहरूलाई केलाउँदै अहिले सरकार सुधारको दिशामा तीव्र रूपले क्रियाशील बनेको छ।

**राजनीतिक पार्टी**

त्यसै गरी राजनीतिक दलहरूले ट्रेड यूनियनहरूलाई आफ्ना भातृ संगठनको रूपमा डोऱ्याउने प्रयास गर्नुको सट्टा वृहद् राष्ट्रिय हितको परिप्रेक्ष्यमा ट्रेड यूनियनहरूलाई स्वतन्त्र एवं निष्पक्ष रूपमा क्रियाशील हुन दिनु पर्दथ्यो।

**जिफन्ट बारे**

अन्त्यमा, विगतमा जे-जति त्रुटिहरू भए पनि तिनीहरू मानवीय कमजोरी हुन्। साथै परिवर्तन पछि आएको संक्रमणकालजन्य विकृति र विसँगति हुन्। यिनीहरूलाई सच्याउँदै अब नेपालले नयाँ एवं समुन्नत राष्ट्रको निर्माणमा अगाडि बढ्ने वेला आएको छ। विगतमा ट्रेड यूनियनहरूले राष्ट्रियस्तरमा श्रम चेतना र श्रमिक हक-हितको क्षेत्रमा जुन जागरण ल्याउने सम्वाहक भूमिका निर्वाह गरेका छन् त्यसलाई मुक्त कण्ठले प्रशंसा नगरी रहन सकिन्न।

# प्रजातन्त्रको आगमन पछि सरकारको भूमिका अस्पष्ट रहन पुग्यो

**डा. नारायण मानन्धर,**
**कार्यकारी निर्देशक,**
**औद्योगिक सम्बन्ध मञ्च**



**श्रम बजार**

धेरै वर्ष अगाडि देखि नै नेपालको श्रम बजारमा श्रमको माग भन्दा आपूर्ति पक्ष बढिरहेको छ। यसले गर्दा श्रमिकहरूको सौदावाजी गर्ने क्षमतामा ह्रास आई ज्याला दर न्यूनतम तहमा हुनु, कार्य अवस्थामा खासै सुधार नदेखिनु र श्रमिकहरूले आफ्नो रोजगारीबारे सधैं असुरक्षित महसुस गरिराख्नु परेको छ। श्रम बजारमा संगठित/औपचारिक क्षेत्र भन्दा असंगठित/अनौपचारिक क्षेत्रको बाहुल्य हुनु पनि यही माग र आपूर्ति पक्ष बीच रहेको असन्तुलनले गर्दा हो। श्रम बजारमा आपूर्ति पक्ष धेरै रहनुमा हाम्रै जनसंख्या वृद्धि दर उच्च रहनु वा कृषि योग्य भूमि कमी रहनुले भएको हो। यसैबीच हामीले मानव संसाधन विकास (शिक्षा, स्वास्थ्य, सरसफाइ, खानेपानी) मा पर्याप्त लगानी गर्न नसक्नाले पनि श्रम बजारमा प्रवेश गर्ने श्रमिकहरूको सौदावाजी गर्ने क्षमतामा खासै वृद्धि गर्न सकिएन। तीस वर्षको पञ्चायत कालमा ट्रेड यूनियनमाथि लगाइएको प्रतिबन्धले यो समस्यालाई झनै चर्काउन मद्दत गर्यो। श्रम बजारमा गत १२ वर्षमा के भयो भनी मूल्याङ्कन गर्न गाह्रो हुन्छ, जसका कारण जनसंख्या वृद्धि कै प्रभाव पनि करिव १५ वर्ष पछि मात्र देखिने गर्दछ। यही कारणले गर्दा नेपालको कूल गार्हस्थ उत्पादनमा कृषि क्षेत्रको योगदानमा व्यापक कमी आए तापनि नेपालको कुल रोजगारीमा कृषि क्षेत्रको योगदान भने ८०-८५ प्रतिशतको हाराहारीमा नै रहेको देखिन्छ।

**ट्रेड यूनियनको भूमिका**

ट्रेड यूनियनहरूले के गर्नु पर्थ्यो, के गर्नु हुँदैनथ्यो भन्ने प्रसँगलाई माथिकै श्रम बजारको अवस्थासँग दाँजेर हेर्नु पर्दछ। व्याप्त बेरोजगारीको स्थितिमा ट्रेड यूनियनहरू कहिले पनि बलियो हुन सक्दैन। पूर्ण रोजगारीको अवस्थामा मात्र ट्रेड यूनियनहरू बलिया हुन्छन्। त्यसैले व्याप्त वेरोजगारी, अनौपचारिक क्षेत्रको हाली-मुहाली र विभिन्न विचार र सिद्धान्तमा विभक्त ट्रेड यूनियनहरू, त्यो पनि बहुदलीय प्रजातन्त्रको आगमन पछिमात्र खुल्ला रूपमा देखा परेका ट्रेड यूनियनहरूले खासै आफ्नो क्षमता देखाउन सकिराखेका छैनन्। यही अर्थ रोजगारदाताहरूमा पनि लागू हुन सक्छ। तर रोजगारदाताहरूको तुलनामा ट्रेड यूनियन आन्दोलन सशक्त रूपले अगाडि बढिरहेको कुरा आफ्नो व्यक्तिगत अनुभव रहेको छ।

**रोजगारदाता र सरकारको भूमिका**

असल औद्योगिक सम्बन्ध कायम राख्न ट्रेड यूनियन, रोजगारदाता र सरकारको त्यत्तिकै जिम्मेवारीपूर्ण भूमिका रहेको हुन्छ। बहुदलीय प्रजातन्त्रको आगमन पछि सरकारको भूमिका अस्पष्ट रहन पुग्यो। हिजोको निर्देशनात्मक वा नियन्त्रणमुखी प्रशासनलाई बदलिंदो परिवेशमा सहजकर्ता तथा "रेगुलेटोरी"

भूमिकामा प्रस्तुत गर्न सकिएन फलस्वरूप सरकारलाई ट्रेड यूनियनहरूले रोजगारदाताको पक्ष लिएको र रोजगारदाताहरूले सरकारलाई ट्रेड यूनियनहरूको पक्ष लिएको भन्ने जस्तो विरोधाभाषयुक्त आरोप लगाइराखेका छन् ।

रोजगारदाताहरू पनि ट्रेड यूनियन नभई दिए हुन्थ्यो वा २-२ वर्षमा सामूहिक सौदावाजी गर्नु नपरे हुन्थ्यो वा श्रम सम्बन्धी सबै निर्णयहरू सरकारी तहमा नै भइ दिए हुन्थ्यो जस्तो आफूलाई आश्रित रूपमा प्रस्तुत गर्दै आइराखेका छन् ।

**राजनीतिक पार्टीहरूको भूमिका**

ट्रेड यूनियनहरूलाई राजनीतिक पार्टीहरूको अखडा वा अङ्गको रूपमा हेर्ने चलन रहिआएको छ । यसमा केही सत्यता पनि छ र केही भ्रम पनि । सत्यता यस अर्थमा कि नेपालमात्र नभई दक्षिण एशिया कै राजनीतिक इतिहासमा ट्रेड यूनियन आन्दोलन राजनीतिक आन्दोलनको सशक्त परिचालकको रूपमा देखा परे, मजदूर नेताहरू राजनीतिक पदमा आसिन हुन पुगे र फलस्वरूप ट्रेड यूनियन आन्दोलन राजनीतिक आन्दोलनको अभिन्न अङ्ग रहन पुग्यो । जहाँ संगठन हुन्छ, त्यहाँ राजनीतिक विचार हुन्छ । यो ऐतिहासिक सत्य हो । नेपालमा जुनसुकै क्षेत्र पार्टीगत राजनीतिक धरातलमा उभिएकोले ट्रेड यूनियनलाई मात्र राजनीतिक पार्टीको बजारको रूपमा हेरिनु न्यायोचित देखिन्न । ट्रेड यूनियन त्यो बेला सबल हुन्छ जुन बेला राजनीतिक पार्टीले ट्रेड यूनियन चलाउनु भन्दा ट्रेड यूनियन नै राजनीतिक पार्टी चलाउन सक्षम हुन्छ ।

**ट्रेड यूनियनहरूको भूमिका**

असल औद्योगिक सम्बन्धमा दुईवटा साश्वत सत्य हामीले बुझ्नु पर्दछ । पहिलो हो, ट्रेड यूनियन विना पनि रोजगारदाता रहन सक्छ तर रोजगारदाता विना ट्रेड यूनियन रहन सक्दैन । यो तर्कले रोजगारदाताहरूको पल्ला भारी गराउँछ । दोस्रो, प्रत्येक प्रतिष्ठानमा उत्पादकत्व भन्ने कुरा, ट्रेड यूनियनको अभावमा नभई, ट्रेड यूनियनहरूको सशक्त उपस्थितिमा मात्र हुने कुरा वैज्ञानिक अनुसन्धानहरूले प्रष्ट देखाइ सकेको छ । यो तर्कले ट्रेड यूनियनहरूको पल्ला भारी गराउँछ । त्यसकारण ट्रेड यूनियनहरूलाई जस दिने वा नदिने कुरा यसै अर्थमा बुझ्नु जरुरी छ । सरल भाषामा भन्ने हो भने ट्रेड यूनियनहरूले आफ्नो आधारभूत अभियान (वेसिक मिशन) पुरा गर्न अझै समय लाग्न सक्छ । हुन त सरकार र रोजगारदाताहरूबाट हुन सक्ने आ-आफ्नो योगदान बिर्सेर ट्रेड यूनियनले मात्र सीमित कामहरू गर्न सक्छन्, यो कुरा पनि हामीले बुझ्नु जरुरी छ ।

**ट्रेड यूनियनको कमी-कमजोरीहरू**

यो प्रश्न माथिको प्रश्नसँग जोडिएर आउँछ । यद्यपि स्पष्ट रूपमा भन्नु पर्दा ट्रेड यूनियनका कमी-कमजोरीहरू यस प्रकारका छन् । (१) राजनीतिक रूपले विभक्त (२) सांगठनिक कमजोरी (३) औपचारिक क्षेत्रमा मात्र सीमित (४) पेशागत रूपले विभक्त (५) मजदुरहरूको स-साना सुविधा बढाउनुको अलावा खासै सुधार गर्न नसकिएको । (६) रोजगारदाताहरूको विरोध गर्नुको अलावा समर्थन गर्न नसक्नु र अन्तमा: (७) आफ्नो दर्शन प्रष्ट रूपमा राख्न नसक्नु, जस्तै अन्तरराष्ट्रिय श्रम माप दण्डहरूको स्पष्टसँग विरोध वा समर्थन गर्न नसक्नु ।

**श्रमिक खवर पत्रिका सम्बन्धमा**

यसको प्रकाशन तारिफयोग्य छ र यसको निरन्तरताको कामना गर्दछु ।

# श्रम बजारमा पूँजी र श्रमको भिन्नता ल्याउनु हुँदैन

**श्री राजेन्द्र बहादुर राउत,**
**अध्यक्ष, नेपाल प्रजातान्त्रिक ट्रेड यूनियन महासंघ**



**वर्तमान नेपाली श्रम बजार**

विगत बाह्र वर्षको नेपाली श्रम बजारमा प्रजातन्त्रको पुनर्स्थापनासँगै अव्यवस्थित श्रम बजारको व्यवस्थापन हुने खालको थालनी भयो । श्रम ऐन, कानुन तथा नियमावली निर्माण भयो । यसको प्रक्रियागत थालनीबाट हाम्रो मुलुकका श्रम बजारले आशातित उपलब्धिहरू पाउने सम्भावनाहरू देखा परे । विडम्वनाका कुरा के रहचो भने, ती निर्माण भएका श्रम ऐन-कानुन तथा नियमावलीहरू कार्यान्वयन हुन सकेनन् । श्रम बजारलाई व्यवस्थित गर्नुपर्ने निकायहरूले निर्देशित कार्य अनुरूपको प्रक्रियागत संयन्त्र निर्माण गर्न सकेनन् । जसको फलस्वरूप श्रम बजारमा श्रमको उचित मूल्य र मान्यताको सट्टा श्रम बजारको अवमूल्यन सम्बन्धी तथ्याङ्कहरूको तालिकीकरण मात्र हुन थाल्यो । निश्चित मापदण्डका विपरित गरिएका निजीकरणले रोजगारीलाई असुरक्षित बनाउनुका साथै रोजगारी समस्याले श्रम बजार अव्यवस्थित बन्न पुग्यो । संगठित क्षेत्रमा देखिएका ठेकेदारी प्रथाबाट व्यवस्थित अर्थतन्त्र समेत अव्यवस्थित अर्थतन्त्रतर्फ धकेलिंदै गयो । श्रम बजारको समुचित व्यवस्थापन हुने खालका अनुगमन तथा सुपरीवेक्षण सम्बन्धी संयन्त्रको यथोचित विकास नभएको हुँदा आर्थिक उदारीकरण, निजीकरण तथा श्रमको प्रतिस्पर्धात्मक कार्यले पूँजी पलायन हुन पुग्यो । श्रमको अधिक शोषण, अधिक बेरोजगारी, खुला व्यापारमा मापदण्ड अनुरूप एकरूपता कायम हुन नसक्नु जस्ता परिस्थिति उत्पन्न भयो । अव्यवस्थित अर्थतन्त्रलाई व्यवस्थित अर्थतन्त्रको दायराभित्र ल्याउने कार्य हुन नसकी उदार अर्थनीतिका कुराहरूले श्रम बजारलाई प्रभावित पार्न सकेन ।

श्रम बजारको उचित व्यवस्थापन हुने ऐन, कानुन तथा नियमावलीहरूको कार्यान्वयन गराउन सबै निकायहरू सक्रियताका साथ लाग्नु अत्यावश्यक थियो । अव्यवस्थित अर्थतन्त्रलाई व्यवस्थित बनाउने संयन्त्रको विकास गरी कार्यान्वयन पक्ष सशक्त हुनु पर्ने थियो । निश्चित मापदण्ड बेगर गरिएको निजीकरण प्रक्रियामा श्रमिकहरूको प्रतिनिधित्व आवश्यक थियो । दायित्व बोधका कुरातर्फ सबै निकायमा सचेत बन्नु पर्दथ्यो । बेरोजगारी समस्याको न्यूनीकरणका लागि रोजगारीका अवसरहरू सिर्जना गरी व्यावसायिकरूपमा वर्गीकरण अनुरूप जनशक्ति तयार गर्नुपर्ने थियो । श्रमिकहरूलाई राज्यको दायित्वका बारेमा प्रत्यक्ष प्रत्याभूति हुने ठोस कार्यक्रमहरू श्रम बजारको उचित व्यवस्थापनका लागि हुनै पर्ने थियो ।

श्रम कानुनको प्रभावकारी कार्यान्वयन अभियानलाई व्यवहारिक बनाउँदै त्यसको निरन्तरतातर्फ लाग्नु पर्थ्यो । असंगठितरूपमा छरिएर रहेको क्षेत्रलाई संगठित दायराभित्र ल्याउँदा मात्र गरिबी निवारण हुन सक्ने भएकाले ती वर्गको लागि आर्थिक आत्मनिर्भरताका कार्यक्रमहरू अभियानको रूपमा संचालन गर्दै परनिर्भरतालाई न्यूनीकरण गर्ने खालका कार्यक्रमहरू लागू हुनै पर्ने थियो । सामाजिक सुरक्षा, लैंगिक असमानता, बालश्रम न्यूनीकरण, निजीकरण, आर्थिक उदारीकरण जस्ता विषयप्रति संवेदनशील हुनु अत्यावश्यक थियो ।

श्रम बजारमा पूँजी र श्रमको भिन्नता ल्याउन हुँदैन थियो । विद्यमान ज्याला विभेद कायम हुनु हुँदैन थियो । श्रम ऐन, कानुन तथा नीतिनियमको कार्यान्वयन पक्ष कर्तव्य एवं दायित्वबाट विमुख हुनु हुँदैन थियो । अन्तरराष्ट्रिय श्रम संगठनबाट अनुमोदित अभिसन्धिहरू अप्रभावकारी हुनु हुँदैन थियो ।

नेपालमा स्थापित ट्रेड यूनियनहरूले श्रमिकहरूको पेसागत हक, हित, वर्गीय सुरक्षा र सम्मानका लागि स्वतन्त्र ट्रेड यूनियन आन्दोलनको अभियानको अवधारणालाई विकसित गर्दै लैजानु आजको आवश्यकता हो । श्रमिक वर्गलाई प्रत्यक्षरूपमा ट्रेड यूनियन अधिकारद्वारा प्रजातान्त्रिक भावनाको विकास र श्रमिक पक्षीय अभियानको माध्यमबाट श्रमिक वर्गको उत्थानतर्फ उत्प्रेरित हुनु पर्ने दायित्व ट्रेड यूनियनहरूको हो । कुनै पनि राजनीतिक पार्टीको पृष्ठपोषक नभई श्रमिक वर्गको प्रतिनिधिमूलक संस्थाको रूपमा मात्र ट्रेड यूनियनहरू स्थापित हुन पर्दछ भन्ने मान्यता नेपाल प्रजातान्त्रिक ट्रेड यूनियन (डिकोन्ट) को हो । श्रमिक वर्गलाई दलगत स्वार्थपूर्तिका लागि भोट बैंकको रूपमा प्रयोग गर्ने संस्कारको अन्त्य गरी देशको असंगठितरूपमा रहेको ९० प्रतिशत श्रमिकहरूलाई संगठित गर्दै उनीहरूको स्तर वृद्धिमा आफूलाई क्रियाशील गर्नुपर्ने दायित्व पनि ट्रेड यूनियनहरूको हो । ट्रेड यूनियनहरूका लागि चुनौतीका रूपमा रहेको सामाजिक विभेद, लैंगिक असमानता, बाध्यकारी श्रम, निकृष्ट बालश्रमको प्रयोग, श्रम बजारमा देखिएका ठेक्का प्रथा आदिलाई स्थानीय तहदेखि नै निर्मूल गर्न ट्रेड यूनियनहरू योजनाबद्धरूपमा लागिपर्नु पर्दथ्यो ।

ट्रेड यूनियनहरूलाई राजनीतिक पार्टीहरूको भ्रातृसंस्था वा शुभेच्छुक संस्था स्वीकार गर्दाका अवस्थामा श्रमिक पक्षीय अभियानप्रति आफूलाई प्रतिबद्ध बनाउन नसक्ने भएको हुँदा ट्रेड यूनियनहरूले राजनीतिकरूपमा कुनै पनि राजनीतिक दलको भ्रातृत्व स्वीकार्नु हुँदैन । त्यसरी भ्रातृत्व स्वीकार गर्नु भनेको ट्रेड यूनियनहरूले आफ्नो लक्ष्य गुमाउनु सरह हो । श्रमिक वर्गलाई उनीहरूको अधिकार दिलाउने उद्देश्य बोकेका ट्रेड यूनियनहरू स्वयंले राजनीतिक पार्टीको भ्रातृत्व स्वीकारी कार्य गर्नु भनेको स्वतन्त्र ट्रेड यूनियन आन्दोलन अभियानमा अवरोध उत्पन्न गर्नु हो । यसर्थ ट्रेड यूनियनहरू स्वतन्त्ररूपमा संचालित हुन पर्ने मान्यता डिकोण्टको रहेको छ । श्रमिकको हितका निम्ति निर्माण हुने नीति तथा कार्यक्रमहरूमा श्रमिकको प्रतिनिधित्व अपरिहार्य रहेको छ भने राजनीतिक पार्टीहरूसँग पनि सहकार्य गरिनु उपयुक्त हुन्छ ।

**रोजगारदाता र सरकारको भूमिका**

रोजगारदाताहरूले पूँजीलाई मात्र लगानी नठानी श्रमलाई पनि लगानीको एउटा पक्ष स्वीकारी श्रम र पूँजीलाई एउटै सिक्काका दुई पाटाका रूपमा लिएर श्रमिकसँग सुमधुर सम्बन्ध विस्तार गर्नु पर्दथ्यो । श्रम ऐन तथा कानुनमा उल्लेख भएका नियुक्ति पत्र, न्यूनतम वेतन, संचयकोष जस्ता प्रावधानहरू पालना गरी रोजगारदाताहरू नमूनाको रूपमा स्थापित हुनु पर्दथ्यो । सरकारी निकायबाट श्रम ऐन-कानुन तथा नियमलाई प्रभावकारी रूपमा कार्यान्वयन गराउने समुचित संयन्त्रको निर्माण गरी अनुगमन तथा सुपरीवेक्षणको प्रभावकारी व्यवस्था गरिनु पर्दथ्यो ।

श्रम ऐन, कानुन तथा नियम विपरितका कार्यहरू नगरी श्रमिकहरूको हक-हित, पेसागत सुरक्षा तथा सम्मानप्रति आघात पुग्ने कुनै पनि क्रियाकलाप रोजगारदाता तथा सरकारले हुनु हुँदैनथ्यो । अन्तरराष्ट्रिय श्रम संगठनद्वारा पारित विभिन्न अभिसन्धिहरूको कार्यान्वयनप्रति कुनै पनि निकायबाट वेवास्ता गर्नु हुँदैनथ्यो । मौजुदा श्रम ऐन, कानुनको प्रभावकारी कार्यान्वयन नभई ऐनका प्रारम्भिक बुँदाहरू पनि सक्रिय नभएको वर्तमान अवस्थामा रोजगारदाताले ऐन-कानुनको संशोधन तथा हायर-एण्ड-फयरका कुरा उठान गर्नु हुँदै हुँदैनथ्यो ।

**राजनीतिक पार्टीहरूको भूमिका**

राजनीतिक पार्टीले श्रमिकपक्षीय कुराहरू पेसागत सुरक्षा, श्रमिकहरूको सामाजिक सुरक्षा आदि विषयलाई प्रमुख प्राथमिकतासाथ हेरी ठूलो हिस्सामा रहेको मजदुर वर्गप्रति पनि लक्षित हुनु पर्थ्यो । मजदुरहरूलाई आफ्नो राजनीतिक अभिष्ट सिद्धिको माध्यम नबनाई श्रमिकहरूलाई पनि सामाजिक सहयात्रीको रूपमा ग्रहण गर्न सक्नु पर्दथ्यो । राजनीतिक पार्टीहरूले श्रमिकका समस्याप्रति सजग रहँदै उनीहरूको मागमा न्यायोचित समर्थन गर्ने, श्रमिकहरूको मुद्दालाई प्राथमिकता दिने एवं आमूल परिवर्तनका वाहक श्रमिकहरूको जीवनस्तर उकास्ने सम्बन्धी नीति तथा कार्यक्रम संचालन हुनु पर्दथ्यो ।

राजनीतिक पार्टीले मानवीय पूँजीको रूपमा रहेको श्रम लगानीको उपेक्षा गरी श्रमिक वर्गलाई राजनीतिक स्वार्थ सिद्धिको रूपमा प्रयोग गर्नु हुँदैनथ्यो । श्रमिकका साझा समस्याप्रति समेत समर्थन जनाउन नसकी श्रमिकका मुद्दामाथि राजनीति गर्ने परिपाटीको विकास हुनु हुँदैनथ्यो ।

**ट्रेड यूनियनहरूको भूमिका**

ट्रेड यूनियनहरूलाई ट्रेड यूनियन अधिकारको माध्यमबाट विभिन्न पेसामा संलग्न श्रमिकहरूलाई संगठनको दायरामा ल्याउँदै श्रमिकहरूको संस्था स्थापित गरी संस्थागत विकास गर्ने अभियानलाई जस दिनु पर्दछ । रोजगारदाता र सरकार दुवैलाई ट्रेड यूनियनको वास्तविक अवधारणा सुसूचित गराउँदै सूचना प्रवाह गर्नु तथा श्रम सम्बन्धी विषयवस्तुको आवश्यकता पहिचान गराउनेतर्फको जस ट्रेड यूनियनलाई दिनु पर्दछ । श्रम सम्बन्धी विभिन्न मुद्दाको उठान गरी तत्सम्बन्धी नीति निर्माणमा सहयोग गर्ने निकाय एवं सोका लागि दवावमूलक कार्य गर्ने संस्थाको रूपमा पनि ट्रेड यूनियनहरूलाई जस दिनुपर्ने हुन्छ । ट्रेड यूनियन आन्दोलनको अभियानबाट हाम्रो मुलुक पनि अछुतो रहेको छैन भन्ने भावनाको विकास गर्दै अन्तरराष्ट्रिय रूपमा पनि नेपाली ट्रेड यूनियन अभियानका बारेमा जानकारी एवं प्रचार-प्रसार गर्ने सम्बन्धी जस पनि ट्रेड यूनियनलाई नै जान्छ । हाम्रो जस्तो विषम परिस्थितिबाट गुज्रिरहेको ट्रेड यूनियन आन्दोलनलाई श्रमिकहरूका माझ पुऱ्याउने, ट्रेड यूनियन अधिकार, ट्रेड यूनियन शिक्षा, लैंगिक असमानता, महिला श्रमिकहरूलाई ट्रेड यूनियनमा सहभागी गराउने कार्य, निकृष्ट बाल श्रमको न्यूनीकरण, बँधुवा श्रमको अन्त्य, सामाजिक सुरक्षा, व्यवसायजन्य सुरक्षा तथा स्वास्थ्य, श्रमिकहरूका बीच सहकारिताको विकास र अन्य शैक्षिक अभियान जस्ता विविध क्रियाकलापहरूलाई पनि ट्रेड यूनियनको योगदानका रूपमा लिन सकिन्छ । यसैगरी ट्रेड यूनियनहरूले सुमधुर औद्योगिक सम्बन्ध स्थापना गर्नेतर्फ पनि उल्लेख्य भूमिका खेलेको पाइएको छ ।

**ट्रेड यूनियनहरूको कमी-कमजोरी**

आफ्नो मूल्य-मान्यता एवं लक्षित उद्देश्य अनुरूप कार्य नगरी श्रमिक हक हित र पेसागत सुरक्षाभन्दा बाहिर रहेर केवल राजनीतिक स्वार्थ सिद्धमा कार्यरत कुनै पनि ट्रेड यूनियनहरू आलोचनाको घेराबाट मुक्त हुन सक्दैनन् । राजनीतिक पार्टीको भ्रातृ संस्था तथा शुभेच्छुक संस्थाका रूपमा रहनु नै ट्रेड यूनियनहरूको मुख्य कमजोरी हो । श्रमिक वर्गको साझा समस्यामा समेत सामूहिक सहमतिबाट कार्य हुन नसक्नुलाई पनि ट्रेड यूनियनहरूको कमी कमजारीका रूपमा लिनु पर्दछ । सरकार तथा रोजगारदाता दुवैलाई राज्यद्वारा निर्देशित श्रम सम्बन्धी विभिन्न ऐन कानुनलाई अक्षरशः पालना गर्ने र कार्यान्वयन गराउनेतर्फ ट्रेड यूनियनहरूको भूमिका उल्लेख्य रहन सकेको पाइँदैन । स्वतन्त्र ट्रेड यूनियन आन्दोलनद्वारा मात्र श्रमिकको हित सम्भव हुने हुँदा समायानुकूल परिवर्तनको कुरालाई दृष्टिगत गरी ट्रेड यूनियनहरू राजनीतिक स्वार्थबाट अझ पनि मुक्त हुन नसक्नु ट्रेड यूनियनको मुख्य कमजारी देखा पर्दछ ।

**जिफन्टबारे**

श्रमिक हितको निम्ति विभिन्न क्रियाकपाल संचालन गर्ने एवं श्रमिक सम्बन्धी नीति निर्माण कार्यमा आफ्नो सकारात्मक भूमिका निर्वाह गर्ने एक सामाजिक सहयात्रीको रूपमा हामीले त्यस महासंघलाई पाएका छौं । प्रकाशनका सम्बन्धमा समावेश भएका विषयवस्तुहरूले अझ श्रमिकपक्षीय भावनालाई प्रतिनिधित्व गर्न सकोस् । साथै श्रमिक सम्बन्धी सबैखाले क्रियाकपालले प्रकाशनमा यथोचित स्थान नपाएको आभाष नदिनका लागि यो प्रकाशन सदैव सचेत रहोस् भन्ने कामना गर्दछौं ।

# नेपालको श्रम क्षेत्र र ट्रेड यूनियन अभियान

श्री लक्ष्मण बस्नेत, अध्यक्ष-नेपाल ट्रेड यूनियन काँग्रेस



२०४६ सालमा प्रजातन्त्रको पुनर्स्थापना सँगसँगै नेपालको प्रजातान्त्रिक आन्दोलनले नयाँ चरणमा प्रवेश गरेको छ । यसका साथै प्रजातान्त्रिक आन्दोलनको स्वरूप र कार्यक्रम पनि फरक भएको छ । प्रजातान्त्रिक राजनीतिको मूल उद्देश्य पनि राज्यको संरचना र कार्यक्रमलाई प्रजातान्त्रिकरण गर्नु रहेको छ । आजसम्म राज्य (स्टेट) को कार्यक्रम जनतालाई भन्दा शासक वर्गलाई बलियो बनाउनु रहेको थियो । प्रजातन्त्रको विश्वव्यापि लहरसँगै आएको आर्थिक उदारवादले पनि राज्यको भूमिकालाई चुनौती दिएको छ, तर नेपालको सन्दर्भमा राज्यको भूमिका कति बढी वा कम भन्दा पनि राज्य संरचनालाई प्रजातान्त्रिकरण गर्दै जनताको समस्याप्रति संवेदनशील बनाउनु नै एक प्रमुख चुनौतीका रूपमा देखापरेको छ ।

तर, देशको कूल जनसंख्याको आधा भाग ओगटेको गरिबीको रेखामुनि रहेका विपन्न जनताको सामाजिक र आर्थिक समस्याप्रति राज्य संवेदनशील देखिएको छैन । त्यो आधा भागमा पनि असंगठित क्षेत्रमा कार्यरत श्रमिकहरूको ठूलो संख्या रहेको छ । सरकार र राजनीतिक दलहरूले आम जनतामा सामाजिक सुरक्षाको प्रत्याभूति दिन अझै धेरै काम गर्नुपर्ने बाँकी नै छ ।

नेपाली श्रमिकहरूको आन्दोलन संगठित क्षेत्रमा व्यापक रूपमा शुरू भएको छ । बाह्र वर्ष लामो आफ्नो संघर्षमा श्रमिकहरूले संगठित क्षेत्रमा केही आधारभूत कानुनी पूर्वाधारहरू खडा गर्न सकेका छन् भने असंगठित क्षेत्रले त झनै लामो यात्रा पार गर्नुपर्ने भएको छ ।

आफ्नो संघर्षको क्रममा श्रमिकहरूले विभिन्न न्यायोचित मागहरू उठाउँदै आएका छन्, जसमा सामाजिक सुरक्षाको प्रत्याभूति मुख्य रहेको छ । प्रजातन्त्रको विश्वव्यापि लहरसँग आएको उदारवादले राज्यको भूमिकालाई संकुचित पार्ने चेष्टा गरेको छ जसको फलस्वरूप श्रमिकहरूको मानव अधिकार कुण्ठित हुँदै गएका उदाहरणहरू प्रशस्तै छन् । यस अर्थमा पनि आर्थिक व्यवस्था, बजार र राज्य सबै संक्रमणको स्थितिमा छन् । बहु आयामिक संक्रमण (ट्रान्जिसन) का कारण पनि सामाजिक सुरक्षाको महत्त्व अझ बढेको छ ।

प्रजातन्त्र पुनर्स्थापना पछिका १२ वर्षमा नेपालको श्रम क्षेत्रलाई व्यवस्थित गर्ने थुप्रै प्रयासहरू भए, ती प्रयासहरूको सफलताले गर्दा श्रम सम्बन्धी ऐन कानुनहरू, ट्रेड यूनियनको गठन र सञ्चालन सम्बन्धी ऐन कानुनहरूको निर्माण हुनुका साथै ती ऐन कानुनका प्रावधानहरूको अभ्यास पनि प्रशस्तै भएको पाइन्छ । ऐन-कानुनको व्यवस्थाका साथै राष्ट्रले अङ्गिकार गर्नुपर्ने श्रम सम्बन्धी अवधारणाको राष्ट्रिय श्रम नीति (नेसनल लेवोर पोलिसी) समेत जारी गरिएको छ । यस अवधिमा श्रमिक मजदूरहरूको चेतनाको स्तरमा व्यापक वृद्धि, नेतृत्व विकास तथा सशक्तीकरणमा व्यापकता, ट्रेड यूनियनहरूको संस्थागत विकास एवं सांगठनिक विस्तार, बालश्रम निवारणको प्रयास, कमैया मुक्ति तथा त्यसको व्यवस्थापन लगायतका सामाजिक आन्दोलनमा श्रमिक वर्गको उत्साहजनक सहभागिता, लैङ्गिक लगायतका विविध विषयहरूमा राष्ट्रिय अभियानको सञ्चालन सशक्त ढंगले हुन सकेको छ ।

श्रम सम्बन्धी कानुनहरू र द्विपक्षीय तथा त्रिपक्षीय सहमतिहरूको कार्यान्वयन हुन नसक्नु, राष्ट्रिय स्तरमा सौदावाजीको व्यवस्था हुन नसक्नु, निजीकरणको नकारात्मक प्रभावलाई सशक्त प्रतिकार गर्न नसक्नु आदि केही कमजोरीहरू रहेको देखिन्छ ।

सरकारी पक्षबाट भएका कमी कमजोरीहरूमा सांगठनिक स्वतन्त्रताको अधिकार माथिको अनावश्यक हस्तक्षेप, अत्यावश्यक सेवा ऐनको अप्रजातान्त्रिक व्यवस्था, अन्धाधुन्ध निजीकरण, राष्ट्रिय-अन्तरराष्ट्रिय श्रम मापदण्डहरूको उल्लंघन आदि प्रमुख देखिएका छन् । त्यस्तै त्रिपक्षीय संरचनाको प्रभावकारी कार्यान्वयन गराउन नसक्नु, श्रम प्रशासनको क्षमता वृद्धि हुन नसक्नु, कारखाना तथा कार्यस्थलमा सरकारी निरिक्षणको अभाव एवं रोजगारीका अवसरको वृद्धि हुन नसक्नु जस्ता थुप्रै समस्याहरू देखिएका छन् । यस बाहेक निर्णय प्रक्रियामा श्रमिकपक्षीय प्रतिनिधित्व वा सहभागितालाई समेत उचित व्यवस्थापन गर्न नसकिरहेको अवस्था छ ।

यस अवधिमा ट्रेड यूनियनको विकास र विस्तार जुन ढंगले भयो त्यो उत्साहप्रद नै देखिन्छ । तथापि केही व्यक्तिहरूको चरम महत्त्वाकांक्षाका कारण ट्रेड यूनियनमा विखण्डनका झिना-मसिना प्रयासहरू भए, जुन त्यति महत्त्वपूर्ण (सिग्नीफिक्यान्ट) नभए तापनि त्यसो नभएको भए अवश्य नै अझ राम्रो हुन्थ्यो । त्यस्ता महत्त्वाकांक्षी प्रवृत्तिका मान्छेहरू यदाकदा ट्रेड यूनियनहरूलाई अपव्याख्या गर्न समेत उद्यत देखिन्छन् । ट्रेड यूनियन र राजनीति बीचको गहिरो अन्तर सम्बन्धलाई बिर्सेर तथाकथित स्वतन्त्रताको कुराहरू गर्नु भनेको साँचो अर्थमा चरम अवसरवाद (एक्स्ट्रीम अपरच्युनिजम्) सिवाय अरु केही हुन सक्दैन । ट्रेड यूनियन आन्दोलनको सफलताको सबैभन्दा ठूलो अवरोध भनेको यस्तै अवसरवादी चरित्र हो । आफ्नो असलियत बिर्सेर अरुलाई अर्ती दिनु र कसैले गर्दैन सबै हामी गर्छौं भन्नु भनेको "पाँच वर्ष पहिले लाहुर गएर घर नफर्केको लाहुरेले भर्खरै आफ्नो घरमा छोरो जन्म्यो भनेर खुसी हुँदै लड्डु बाँड्नु" जस्तै हो । अहिले धेरै प्रयासका वावजुद एकीकृत ट्रेड यूनियन निर्माणको जुन अभियान सञ्चालन भएको छ त्यसै अभियानको सफलताले साँचो अर्थमा श्रमिकको हित, देशको विकास, प्रजातन्त्रको संरक्षण आदि विषयमा कोसेढुङ्गा सावित हुनसक्छ ।

अन्त्यमा, श्रमिक खवरको प्रकाशक नेपाल ट्रेड यूनियन महासंघ र श्रमिक खवर समेतलाई नेपाल ट्रेड यूनियन काँग्रेसको



# सरकारले अवलम्बन गरेका आर्थिक नीति विरोधाभाषी छन्

क. ईश्वर पोखरेल, स्थायी समिति सदस्य–नेकपा (एमाले)

हाम्रो मुलुकमा बहुदलीय व्यवस्थाको पुनर्स्थापना पछि आम श्रमिक वर्गले आफ्ना हक-हितका लागि संगठित हुने तथा तिनको उपभोगका लागि आवश्यकता अनुसार संघर्ष गर्ने अधिकार कानुनी रूपमै प्राप्त गरेका हुन् । लामो समयदेखि प्रजातन्त्र स्थापनामा श्रमिक वर्गको सक्रिय सहभागिताका कारणले उनीहरूका यी अधिकारहरू कानुनी रूपमा स्थापित हुन सकेका हुन् ।

विज्ञान तथा प्रविधिको युगीन विकासले श्रमको चरित्र तथा विशेषतालाई बहुआयामिक बनाइ दिएको छ । श्रमको क्षेत्र विस्तारित हुन पुगेको छ । श्रमका सम्बन्धमा चलन-चल्तीको परिभाषा तथा परम्परागत मान्यताहरू फेरिएका छन् । कलकारखानाहरूमा गरिने श्रम मात्र नभएर, कृषि तथा सेवाका अत्यन्त विशाल क्षेत्रहरू समेत जोडिएपछि श्रमिक आन्दोलनका क्षेत्र विशाल बनेका छन् । फलस्वरूप निजामति कर्मचारीहरूदेखि सरकारी स्वामित्वका बैंकहरूमा समेत शुरूका वर्षहरूमा अत्यन्त उत्साहका साथ कामदार, कर्मचारीहरू विशेष गरी न्यून तहका कर्मचारीहरू संगठनमा आबद्ध भए । श्रमिकहरू आफ्ना हितमा सामूहिक सौदावाजीका लागि सशक्त रूपमा संगठित अवस्थामा देखिएका हुन् । नयाँ परिस्थितिमा समग्र श्रम क्षेत्रलाई गतिशील बनाउने कुराको आशा गरिएको हो । पछि, मुलुकको राजनीतिमा देखापरेको अपरिपक्वताका कारण जसरी राजनीतिक क्षेत्र अस्वस्थ प्रतिस्पर्धा तथा फुट, विभाजन र समूह स्वार्थबाट आक्रान्त बन्दै गयो, त्यसैको परिणाम मुलुकमा देखापरेका विभिन्न श्रम-संगठनहरू राजनीतिक रूपमै विभाजित भई देशका राजनीतिक पार्टीहरूका आ-आफ्ना कामदार, कर्मचारी संगठनका रूपमा चिनिन थाले । श्रम-संगठनहरूको यस किसिमको विभाजनले समग्र श्रम-क्षेत्र अराजकतातर्फ उन्मुख हुन पुगेको हो । वास्तवमा सिंगो श्रम-क्षेत्रमा देखापर्न थालेको यो गम्भीर संकट पनि हो ।

नेपाल ट्रेड यूनियन महासंघले आफ्नो स्थापनादेखि नै यसलाई चिन्हित गऱ्यो र यसको समाधानका लागि योजनाबद्ध पहल र प्रयत्न समेत गर्न थाल्यो । "एक पेशा-एक संगठन, एक कारखाना-एक यूनियन" को नारा यही आसय र उद्देश्यद्वारा निर्देशित छ (निर्देशित हुनु पर्छ) । नेपाल ट्रेड यूनियन महासंघ आफ्नो राजनीतिक प्रतिबद्धतामा भने श्रमिक संगठनहरू तथा श्रमिक आन्दोलनमा देखापरेका यस किसिमका समस्यालाई चिन्हित गर्दै तथा तिनबाट जोगिंदै अगाडि बढिरहनु पर्छ ।

एउटा अनुभव के रहेको छ भने - बहुदलीय व्यवस्थाको पुनर्स्थापनापछि स्थापित भएका विभिन्न किसिमका श्रम-संगठनहरू शुरूका वर्षहरूमा सेवा सुविधालाई स्तरीकरण गर्ने र सत्ता पक्षबाट हुने पक्षपात, अन्याय तथा भ्रष्टाचार हटाउने कार्यमा विशेष सक्रियतापूर्वक लागे । यिनीहरूको यो सक्रियताले महत्त्वपूर्ण उपलब्धिहरू समेत हासिल भएका छन् । तर पछि, राजनीतिक दलहरूसित प्रत्यक्षतः गाँसिन पुगेका कारण आफ्नो पार्टी सरकारमा रहँदा त्यसबाट आफ्नो पक्षलाई लाभ हुने र अर्को पक्षलाई किनारा लगाउने काम हुन थाल्यो । खासगरी नेपाली कांग्रेससित सम्बद्धता देखाउने संगठनहरूबाट यस किसिमका काम अत्यन्त चर्को रूपमा हुन थाले । यसैको परिणाम विभिन्न क्षेत्रमा कार्यरत कामदार-श्रमिकहरूका संगठनहरू क्रमशः विस्थापित हुँदै गएको कटु वास्तविकता सबैका अगाडि छर्लङ्ग छ । यस्ता संगठनहरूले आफ्नो पक्षका खराब सदस्यहरूको समेत अनुचित संरक्षण गर्ने तथा च्याप्ने काम गर्न थाले । यस्ता प्रवृत्तिले कामका क्षेत्रमा समेत गम्भीर नकारात्मक असर परेको प्रत्यक्षतः देखिएको छ । ट्रेड यूनियन महासंघको यो अभियानले राजनीतिक क्षेत्रमा प्रकट हुने गरेको अपरिपक्वता दूर गर्न सहयोग पुग्ने विश्वास गर्न सकिन्छ । समग्र आन्दोलन तथा स्वयं आफैंले प्राप्त गरेका अनुभवहरूलाई सूत्रबद्ध र सैद्धान्तिकृत गर्दै अगाडि बढिरहनु आवश्यक छ । अगाडि बढ्न र जीत हासिल गर्न, ट्रेड यूनियन महासंघले यो काम गर्नै पर्छ । आन्दोलनलाई भड्काउबाट जोगाउँदै अगाडि बढाइरहन यसो गर्नै पर्छ ।

यतिवेला ऐन-कानुनले दिएका श्रमिकहरूका अधिकार र सरकारले अवलम्बन गरेका आर्थिक नीति अत्यन्त विरोधाभाषी छन् । आम रूपमा आर्थिक उदारीकरण, निजीकरण र विश्वव्यापीकरणको नीति आम श्रमजीवी जनताका हित अनुकूल छैनन् । श्रम-संगठनहरू एकातिर आफ्ना हक-हितका लागि सक्रिय र सशक्त हुने, यस क्रममा ऐन-कानुनहरू समेत समृद्ध बन्दै जाने तर अर्कोतिर सरकार र अन्तरराष्ट्रिय मूल प्रवाहको आर्थिक नीति भने उनीहरूको प्रतिकूल हुने स्थिति देखापर्ने गरेको छ । यस्तो स्थितिमा पूँजीपतिहरू श्रमिकहरूका विरुद्धमा एक स्वरले गोलबन्द हुने स्थिति बलियो हुँदै गएको देखिन्छ । श्रमिक-संगठन तथा समग्र श्रमिक आन्दोलनले विद्यमान यो विरोधाभाषी स्थितिका सम्बन्धमा स्पष्ट बन्नै पर्छ ।

अन्तरराष्ट्रिय वातावरण तथा दवावको कारणले सरकारले निजीकरणको कार्यक्रमलाई वेरोकटोक अगाडि बढाउँदै गएको

छ। यसक्रममा हजारौंका संख्यामा कामदार कर्मचारीहरूलाई सेवाबाट हटाइएको छ। उनीहरूका हक-हित, पुनर्रोजगारी, पुनर्ताजगी तालिम आदिका बारेमा सरकारहरूले कुनै नीति र कार्यक्रम ल्याउन सकेनन्। यसको निम्ति श्रम-संगठनहरूद्वारा पनि सशक्त दवाव र संघर्ष प्रभावकारी किसिमले संचालन हुन नसकेको देखिएको छ। यो वास्तविकतालाई नेपाल ट्रेड यूनियन महासंघले आफ्नो महत्त्वपूर्ण कार्यसूचीमा राख्नु पर्छ भन्ने लागेको छ। श्रमिक आन्दोलनमा देखापरेको यो विश्वव्यापी समस्या, नेपालको श्रमिक आन्दोलनमा कुन रूपमा कसरी-कसरी प्रकट भइरहेको छ? बहुदलीय व्यवस्था पुनर्स्थापनापछिका शुरूका वर्षहरूमा नेपालका राजनीतिक पार्टीहरूले उदारीकरण, निजीकरण र विश्व्यापीकरणको सम्बन्धमा स्पष्ट दृष्टिकोण अपनाउन सके सकेनन्? श्रम सम्बन्धी नीति तथा श्रमिक संगठनहरूलाई परिचालन गर्ने सम्बन्धमा स्पष्ट दृष्टिकोणसाथ प्रस्तुत हुन सके, सकेनन् आदि विषयमा पनि महासंघ समीक्षात्मक निष्कर्षमा पुग्नु पर्छ।

यस बीच, सेवा क्षेत्रमा संगठित श्रम-संगठनहरू एक किसिमले अस्तित्वको सङ्कट भेलिरहेका छन्। अर्थात् तिनले वैधानिक अस्तित्वको लागि लडाइ लड्नु परिरहेको छ। सरकारले त्यस्ता संगठनहरूलाई आफ्नो स्वार्थ विपरित भएको ठानी प्रतिबन्ध लगाउने जस्ता काम समेत गरेको। यस क्रममा विशेष गरी बैंकिङ तथा होटेल सेवामा हड्ताल गर्न समेत प्रतिबन्ध लगाइएको छ। सरकारका यस किसिमका अप्रजातान्त्रिक र स्वेच्छाचारी कामका विरोधमा श्रमिक कामदारहरूका संघ-संगठनहरूले सशक्त आन्दोलन गर्न नसकेको आम अनुभूति छ। यी क्षेत्रका श्रमिक संगठनहरूलाई प्रभावशाली बनाउने विषयमा देखिएका कमी वा समस्याहरूमा महासंघ कसरी केन्द्रित हुनु पर्ने हो - यतिवेला यो एउटा महत्त्वपूर्ण छलफलको विषय हो।

यतिवेला विश्वमा पूँजीवादका दानवीय हरकतहरू बढिरहेका छन्। आम श्रमिकहरूलाई नकारात्मक दृष्टिले हेर्ने प्रवृत्ति बढेर गएको छ। निजी क्षेत्रको नेतृत्वलाई विकास गर्ने नीतिको बोलवाला बढेर गइरहेको र श्रम संगठनहरूलाई विकासको अवरोधकको रूपमा लिने सोच र प्रवृत्तिहरू प्रवल बनिरहेका छन्। पूँजीपतिहरू सरकार र राजनीतिक पार्टीहरूमाथि समेत हावी हुँदै गएका र यसै आधारमा पूँजीपतिहरूको श्रमिकहरूलाई हायर एण्ड फायर गर्ने स्वेच्छाचारी अधिकारका लागि बढ्दो दवावले गम्भीर रूप लिन पुगेको छ। अन्तरराष्ट्रिय वित्तीय संस्थाहरू तथा दाता राष्ट्रहरू त्यसलाई ऋणको शर्तको रूपमा राख्न थालिरहेका छन् र सरकारहरू ती शर्त स्वीकार गर्न बाध्य बनिरहेका छन्। यस्तो अवस्थामा श्रमिक संगठनले सञ्चालन तथा नेतृत्व गर्ने संघर्षको रूप र त्यसको व्यापकतालाई नयाँ स्तरमा परिभाषित गर्नु आवश्यकता छ कि छैन ? ट्रेड यूनियन महासंघले यस विषयमा छलफल चलाउनु पर्छ। विश्वव्यापीकरण र श्रमिक आन्दोलनलाई नयाँ स्तरमा उठाउने विषय महत्त्वपूर्ण छलफलको विषय बन्नु पर्छ।

विकसित मुलुकका श्रम बजारहरू र विकासशील मुलुकका श्रमिकहरूको विषय श्रमिक संगठनहरूका लागि अध्ययन र आन्दोलनका नयाँ तर महत्त्वपूर्ण विषय छन्। विश्वव्यापीकरणको प्रभावस्वरूप विकसित मुलुकका श्रम बजारहरू विकासशील तथा गरीब मुलुक वा श्रमिकहरूका निमित्त केही मात्रामा खुला गरिएका छन् र त्यहाँ श्रम गर्न जानेहरूको होड चल्न थालेको छ। यसले त्यस्ता श्रम बजारमा जाने श्रमिकहरूको लागि त केही लाभ पुऱ्याएको छ र रेमिटेन्सका कारण गरीब मुलुकको अर्थतन्त्रमा समेत केही टेवा त पुगेको छ। तर यसले गर्दा श्रम संगठनहरूलाई निरन्तर कमजोर तुल्याइरहेको छ। हाम्रो मुलुकको श्रमिक संगठनले यो समस्या कसरी भोगिरहेको छ? यो समस्याको समाधान कसरी गर्ने? के यसले मुलुकको प्रजातान्त्रिक आन्दोलनलाई समेत नोक्सान पुऱ्याएको छैन? यस्तो समस्याबाट आन्दोलनलाई कसरी जोगाउने? नेपाल ट्रेड यूनियन महासंघले यो समस्यालाई आफ्नो महत्त्वपूर्ण कार्यसूची बनाउनु पर्छ।

नेपालको सन्दर्भमा भारतीय कामदारहरूको बेरोकटोक आगमनका कारण श्रमिक संगठनहरूका लागि थप प्रतिकूलता सृजना भएको छ। नेपालका अधिकांश उद्योगहरू भारतीय मुलुकका छन्। भारतीय कामदारहरू आम रूपमा नेपाली श्रमिक संगठनहरूमा संगठित नहुने प्रवृत्ति छ। भारतीय कामदारहरू संगठित नहुने, तिनलाई चाहेको वेलामा निकाल्न सकिने र ज्यालामा पनि सौदावाजी नगर्ने हुँदा त्यस्ता उद्यमी पूँजीपतिहरूले भारतीय श्रमिकहरू राख्न थालेका छन्। ऐनले यसो गर्न नपाइने भए तापनि त्यसको अनुगमन पक्ष कमजोर भएकाले यसको लाभ यी उद्यमीहरूले उठाइरहेका छन्। मलाई लाग्छ- महासंघले यो समस्यालाई महत्त्वका साथ आफ्नो कार्यसूचीमा राख्नु पर्छ।

यतिवेला अन्तरराष्ट्रिय श्रम बजारमा देखापरेको एउटा प्रवृत्ति भनेको सस्तो श्रमको खोजी हो। विकसित मुलुकको पूँजी जहाँ श्रम सस्तो छ, जहाँका श्रमिकहरू विरोध-हड्ताल आदि गर्दैनन् त्यहाँ प्रवाहित हुने गरेको छ। शक्तिशाली र संघर्षशील श्रमिक संगठनहरू भएका ठाउँमा त्यस्तो पूँजी प्रवाहित नहुने वा कम प्रवाहित हुने गरेको छ। यो प्रवृत्तिले नयाँ नयाँ किसिमको ध्रुवीकरणको स्थिति पैदा भइरहेको छ। यो प्रवृत्तिका कारण हाम्रो मुलुकको श्रमिक संगठन र श्रमिक आन्दोलनमा पर्न सक्ने प्रभावका बारेमा पनि अध्ययन हुनु पर्छ।

नयाँ स्तरमा श्रमिक संगठनहरूलाई संगठित गर्ने तथा आन्दोलित गर्ने विषय आजको गम्भीर चुनौती पनि हो। पूँजीवादले सापेक्षित स्थिरता कायम गरेपछि देखिएको यो समस्यालाई कसरी चिर्ने? परिवर्तित परिस्थितिको ठोस र सूक्ष्म विश्लेषण गरिनु पर्छ। यसको लागि जाँच पडतालको कामलाई योजनाबद्ध रूपमा अगाडि बढाइनु पर्छ। महासंघले औद्योगिक प्रतिष्ठानहरू, कृषि श्रमिकहरूको अवस्था र सेवाका क्षेत्रहरूको गम्भीर जाँच पडतालमा लाग्नु पर्छ। यसले मात्र त्यहाँको ठोस स्थितिलाई बुझ्न सकिन्छ, अन्तरविरोधलाई चिन्न सकिन्छ र नयाँ स्तरमा आन्दोलनलाई संगठित गर्न सकिन्छ। अहिले महासंघले यस क्षेत्रमा गरेको प्रारम्भिक प्रयासहरूलाई व्यवस्थित र योजनाबद्ध रूपमा अगाडि बढाउनु आवश्यक छ। अगामी दिनमा यो काम महासंघको महत्त्वपूर्ण काम बनोस्!

नेपाल ट्रेड यूनियन महासंघको उत्तरोत्तर प्रगति तथा "श्रमिक खवर" को प्रकाशनले निरन्तरता पाइरहोस्।



# यो बाह्र वर्षमा नेपालको श्रम बजार संगठित भयो

क. प्रदिप नेपाल, स्थायी कमिटी सदस्य–नेकपा (एमाले)

**बाह्र वर्षको श्रम बजार**

प्रजातन्त्रमा व्यक्तिको उर्जा प्रस्फुटित हुन्छ भन्ने सच्चाइ गएको बाह्र वर्षले प्रमाणित गरिदिएको छ । निरंकुश र निर्दलीयतामा प्रगति केहीको हुँदैन भन्ने सत्यलाई पनि यसले उद्घाटित गरिदिएको छ । श्रम बजारमा देखापरेको यो परिवर्तनले मुलुकको राजनीतिको प्रतिगमनलाई रोक्न महत्त्वपूर्ण सहयोग गरेको छ । नेपाली राजनीतिमा श्रम बजारको यो एउटा विशिष्ट योगदान हो ।

यो १२ वर्षमा नेपालको श्रम बजार संगठित भयो । कामले पूर्णता पाउन अझै बाँकी होला – तर इतिहासमा पहिलो पटक श्रम बजार व्यवस्थित भएको अवस्था देखा पर्‍यो, बाह्य कारणले उत्पन्न प्रतिकूलताको कुरा अर्कै हो ।

**के हुनै पर्थ्यो, के गर्नै हुँदैनथ्यो**

यो, श्रम एजेण्डा भित्र काम गरिरहेकाहरूले दिने सुझाव या निष्कर्ष हो । बाहिर बसेर यो भएन, ऊ भएन भन्ने तरिका गलत हो । पानी देख्तै तीन हात उफ्रिएर भाग्नेले पौडी खेल्नेलाई हात-खुट्टा चाल्नु शिक्षा दिनु जस्तै हो ।

**ट्रेड युनियनले के गर्ने, के नगर्ने ?**

ट्रेड यूनियनहरूले सबै क्षेत्रलाई संगठित गर्नु पर्थ्यो । कुनै क्षेत्र पनि असंगठित नरहोस् भनी ध्यान पुर्‍याउनु पर्थ्यो ।

यसले संगठनसँगै राहतका प्याकेजहरू पनि आरम्भ गर्नु पर्थ्यो । मुलुकको सबैभन्दा उत्पीडित समुदायलाई आकस्मिक सङ्कटमा सहयोग गर्ने कोही छ भन्ने विश्वास जगाउने काम गर्नु पर्थ्यो ।

सक्ने जति सबै गर्नु पर्थ्यो । त्यसैले प्रश्नको पछिल्लो अंश आवश्यक परोइन ।

**रोजगारदाता, सरकारले गर्ने, नगर्ने?**

रोजगारदाताले श्रमको मूल्य तिर्न अधिकतम विन्दुसम्म जाने काम गर्नु पर्थ्यो । तिनले श्रमिकहरू नै राजनीति, समाज र अर्थतन्त्रका वास्तविक निर्माता हुन् भन्ने सच्चाइ महसुस गर्नु पर्थ्यो । व्यवस्थापनमा मजदुरहरूको संगठित संलग्नता सुनिश्चित गरिदिनु पर्थ्यो ।

सरकारले श्रम कानुनलाई अध्यावधिक गर्ने, एक्काइसौं शताब्दी सुहाउँदो बनाउने, निरंकुशकाल ताकाका बन्देजात्मक श्रमिक सम्बन्धी कानुनहरूलाई पूर्ण रूपले खारेज गर्ने काम गर्नु पर्थ्यो ।

**राजनीतिक पार्टीहरू**

राजनीतिक पार्टीले मजदुर वर्गको हितका सिद्धान्तहरूलाई व्यापक रूपमा समुदाय भित्र लैजानु पर्थ्यो । मजदुर वर्ग एउटा वर्ग हो - त्यो गैरमजदुर वर्गीय दृष्टिकोण बोकेका पार्टीहरूमा समाहित हुनै सक्दैन भन्ने सच्चाइ बोध गराउने व्यापक अभियानमा लाग्नु पर्थ्यो ।

**ट्रेड यूनियनलाई जस**

ट्रेड यूनियनहरूले श्रमिकलाई संगठित गरेका छन् । आफ्नो अधिकार प्रति सचेत तुल्याएका छन् । श्रमिकमाथि हुने अन्याय-अत्याचारका विरुद्ध प्रभावकारी संघर्ष सञ्चालन गरेका छन् । उपलब्धि लिएका छन् । मजदुर समुदायको विश्वास जितेका छन् । आफूलाई राष्ट्रिय-अन्तरराष्ट्रिय क्षेत्रमा प्रतिष्ठापूर्ण ढङ्गले परिचित गराएका छन् ।

**आलोचना**

ट्रेड यूनियनहरू पार्टीको प्रतिरूप भए । कांग्रेस तिनको मजदुर फुट्यो । एमाले फुट्यो - पाङदुरे तालमा अर्को 'कोण्ट' बन्यो । मजदुर हित र अहितको आधारित मुद्दामा कुनै विवाद हुनुलाई स्वाभाविक ठान्न सकिएला । तर विभाजनलाई देशले स्वीकार्दैन ।

**श्रमिक खवर र जिफन्ट**

श्रमिक खवरको प्रकाशन सिङ्गो नेपाली मजदुर आन्दोलनको चेतना पक्षको सर्वोत्कृष्ट उपलब्धि हो । यसलाई श्रमिक वर्गीय राजनीतिको अभिन्न अङ्ग बनाइरहनु पर्दछ ।

नेपाल ट्रेड यूनियन महासंघले संगठन विस्तार, प्रशिक्षण र कार्यालय व्यवस्थापनमा आफूलाई उत्कृष्ट प्रमाणित गरेको छ । यी तीन क्षेत्रमा नेपालका राजनीतिक पार्टीले महासंघबाट सिक्ने अवसर प्राप्त गरेमा मुलुकको उन्नतिमा पार्टीहरूको लगानी प्रतिफलमूलक हुनेछ ।

# मजदुर वर्गीय संस्कृतिको संश्लेषणको आवश्यकता

क. शंकर पोखरेल, केन्द्रीय सदस्य–नेकपा (एमाले)



**बाह्र वर्षमा हाम्रो श्रम बजार**

नब्बेको दसकमा आरम्भ भएको प्रजातान्त्रिकरणको लहरसँगै नेपालमा पनि ऐतिहासिक जनआन्दोलन सम्पन्न भएको थियो। उक्त आन्दोलनले नेपालमा सम्वैधानिक राजतन्त्र र बहुदलीय संसदीय प्रणालीमा आधारित प्रजातान्त्रिक व्यवस्था स्थापना गर्न सफल भएको थियो। विश्व अर्थव्यवस्थामा उदारीकरण र विश्वव्यापीकरणको प्रक्रिया तीव्र बन्न पुगेको अवस्थामा नेपालमा स्थापित नव प्रजातान्त्रिक व्यवस्थाले नेपाली कांग्रेसको नेतृत्वमा निजीकरण र आर्थिक उदारीकरणको नीतिलाई अंगीकार गर्न पुगेको थियो। जसले गर्दा बहुदलीय व्यवस्थाको स्थापना पश्चातको श्रम बजार मूलत: निजीकरण र आर्थिक उदारीकरणको नीतिबाट प्रभावित बन्न पुग्यो। निजीकरण र आर्थिक उदारीकरणको नीतिका कारणले बाह्र वर्षको अवधिमा श्रम बजारको अवस्थामा निकै ठूलो उतार-चढाव देखिने गरेको छ। यसले एकातिर परम्परागत जीवन निर्वाहको उत्पादन प्रणालीलाई एकहदसम्म बदल्न सफल भएको छ भने अर्कोतिर योजनाबद्ध औद्योगिक विकासको प्रक्रिया अवरुद्ध बन्न गई स्वतस्फुर्तताको विकास हुन पुगेको छ। यसले एकातिर असंगठित श्रम बजारको व्यापक विकास भएको छ भने संगठित श्रम क्षेत्र संकटमा पर्दै गएको छ।

निजीकरण र उदारीकरणको नीतिले औद्योगिक श्रम बजारमा अत्यन्त गहिरो प्रभाव पारेको छ। यसले एकातिर सरकारी र सार्वजनिक स्वामित्वमा रहेका प्रतिष्ठानहरू निजी क्षेत्रमा हस्तान्तरण गर्ने प्रक्रिया आरम्भ भएको छ। अर्कोतिर यस नीति अन्तर्गत, प्रविधि र व्यवस्थापनमा भएको सुधार अन्तर्गत श्रम शक्तिमा व्यापक कटौती गरिएको छ। कोटामा आधारित निर्यातमुखी उद्योगले खपत गरेको श्रमशक्ति कोटा प्रणाली खारेज हुनासाथ संकटमा पर्ने गरेको छ। यस बीचमा गलैचा र गार्मेन्ट क्षेत्रको विकास र अवनतिले श्रमक्षेत्रमा सबैभन्दा निकै ठूलो उतार चढाव ल्याउनु स्वभाविक नै हो। आर्थिक उदारीकरणको नीतिले यस अवधिमा सेवा क्षेत्रको विकास उल्लेखनीय रूपमा भएको छ र सेवा क्षेत्रमा संलग्न श्रमशक्तिको आकार पनि तदनुरूप विस्तार भएको छ। बाह्र वर्षको अवधिमा असंगठित क्षेत्रमा संलग्न श्रमशक्तिलाई संगठित गर्ने र उनीहरूको अवस्थामा सुधार ल्याउने प्रयास भएको छ। कमैयामुक्तिको घोषणा अनौपचारिक क्षेत्रको सुधारमा गरिएको सर्वाधिक महत्त्वको घटना हो। यसै गरी नेपाल-भारत बीचको व्यापार तथा पारवहन सन्धिका कारणले पनि नेपालको औद्योगिक विकास प्रभावित बन्न पुगेको देखिन्छ। यसबाट भारतीय बजारमा आधारित रहेर स्थापना गरिएका निर्यातमुखी उद्योगहरूमा मात्र होइन भारतीय कच्चा पदार्थमा आधारित आयात प्रतिस्थापन गर्ने उद्योगको विकासमा समेत गहिरो प्रभाव पर्ने गरेको छ।। यस प्रकारको उतार-चढावको प्रत्यक्ष असर समेत नेपाली श्रम बजारमा पर्ने गरेको छ।

निजीकरण र आर्थिक उदारीकरणको नीतिले औद्योगिक क्षेत्रको विकाससँगै जुन रूपमा श्रम क्षेत्रको विकास हुने अपेक्षा गरिएको थियो, व्यवहारमा त्यस्तो केही हुन सकेन। यस बीचमा सम्पन्न दुई वटा पञ्चवर्षीय योजनाले उदार अर्थनीतिका माध्यमबाट उच्च आर्थिक वृद्धि दर हासिल गर्ने र रोजगारीका अवसरहरूमा वृद्धि गर्ने लक्ष अघि सारेको भए पनि त्यस्तो केही हुन सकेन। निरपेक्ष गरिबीको रेखामुनि रहेका जनताको जीवनस्तर उकास्ने कुरा गरे पनि उपभोक्तावादी संस्कृतिको विकाससँगै सामर्थ्य गरिबीको अनुपातमा निकै ठूलो वृद्धि भएर गएको छ। सामर्थ्य गरिबीको दरमा वृद्धि हुँदा हुँदै पनि उपभोक्तावादी संस्कृतिको विकासले बाणिज्य क्षेत्र र सेवा क्षेत्रमा उल्लेखनीय विकास भएको छ र त्यहाँ कार्यरत श्रमशक्तिमा समेत उल्लेख्य वृद्धि भएको छ। श्रम क्षेत्रमा भएको यस प्रकारको विकासलाई संगठित गर्न सक्ने हो भने समग्र नीति निर्माणको क्षेत्रमा श्रमशक्तिको भूमिका र प्रभाव बढ्ने निश्चित छ।

निजीकरण र उदारीकरणको नीतिका कारणले कतिपय क्षेत्रमा निजीक्षेत्रको भूमिका बढेर गएको छ। हल्का पेय पदार्थका साथै रक्सी, चुरोट र बियरको उत्पादनमा निकै ठूलो विकास भएको मान्न सकिन्छ। यस बीचमा निर्माण उद्योगमा निजी क्षेत्रको लगानी उल्लेखनीय रहेको छ। उपभोक्तावादी संस्कृतिको विकासका कारणले उच्च प्रविधिमा आधारित फिटिङ उद्योगको विकास पनि निकै भएको छ। तर त्यसले राष्ट्रिय अर्थतन्त्रको सन्तुलित र दिगो विकासमा खासै योगदान दिन सकेको छैन। तत्कालिक मुनाफाको सम्भावनामा आधारित रहेर गरिने अस्थायी लगानीका कारणले पनि श्रम असुरक्षाको अवस्था लगातार रहने गरेको छ। जोखिममा परेको अवस्थामा औद्योगिक प्रतिष्ठानमा सुधार गर्ने कुरामा भन्दा प्रतिष्ठान नै बन्द गरेर नयाँ क्षेत्रमा लगानी गर्ने प्रवृत्ति नेपाली उद्यमीहरूमा देखिने गरेको छ। छिटो समयको सुरक्षित लगानी र असुरक्षित श्रम नेपाली श्रम बजारको यथार्थ हो। यस प्रकारको अवस्थामा के गर्नु पर्दथ्यो र के गर्नु हुँदैनथ्यो भन्ने कुरा निकै कठिन कुरा हो। तर पनि सुरक्षित श्रम क्षेत्रको विकासका लागि दिगो आर्थिक विकास निकै नै महत्त्वपूर्ण कुरा हो। ट्रेड यूनियन आन्दोलनले दिगो आर्थिक विकासको लक्ष्यमा आधारित विकास रणनीतिसँग नै मजदुर वर्गको स्वार्थ गाँसिएको हुन्छ भन्ने सत्यलाई बुझ्नु जरुरी हुन्छ। तर यस सवालमा ट्रेड यूनियन आन्दोलनको मात्र होइन सिंगो राजनीतिक आन्दोलनको समेत यथोचित ध्यान पुग्न सकेको देखिदैन। उदारीकरण र निजीकरणको विकल्पका रूपमा अघि सारिएको छनौटपूर्ण नीतिको पनि ठोसरूपमा अघि आउन सकेको छैन। यस प्रकारको अवस्थामा निजीकरण र उदारीकरणको नीतिले नेपालको आर्थिक क्षेत्रमा पारेको असरका बारेमा गहिरो अध्ययन गरी आर्थिक सुधारका लागि ठोस विकल्प अघि वढाइनु पर्दछ। जिफन्टले आफूलाई वर्तमान आर्थिक नीतिको विकल्प निर्माण गर्न र त्यस नीतिको पक्षमा मुलुकलाई अघि बढाउन पहल गर्नु पर्दछ।

श्रम बजारको कुरा गर्दा यस अवधिमा वैदेशिक रोजगारको क्षेत्र पनि श्रमबजारको महत्त्वपूर्ण क्षेत्र बन्न पुगेको छ। पंचायत कालमा सीमित समुदायको मात्र पहुँच रहेको वैदेशिक रोजागारको क्षेत्रमा अहिले निम्न मध्यम वर्गको समेत सहजै पहुँच भएको देखिन्छ। बहुदलीय व्यवस्था स्थापनासँगै विकास भएको वैदेशिक रोजगारीको क्षेत्र मुलकमा हत्या हिंसाको श्रृंखलामा भएको वृद्धिसँग व्यापक वृद्धि भएर गएको छ। यस बीचमा विश्वव्यापी रूपमा बढ्दै गएको तनाव तथा जोखिम पूर्ण काममा श्रमशक्तिको अभाव बढ्न थालेपछि नेपाली श्रमिकहरूको माग बढेर गएको देखिन्छ। वैदेशिक रोजगारीमा नेपालीहरूको प्रवेशसँगै उनीहरूको हितका प्रश्नमा पनि मुलुक भित्र र बाहिर संगठित पहलको

आवश्यकता बढेर गएको छ। यस क्षेत्रलाई समेत ट्रेड यूनियन आन्दोलनले समेट्ने र संगठित गर्ने प्रयास गर्नु पर्दछ।

**ट्रेड यूनियनको भूमिका**

बाह्र वर्षको अवधिमा ट्रेड यूनियन आन्दोलनमा भएको संस्थागत विकासलाई उल्लेखनीय मान्नुपर्छ। पंचायत कालमा सीमित दायरामा रहेको ट्रेड यूनियन आन्दोलन बहुदलीय व्यवस्थाको स्थापना पश्चात विस्तारित भएको छ। औपचारिक र संगठित क्षेत्रमा मात्र होइन अनौपचारिक क्षेत्रमा समेत ट्रेड यूनियन आन्दोलनको प्रवेश भएको देखिन्छ। विगत पंचायत कालमा आन्दोलनमुखी चरित्र बोकेको ट्रेड यूनियन आन्दोलन अहिले ट्रेड यूनियन शिक्षा, व्यवस्थापन र नीति निर्माणका क्षेत्रमा समेत प्रवेश पाउन सफल भएको छ। ट्रेड यूनियन आन्दोलनको कार्य क्षेत्रमा भएको विकास र भूमिकामा आएको कतिपय परिवर्तनका कारणले ट्रेड यूनियन आन्दोलन भित्र आन्दोलन भन्दा सम्वादले बढी ठाउँ पाउन थालेको छ। सम्वादको प्रक्रियाबाट अधिकार प्राप्त गर्ने सम्भावना र तदनुरूप अधिकारका लागि लविङ्मा जोड दिने प्रवृत्तिले ट्रेड यूनियन आन्दोलनको आन्दोलनकारी चरित्रमा ह्रास आउने खतरा उत्पन्न भएको छ। यसरी नै पार्टीसँग आबद्ध ट्रेड यूनियन आन्दोलन नै नेपालको प्रतिनिधिमूलक ट्रेड यूनियन आन्दोलन रहेको र मूलधारका ट्रेड यूनियनसँग सम्बद्ध पार्टीहरू राष्ट्रिय राजनीतिमा सत्तापक्ष र प्रतिपक्षको रूपमा रहेका कारणले गर्दा वेला-वेलामा ट्रेड यूनियन आन्दोलनलाई राजनीतिक दलहरूले ऐक्यबद्धता जनाउने भन्दा आन्दोलन स्थगन गर्नका लागि दवाव दिने अवस्था समेत देखिने गरेको छ। ट्रेड यूनियन आन्दोलनको विकास र सुदृढीकरणका लागि यस प्रकारको अवस्था अत्यन्त हानिकारक हुने गर्दछ। यस्ता प्रश्नहरूमा ट्रेड यूनियन आन्दोलनले मूलतः वर्गीय हितलाई प्रतिनिधित्व गर्दै आफ्नो भूमिका र अडान प्रस्तुत गर्न सक्नु पर्दछ।

**रोजगारदाताको भूमिका**

आमरूपमा रोजगारदाताहरूको प्राथमिक उद्देश्य मुनाफा कमाउनु नै हो। तर पनि आजका रोजगारदाता र उद्यमीहरूले मानवीय श्रमको प्रत्यक्ष शोषण गरेर भन्दा उनीहरूको दक्षतापूर्ण उपयोग गरेर मुनाफा कमाउने प्रयास गर्नु पर्दछ। श्रमिकहरूको दक्षता अभिवृद्धि गरेर, उत्पादन प्रक्रियामा त्यसको कुशलतापूर्वक प्रयोग गरेर रोजगारदाताले यथोचित मुनाफा कमाउन सक्दछ। तर नेपालमा यस प्रकारको सोचाइको विकास अझै हुन सकेको छैन। अधिकांश रोजगारदाताले अदक्ष र अर्धदक्ष श्रमिकलाई काममा लगाएर मानवीय श्रमको शोषण गरेर नै मुनाफा कमाउने गरेका छन्। यस प्रकारको अवस्थाको अन्त्य गरिनु पर्दछ। हुनत उच्च प्रविधिको विकास र प्रयोग तथा बजारमा देखिएको उच्च प्रतिस्पर्धाको अवस्थाले अब विस्तारै दक्षताको खोजी गर्नु पर्ने अवस्थाको विकास भएको छ। कतिपय रोजगारदाताहरूले यस पक्षलाई ध्यानमा राखेर दक्षता अभिवृद्धिमा समेत ध्यान दिन थालेका छन्। तर पनि यो आम अवस्थाको रूपमा विकास हुन निकै समय लाग्ने निश्चित छ। यस्ता प्रश्नहरूमा रोजगारदाताहरूको ध्यान जान सक्नु पर्दछ। प्रत्यक्ष मानवीय श्रमको शोषणले औद्योगिक अशान्तिलाई जन्म दिन्छ भन्ने सच्चाइलाई समयमै ध्यान दिन सक्नु पर्दछ।

**सरकारको भूमिका**

यस बीचको अवधिमा सरकारको भूमिका पनि नीति निर्धारणका तहमा नै सीमित रहेको छ। नीतिलाई व्यवहारमा लैजाने सवालमा सरकार असक्षम नै देखिने गरेको छ। सरकारको औद्योगिक नीति र श्रमनीतिका बीचमा समेत एक प्रकारको विरोधाभाष रहँदै आएको छ। लगानी आकर्षित गर्ने उद्देश्यका साथ औद्योगिक नीति तर्जुमा गर्ने र ट्रेड यूनियनको हितलाई ध्यानमा राखेर श्रमनीति तयार गर्ने कुराले नै यस प्रकारको विरोधाभाष देखिने गरको छ। औद्योगिक नीति अघि सार्दा श्रमिकहरूको हितलाई समेत ध्यान दिने र श्रमनीति अघि सार्दा लगानीको पक्षलाई समेत ध्यान दिन सकेको भए यस प्रकारको विरोधाभाषको अवस्था देखिने थिएन। यस्ता प्रश्नमा सरकार र विधि निर्माताको ध्यान जान सक्नु पर्दछ।

**राजनीतिक पार्टीहरूको भूमिका**

श्रम बजारको विकासमा राजनीतिक क्षेत्रको भूमिका खासै देखिन सकेको छैन। राजनीतिक आस्थाका आधारमा ट्रेड यूनियनका निर्माणमा बाहेक ट्रेड यूनियन आन्दोलनलाई राजनीतिक आन्दोलनको अंगको रूपमा विकास गर्ने कुरामा राजनीतिक दलहरूको भूमिका देखिदैन। तर पनि नेपालको ट्रेड यूनियन आन्दोलनमा राजनीतिक दलहरूको भूमिका उल्लेखनीय नै रहेको छ। राजनीतिक दलहरूले जबसम्म श्रमक्षेत्रलाई राजनीतिक आन्दोलनको आधारका रूपमा विकास गर्न सक्तैनन् तबसम्म नेपालका राजनीतिक दलहरू आफ्ना उद्देश्यहरूमा सार्थकढंगले अघि बढ्न सक्तैनन्। राजनीतिक दलहरूले राजनीतिक आदर्शका रूपमा निकै अग्रगामी सोचाइहरूलाई ग्रहण गरे पनि व्यवहारमा उनीहरू सामन्ती सोच र कार्यशैलीबाट मुक्त हुन सकेका छैनन्। नीति र व्यवहारका बीचमा सन्तुलन कायम गर्नका लागि पनि राजनीतिक दलहरूले आफूलाई मजदुर वर्गीय आन्दोलनसँग आबद्ध गर्न सक्नु पर्दछ। नेपालको ट्रेड यूनियन आन्दोलन भित्र नेतृत्वमा पूँजीपति वर्गीय रुझान र मजुदुरहरूमा किसान चरित्र हावी हुने गरेको छ। यस प्रकारको अवस्था उत्पन्न हुनुमा मजदुर आन्दोलन वर्गीय आन्दोलनका रूपमा अझैसम्म पनि विकास हुन नसक्नु हो। यस प्रकारको अवस्थालाई चिर्नका लागि पनि राजनीतिक दलहरूले मजदुर आन्दोलनलाई वर्गीय आन्दोलनका रूपमा विकास हुने आधार तयार गर्न सहयोग गर्नु पर्दछ। मजदुरहरूलाई वर्गीय आन्दोलनको विकास गर्न सक्ने हिसाबले सशक्तीकरण गर्ने प्रयास गर्नु पर्दछ।

**ट्रेड यूनियनको कमी-कमजोरीहरू**

नेपालको ट्रेड यूनियन आन्दोलन नीति निर्माणको तहमा हस्तक्षेप गर्न, रोजगारदाताहरूसँगको सम्बन्ध विकास गर्न, ट्रेड यूनियनहरूको बीचमा अन्तर सम्बन्ध विकास गर्न र सामूहिक सौदावाजी गर्न एकहदसम्म सफल रहेको छ। यसका साथै ट्रेड यूनियन शिक्षा, प्रचार तथा प्रकाशन र अन्तरराष्ट्रिय सम्बन्धको विकास तथा कार्यालय व्यवस्थापनमा समेत ट्रेड यूनियन आन्दोलन सफल रहेको देखिन्छ। ट्रेड यूनियन आन्दोलनको कमी-कमजोरी पनि उल्लेखनीय नै रहेका छन्। ट्रेड यूनियन आन्दोलन आवश्यकता अनुरूप आन्दोलनमुखी र कारखानामुखी हुन नसक्नु, समुदायभन्दा बाहिर परियोजनाका कामहरूमा बढी संलग्न हुनु र प्रशासनिक क्षेत्र जस्तै कार्यालयमुखी बन्दै जानु जस्ता कुराहरू ट्रेड यूनियन आन्दोलनको विकासमा गतिरोध ल्याउन सक्ने उल्लेख्य कमजोरीका पक्षहरू रहेका छन्। ट्रेड यूनियनहरूले यस्ता पक्षहरूलाई सच्याउन र सुधार्न प्रयास गर्नु पर्दछ। नेपालको ट्रेड यूनियन आन्दोलन सफेदपोस मजदुरहरूको आन्दोलन नबनोस् र समयक्रममा त्यो अर्थवादी आन्दोलनका रूपमा पतन नहोस् भन्ने कुरामा ध्यान दिनु पर्दछ। यसका लागि आधारभूत शिक्षा र आन्दोलनमा जोड नै मुख्य कुरा हो। विगत केही समययता जिफन्टले यस दिशामा गरेका प्रयासहरूलाई सकारात्मक मान्न सकिन्छ।

**जिफन्टबारे**

जिफन्ट नेपालको सबैभन्दा प्रभावशाली ट्रेड यूनियन आन्दोलन हो। अन्य यूनियनहरूको तुलनामा यो अग्रणी नै रहेको छ। तर पनि यसले आफ्नो भूमिकालाई अझ बढी विस्तारित बनाउन सक्नु पर्दछ। राजनीतिक र सांस्कृतिक चेतनाबाट मजदुर समुदायलाई लैस गर्ने प्रयास गर्नु पर्दछ। नेपाली परिप्रेक्षको मजदुर वर्गीय संस्कृतिलाई संश्लेषण गरी त्यसलाई राजनीतिक क्षेत्रका साथै अन्य सामाजिक आन्दोलनमा समेत रूपान्तर गर्न सक्नु पर्दछ। आगामी दिनमा यस दिशामा जिफन्टले ठोस पहल गर्न सकोस्। श्रमिक खवरको हिरक अंकको प्रकाशनको अवसरमा पत्रिकाको एउटा नियमित पाठक र मजदुर आन्दोलनको शुभेच्छुकका हिसाबले जिफन्ट परिवारप्रति हार्दिक शुभकामना।

# श्रमिकहरूको अर्थिक-राजनीतिक अधिकार र नीतिमा प्रभावकारी हस्तक्षेपको स्थिति ल्याउन अझै सकिएको छैन



मा. सुशील प्याकुरेल, सदस्य-राष्ट्रिय मानवअधिकार आयोग

श्रमिक खवरको विगतका अङ्कहरूको समीक्षा मेरो लागि एउटा चुनौतीपूर्ण काम नै भएको छ। विगतको १२ वर्षको आफ्नो प्रकाशनको यात्रामा श्रमिक खवरले आफ्नो कलेवरमा निकै भिन्नता ल्याएको छ। आफ्नो पहिलो अङ्कमा "विचारलाई एउटा भौतिक शक्तिको रूपमा गणना गरिन्छ" भनि विचार प्रमुख पत्रिकाको रूपमा श्रमिक खवरलाई नेपाली श्रमजीवी जनता समक्ष प्रस्तुत गरिएको थियो। श्रमिक खवरको प्रकाशन नेपालमा प्रजातन्त्रको उदय सँगसँगै भएको छ। त्यसैले यस बीचमा राष्ट्रमा भएका प्रत्येक प्रमुख घटनाहरूलाई श्रमिक खवरले पनि समेट्नु स्वाभाविक हो र त्यसो भएको छ। विभिन्न अङ्कमा विभिन्न खास विषयलाई उल्लेख गरिएकोमा "डव्लुटिओ" "क्रान्तिकारी भूमिसुधार" "वैदेशिक रोजगारीमा नेपाली श्रम " र "सामाजिक सुरक्षा" आदि विषयहरू श्रमिक खवरको हालको उत्तरार्धका विशेषता हुन्।

**श्रम बजारको स्थिति**

श्रमिक खवरको प्रकाशनको १२ वर्षको अवधिमा नेपालमा श्रम गतिविधि र श्रम बजारमा परिवर्तनहरू देखा परेका छन्। प्रजातन्त्रको उदयले श्रमिकहरूको संगठित हुने अधिकारलाई सुनिश्चित गरेको छ, त्यस्तै देशमा भित्रिएको वैदेशिक पूँजी-उदारीकरण र विश्वव्यापीकरणको प्रभाव पनि श्रम क्षेत्रमा परेको छ। उदारीकरणको सकारात्मक भन्दा नकारात्मक प्रभाव श्रमिक वर्गले झेल्नु परेको छ। श्रम बजार सम्बन्धी वैज्ञानिक नीति नभएकोले श्रम बजारमा वर्षेनी थपिने श्रमले या त वेरोजगारीको मार खप्नु परेको छ या उही पुरानै श्रम प्रणाली भित्र रही उत्पादकत्व वृद्धिमा भूमिका खेल्न नसकी कुंजिनु परेको छ, कृषि क्षेत्रबाट उत्पादकत्व बढाउने गरी औद्योगिक क्षेत्रमा श्रमको प्रवेश हुन सकेको छैन। वैदेशिक बजारमा श्रमको माग भएता पनि नेपाली श्रम त्यस तर्फ व्यवस्थित रूपमा प्रवेश गर्न सकेको छैन। सरकारको श्रमप्रतिको परम्परागत र रुढीग्रस्त सोचले गर्दा विदेशमा नेपाली श्रम "सस्तो", "गैह्र कानूनी" र "दास" जस्तो भएको छ। राष्ट्रको शोधनान्तरमा एउटा प्रमुख हिस्सा ओगट्ने नेपाली श्रमको पहिचान "गैह्र कानूनी आप्रवासी" हरूको रूपमा चिनिएको छ र निकासी गर्दा जस्तो श्रम थियो घर फर्कंदा पनि उत्पादकत्व वृद्धिमा हिस्सा लिन सक्ने दक्षता हासिल गर्न नसकेको स्थिति छ।

प्रजातन्त्रको उदय पछि ट्रेड यूनियनहरूको संस्था र सदस्यताहरूमा संख्यात्मक विकास भए तापनि श्रमिकहरूको "आर्थिक-राजनीतिक अधिकार" र नीतिमा प्रभावकारी हस्तक्षेपको स्थिति ल्याउन भने ट्रेड यूनियनहरूले अझै सकेको स्थिति छैन। औद्योगिक वा उत्पादन सम्बन्धी नीतिहरूमा ट्रेड यूनियनको उपस्थितिको आवश्यकताको बोध अझै हुन सकेको छैन।

**सरकारको भूमिका**

सरकारले ट्रेड यूनियनहरूलाई श्रमिकहरूको राजनीतिक संगठन र दलहरूको भ्रातृ संगठनको रूपमा मात्र हेरेको छ भने राजनीतिक दलहरूले पनि "श्रम संगठन" लाई देशको नेतृत्वको एउटा हिस्साको रूपमा भन्दा अरु विभिन्न भ्रातृ वा भगिनी संस्था वा मात्र अह्राएको काम गर्ने "कार्यकर्ता समूह" को रूपमा हेरेको पाइन्छ। त्यस्तै रोजगारदाताहरूमा श्रमलाई सम्पूर्ण औद्योगिक विकासको एउटा अभिन्न र प्रमुख अङ्कको रूपमा हेर्ने परिपाटी वा सोचको शुरूवात समेत भएको पाइँदैन।

**रोजगारदाताको भूमिका**

रोजगारदाताहरूको लागि ट्रेड यूनियनहरू उनीहरूको "मुनाफा" घटाउने एउटा इकाई भएको मनोदशा व्यापकरूपमा रहेको छ। त्यसैले रोजगारदाताहरूले श्रम संगठन वा ट्रेड यूनियनहरूलाई "हड्ताल" को पर्यायको रूपमा लिएका छन्। ट्रेड यूनियनसित उनीहरूको सम्बन्ध हड्तालको फ्रेम भित्र मात्र सीमित रहेको अवस्था छ।

**ट्रेड यूनियनको भूमिका**

विगत १२ वर्षको अवधिमा ट्रेड यूनियन संगठनहरूले औद्योगीकरणको क्षेत्रमा प्रारम्भिक अवस्थामा रहेको र सामन्ती सामाजिक बनौट भएको हाम्रो मुलुकका मजदुरहरूलाई संगठित गर्ने र तिनको आफ्नो श्रमप्रति गर्व गर्ने सोचको विकास गर्नमा उल्लेखनीय उपलब्धि हासिल गरेका छन्। विश्वमा देखा परेको नयाँ समस्याहरू उदारीकरण, बजार अर्थतन्त्र, विश्वव्यापीकरण आदिमा कम्तीमा नेतृत्व तहमा एक स्तरको चेतनाको विकास भएको छ। त्यतिमात्र हैन, प्रजातन्त्र र मानव अधिकारलाई मजदुर आन्दोलनसित जोडेर हेर्ने प्रवृत्ति पनि बढ्दै गएको छ। यी सब ट्रेड यूनियनका बीचको स्वस्थ प्रतिस्पर्धा, सम्बन्ध र प्रयासले भएको हो।

श्रम आन्दोलनको १२ वर्षलाई यसको सकारात्मक र नकारात्मक पक्षबाट विश्लेषण गर्ने हो भने यसको उपलब्धि मात्र हैन नकारात्मक पक्ष पनि अनुभव भएको छ। संगठित मजदुर आन्दोलनले एक शताब्दी पार गरेको मात्र हैन मजदुर वर्गले राजनीतिक सत्ता वा शक्ति पनि प्राप्त गर्नु पर्छ र त्यस्तो गर्नु आवश्यक छ भन्ने सोचको प्रयोग भएको पनि ८५ वर्ष भन्दा बढी भएको छ। श्रमिक हक वा हितलाई मात्र आर्थिक र भौतिक उपलब्धिको सीमा भित्र राखेर श्रमिक वर्गको सही मुक्ति हुन सक्दैन र श्रमिकको स्वतन्त्रता विना उत्पादन बढ्न सक्दैन, सामाजिक न्याय हुन सक्दैन। श्रमिकको काम कसैको लागि श्रम गर्नु वा जीवन धान्न श्रम गर्नु मात्र हैन श्रमिक मानव विकासको एउटा अभिन्न अङ्ग हो भन्ने सोच आम मजदुरमा अझै आउन सकेको छैन।

१९ औं शताब्दीको उत्तरार्ध देखि बीसौं शताब्दीको मध्यसम्म श्रमिक वर्गले आफ्नो आन्दोलनबाट श्रमिक वर्ग राज्य सत्ताको एउटा प्रमुख वाहक हुन सक्छ भन्ने कुरा स्थापित गराएका थिए। श्रमिक वर्गको नेतृत्वले मात्र जनताको अधिकारहरूलाई स्थापित गर्ने र विकासलाई सही मानेमा जनताको हितमा अगाडि बढाउन सक्छ भन्ने ध्येयका साथ "श्रमिक वर्ग" को भनिएको नेतृत्वमा भूगोलको अधिकांश भूभागमा राज्य स्थापना भयो तर त्यस्तो राज्य सत्ता स्थापना भएको आधा शताब्दी बित्दा नबित्दै के साँचै नै श्रमिक वर्गले त्यस्तो राज्य सत्ताको नेतृत्व गरेका थिए ? के त्यस्तो राज्य सत्ताले श्रमिक वर्गको साँचै हित गर्न सक्यो ? भन्ने खालका प्रश्नहरू अगाडि आएको मात्र हैन कतिपय त्यस्तो राज्य सत्ता भएको मुलुकमा मजदुरको नाममा आन्दोलन पनि भए र विस्तारै श्रमिक वर्गको नेतृत्वमा स्थापित राज्य सत्ताको चरित्र मै परिवर्तन हुन थाल्यो।

बीसौं शताब्दीको उत्तरार्धतिर आउँदा नआउँदा विश्व आर्थिक व्यवस्थामा नयाँ नेतृत्व र नियन्त्रण निकायहरू जवरजस्त रूपमा देखा परे। विश्व बैंक, अन्तरराष्ट्रिय मुद्रा कोष र विश्व व्यापार संगठनको प्रभुत्वले मजदुर आन्दोलनको दिशा र चरित्रमा पनि प्रभाव पारेको छ। समसामयिक विश्वमा श्रमिक आन्दोलनहरू राज्य सत्ता प्राप्ति भन्दा पनि विश्व आर्थिक प्रणालीको विरोधमा संगठित हुँदै गएको विकसित मुलुकमा देखा परेको छ भने तेस्रो विश्व वा विकासोन्मुख राष्ट्रहरूमा श्रमिक आन्दोलनले कहिले राजनीतिक मात्र वा कहिले आर्थिक मात्र मागमा हिंडेको देखिन्छ। यस्तो अवस्थामा ट्रेड यूनियन महासंघले नेपाल जस्तो सामन्ती प्रभावमा अझै जकडिएको प्रजातान्त्रिक व्यवस्था भनिए पनि त्यसको मूल आधार संविधान नै प्रायः निष्कृय रहेको र समाजको ढाँचामा पूँजिवादले प्रभाव पार्दै गरेको मुलुकमा श्रमिक आन्दोलनलाई सामाजिक-राजनीतिक विकासको लागिको आन्दोलनको वाहकको रूपमा कसरी स्थापित गराउन सकिन्छ भन्ने चुनौतीलाई सामना गर्दै वर्गीय र सामाजिक दायित्व निर्वाह गर्नु पर्ने आवश्यकतालाई बुझ्नु आवश्यक छ।

### संयुक्त जनआन्दोलनको समर्थनमा

# देशव्यापी रूपमा टुल्स डाउन तथा स्टेरिङ जाम

असोज १८ गतेको प्रतिगामी शाही कदमबाट अवरुद्ध जनताको प्रजातान्त्रिक अधिकारको पुनर्बहाली र यसको अग्रगामी निकासका लागि मूलधारका पाँच राजनीतिक पार्टीहरूको आव्हानमा भइरहेको जनआन्दोलनको चौथो चरणको कार्यक्रम अन्तर्गत २०६० असार १ गते ट्रेड यूनियनहरूले देशव्यापी विरोध कार्यक्रम सम्पन्न गरे । यस अन्तर्गत औद्योगिक क्षेत्रमा **टुल्स डाउन** तथा उद्योगहरूमा कालो झण्डा गाड्ने, शहरका मुख्य मुख्य स्थानमा **स्टेरिङ जाम** र हर्न बजाउनुका साथै नगरपालिकाहरूमा फोहर नउठाउने, र अटो वर्कसपहरू बन्द गर्ने कार्यक्रम सफलतापूर्वक सम्पन्न भएको छ ।

**काठमाडौं**मा नेपाल ट्रेड यूनियन महासंघ (जिफन्ट) र नेपाल ट्रेड यूनियन कांग्रेसको संयुक्त आव्हानमा भएको आजको कार्यक्रममा ट्रेड यूनियनका व्यानर सहित रत्नपार्क चोक, भोटाहिटी चोक, कलंकी चोक, बालाजु चोक र ललितपुरको कुपण्डोलमा दिउँसो ४:३० बजेदेखि ५ बजेसम्म मजदुरहरूले स्टेरिङ जाम गरी लगातार हर्न बजाए ।

रत्नपार्कमा भएको सभालाई नेपाल ट्रेड यूनियन कांग्रेस (एनटीयूसी) का अध्यक्ष लक्ष्मण बस्नेत तथा जिफन्टका उपाध्यक्ष ललित बस्नेतले सम्बोधन गर्नुभएको थियो ।

बालाजु औद्योगिक क्षेत्र लगायत काठमाडौं तथा ललितपुरका अन्य औद्योगिक प्रतिष्ठानहरूमा मजदुरहरूले दिन भरी नै कालोपट्टी बाँधेर काम गरे भने दिउँसो १:३० बजेदेखि २ बजेसम्म टुल्स डाउन गरी काम रोके । बालाजु औद्योगिक क्षेत्रमा मजदुरहरूले दिउँसो १:३० बजे कारखानाबाट निस्केर औद्योगिक क्षेत्रको गेट बाहिर गेट बन्द गरी नारा लगाई सभा गरेका थिए । सभालाई जिफन्ट मध्यमाञ्चल क्षेत्रीय संयोजक उद्धव केसीले सम्बोधन गर्नु भएको थियो । यसैगरी काठमाडौं, ललितपुर र भक्तपुरमा सफाइ मजदुरहरूले फोहर उठाएनन् । अटो वर्क्सपमा काम गर्ने मजदुरहरूले वर्कसप पुरै दिन बन्द गरे ।

**भक्तपुर** औद्योगिक क्षेत्रमा मजदुरहरूले दिउँसो १:३० देखि २ बजेसम्म सम्पूर्ण कारखाना बन्द गरे । मजदुरहरूले औद्योगिक क्षेत्रको गेटमा बसेर नारा लगाई सभाको आयोजना गरेका थिए ।

**झापा**मा चिया बगान लगायत अन्य औद्योगिक प्रतिष्ठानहरूमा




## अपिल

**नेपाल ट्रेड यूनियन महासंघ (जिफण्ट)**

वितेको ७ वर्षदेखि भंग भएको शान्ति र गत असोज १८ गतेको प्रतिगामी शाही कदमबाट अवरुद्ध जनताको प्रजातान्त्रिक अधिकारका कारण हाम्रो देशको उद्योग व्यवसाय समेत चौपट हुँदै आएको छ । यसको अग्रगामी निकासका लागि मूलधारका पाँच राजनीतिक पार्टीहरूले वैशाख २१ गतेदेखि शुरु गरेको संयुक्त जन आन्दोलनमा श्रमिकहरूको समर्थन र सक्रिय संलग्नता रहेको कुरा पहिले नै सार्वजनिक गरिसकिएको छ ।

चालु आन्दोलनले एउटा चन्द सरकारलाई कुर्सीबाट खसाली दिएको छ । तर यसका वावजुद आन्दोलनरत पार्टीहरूबाट, दलहरू र दरवारबीच समन्वय कायम गरी देशमा विद्यमान विद्रोहको अन्त्य तथा अग्रगामी परिवर्तनसहितको दिगो शान्तिको आग्रहलाई संस्थापना पक्षले लत्याई मुठभेड र द्वन्द्वकै बाटोबाट प्रतिगमनकारी कार्यलाई संस्थागत गर्ने नियत, सत्तामा हालीमुहाली गर्नेहरूमा रहेको देखिएको छ । जनताको तीब्र चाहनाको रुपमा रहेको शान्ति र राजनीतिक निकासका लागि दलहरूको मागका रुपमा रहेको हिंसा र भय रहित स्वतन्त्र निर्वाचन झन अन्यौलमा पर्न पुगेको छ ।

श्रमिकहरू वर्षौंदेखि विविध खाले समस्याका शिकार भैरहेका छन् । निजी क्षेत्रका प्रतिष्ठानहरू - काठमाडौं होटल, अन्नपूर्ण टेक्सटायलदेखि हिमाल सिमेण्ट, वुटवल धागो, वीरगंज चिनी कारखाना जस्ता सार्वजनिक क्षेत्रमा कार्यरत श्रमिकका समस्यालाई हल गर्नु भन्दा पनि राज्य त्यसलाई वेवास्ता गर्दै टालटुले नीतिमा हिंडिरहेको छ । यस्तो परिस्थितिबाट श्रमिकवर्ग उन्मुक्ति चाहन्छ । हामी हाम्रा पेशागत - वर्गीय मागलाई पुरा गर्ने आव्हान गर्दछौं र राजनीतिक अग्रगमनको लागि चालु संयुक्त जनआन्दोलनको चौथो चरणको कार्यक्रमको रुपमा आगामी असार १ गते निम्न कार्यक्रमसहित संलग्न हुन सम्पूर्ण कामदार-कर्मचारीहरूमा हार्दिक आव्हान गर्दछौं ।

यो कार्यक्रम जारी संयुक्त जनआन्दोलनप्रति ऐक्यवद्धता जाहेर गर्न सांकेतिक रुपमा आयोजना गरिएको भएता पनि श्रमिकका मागमा यथोचित ध्यान नदिए भावी दिनमा सशक्त रुपले प्रस्तुत हुने समेत सम्बद्ध पक्षलाई चेतावनी दिन चाहन्छौं ।

**असार १ गतेको कार्यक्रम**

- सम्पूर्ण औद्योगिक प्रतिष्ठानहरूमा दिउँसो १:३० देखि २:०० बजेसम्म "**टुल्स डाउन**" गर्ने । अरु समय कालोपट्टी बाँधेर काम गर्ने ।
- सेवामुलक प्रतिष्ठान तथा सार्वजनिक संस्थानहरूमा कार्यालय समयमा कालोपट्टी बाँधेर काम गर्ने ।
- देशभरका शहर तथा मुख्य सडकहरूमा अपरान्ह ४:३० बजेदेखि ५:०० बजेसम्म सवारी साधनको "**स्टेरिङ जाम**" गर्ने । १ मिनेट निरन्तर हर्न बजाई विरोध जनाउने । यो कार्यक्रम काठमाडौंका मुख्य मुख्य चोक र काठमाडौं बाहिर उपयुक्तता हेरी सोही अनुरुपका चोकहरूमा गर्ने ।
- असार १ गते नगर क्षेत्रहरूमा फोहर नउठाउने ।
- अटोमेकानिक्स क्षेत्रका सम्पूर्ण वर्कसपहरू पूरा दिन बन्द गर्ने ।

नेपाल ट्रेड यूनियन कांग्रेससँग संयुक्त रुपमा आयोजना गरिएको यो कार्यक्रमलाई प्रभावकारी रुपमा संचालन गर्न दुवै महासंघका सम्बन्धित क्षेत्रीय, अंचल तथा जिल्ला कमिटीहरूलाई आपसमा सल्लाह गरी सम्पूर्ण श्रमिक तथा तिनका संगठनहरूलाई आन्दोलनका कार्यक्रममा सरिक गराउन र आवश्यकता अनुरुप सबै आवद्ध संघहरूलाई एक आपसमा सल्लाह गरी व्यवहारिक र उपयुक्त विधि अनुरुप विरोध कार्यक्रमलाई प्रभावकारी बनाउन संयुक्त विज्ञप्ति मार्फत पहिले नै निर्देशित गरिसकिएको छ ।

शान्ति र प्रजातन्त्र हामी सवैको सरोकारको विषय भएकोले सम्बद्ध व्यवसायका **व्यवस्थापन पक्ष**मा समेत कार्यक्रमलाई सहयोग गरिदिनु हुन हार्दिक आव्हान गर्दै आन्दोलनरत राजनीतिक पार्टीहरूलाई समेत आफुसँग आवद्ध श्रमिकहरू, यूनियन, श्रम सम्बन्धी निकाय वा कमिटीहरूलाई आन्दोलनका कार्यक्रममा संलग्न हुने निर्देशन जारी गर्न गराउन समेत हार्दिक आग्रह गर्दछौं ।

अपिल अपिल अपिल अपिल

आधा घन्टा टुल्स डाउन भएको थियो । त्यहाँ मजदुरहरूले ४:३० बजेदेखि ५ बजेसम्म बिर्तामोड, दमक र काकडभित्तामा सभा गरी स्टेरिङ जामका साथै एक मिनेट हर्न बजाएका थिए ।

**बिराटनगर**मा मजदुरहरूले औद्योगिक प्रतिष्ठानहरूमा कालोपट्टी बाँधेर काम गरेको थिए । १:३० देखि २ बजेसम्म टुल्स डाउन गरी काम रोकेका थिए । त्यहाँ जिफन्ट कार्यालयबाट निस्केको जुलुस बसपार्कमा आएर संयुक्त कोणसभामा परिणत भयो । स्टेरिङ जाम र ५ मिनेट हर्न बजाउने काम सम्पन्न भएपछि जिफन्ट र एनटीयूसीका नेताहरूले मन्तव्य दिनु भएको थियो । इटहरीमा स्टेरिङ जाम दिउँसो १:३० बजे नै सम्पन्न भयो । त्यहाँ जिफन्टका पूर्वाञ्चल क्षेत्रीय संयोजक ओम कोइरालाले मन्तव्य दिनुभएको थियो ।

**पोखरा**को पृथ्वी चोकमा मजदुरहरूले ४५ मिनेटसम्म स्टेरिङ जाम गरी १ मिनेट लगातार हर्न बजाए । पृथ्वी चोकमा भएको कार्यक्रममा विभिन्न मजदुर नेताहरूका साथै नेपाली कांग्रेस तथा नेकपा(एमाले) का नेताहरूले मन्तव्य दिनु भएको थियो ।

**बुटवल**मा आज औद्योगिक प्रतिष्ठानहरूमा कालोपट्टी बाँधेर काम गरे भने ४ बजेदेखि टुल्स डाउन गरी मजदुरहरूले विरोध र्‍यालीको आयोजना गरेका थिए । ४ बजे बुटवलको औद्योगिक क्षेत्र, बि.टी.आई कम्प्लेक्स र मैनाबगरबाट मजदुरहरूको जुलुस शुरु भई लुम्बिनी बस टर्मिनल अगाडि आधा घन्टासम्म स्टेरिङ जाम गरी हर्न बनाउनुका साथै कोण सभा भएको थियो । सफाइ मजदुरहरूले बुटवल नगरमा आज फोहर उठाएनन् ।

**कपिलवस्तु**को जितपुर, दाङको तुल्सीपुर, पाल्पाको तान्सेन बसपार्क, नवलपरासीको सुनवल र गैंडाकोटमा कोण सभा तथा स्टेरिङजाम तथा हर्न बजाउने कार्यक्रम सम्पन्न भएको थियो ।

**बीरगञ्ज**मा मजदुरहरूले घन्टाघरमा आधा घन्टा स्टेरिङ जाम गरी हर्न बजाएका थिए । त्यहाँ औद्योगिक प्रतिष्ठानहरूका मजदुरहरूले दिन भरी नै कालोपट्टी बाँधी काम गरेका थिए भने ११ बजेदेखि १२ बजेसम्म औद्योगिक प्रतिष्ठानहरूमा टुल्स डाउन गरेका थिए । बन्द समयमा मजदुरहरूले कारखानाको गेट-गेटमा नारा लगाई प्रतिगमन विरुद्ध नारा लगाउनुका साथै मन्तव्य पनि दिएका थिए । यसरी नै रौतहटको चन्द्रनिगाहापुर र गौरमा, बाराको सिमरा र कलैयामा पर्साको गण्डक चेकपोस्टमा स्टेरिङ जाम र हर्न बजाउने कार्यक्रम भएको थियो ।

**नेपालगञ्ज**मा १:३० बजेदेखि २ बजेसम्म कारखानामा टुल्स डाउन भयो । यहाँको सम्पूर्ण अटो वर्क्ससप बन्द भयो र ४:३० बजेबाट शुरु भएको जुलुसलाई जिफन्टका अञ्चल अध्यक्ष केशवराज गिरी लगायतका मजदुर नेताहरूले सम्बोधन गर्नु भएको थियो ।

**धनगढी**मा १ बजेदेखि २ बजेसम्म औद्योगिक प्रतिष्ठानहरू बन्द हुनुका साथै ग्यारेज बन्द र अत्तेरियामा स्टेरिङ जाम र हर्न बजाउने कार्यक्रम भएको थियो ।

**महाकाली**को महेन्द्र नगरमा बिहान ९ बजेदेखि १० बजेसम्म स्टेरिङ जाम गरी ९:४५ देखि ५ मिनेटसम्म हर्न बजाउने कार्यक्रम सम्पन्न भयो । त्यसपछि मजदुरहरूले र्‍यालीको आयोजना गरी नगरपरिक्रमा गरे । र्‍यालीमा रिक्सा मजदुरहरूले रिक्सा र्‍याली सहित बजार परिक्रमा गरेका थिए । र्‍याली मदन चोकमा पुगेपछि सभामा परिणत भएको थियो ।

यसरी नै **जनकपुर** र **हेटौडा** लगायत देशका अन्य भागमा पनि मजदुरहरूले विभिन्न कार्यक्रम गरी प्रतिगमन विरुद्ध ट्रेड यूनियनको एकता भव्यतापूर्वक प्रदर्शन गरेको सूचना प्राप्त भएको छ ।

# जिफन्ट/एनटियूसीको संयुक्त पत्रकार सम्मेलन




प्रतिगामी शाही घोषणा विरुद्ध ५ संसदीय पार्टीहरूद्वारा सञ्चालित जनआन्दोलनलाई ट्रेड यूनियनको ऐक्यबद्धता जनाउन जेठ ७ गते होटल ब्लुस्टारमा नेपाल ट्रेड यूनियन महसंघ र नेपाल ट्रेड यूनियन काङ्ग्रेसले संयुक्त रूपमा पत्रकार सम्मेलन गरी समसामयिक विषयमा आफ्नो धारणा सार्वजनिक गरे । दुवै महासंघका अध्यक्षद्वारा सह-अध्यक्षता गरिएको उक्त पत्रकार सम्मेलनको स्वागत तथा संचालन जिफन्टका महासचिव विष्णु रिमालले गर्नुभएको थियो । पत्रकार सम्मेलनमा संयुक्त प्रेस विज्ञप्तिको वाचन एनटियुसीका महासचिव अच्युत पाण्डेले गर्नुभएको थियो । पत्रकार सम्मेलनमा पत्रकारहरूद्वारा राखिएको जिज्ञासामा दुवै ट्रेड यूनियनका अध्यक्षहरूले स्पष्ट पार्नुभएको थियो ।

संयुक्त प्रेस विज्ञप्तिमा भनिएको छ- "२०४६ सालको जनआन्दोलनको सफलता पश्चात जनअभिमतको आधारमा निर्मित नेपाल अधिराज्यको संविधान २०४७, आश्विन १८ गतेको प्रतिगामी शाही घोषणाबाट निस्क्रिय पारिएको छ । तमाम श्रमिक मजदुर र जनताले प्राण आहुति दिएर निर्माण गरेको संविधान क्रियाशील गरी विधि अनुरूप शासन पद्धति सञ्चालित हुनु पर्दछ ।"

"श्रम ऐन, ट्रेड यूनियन ऐन र श्रमजीवी पत्रकार ऐन नियम तथा कानुनहरू आफैमा अधुरा र अपुरा छन्, तिनमा सुधार गर्दै कार्यान्वयन गर्न हामीले पटक पटक लिखित तथा मौखिक रूपमा आफ्ना मागहरू राख्दै आए तापनि हालसम्म कार्यान्वयन भएका छैनन् । तिनलाई कार्यान्वयन गरिनु पर्दछ ।...."

वक्तव्यमा अगाडि भनिएको छ- "मुलुकमा श्रमिक अधिकारका लागि मात्र नभएर जन अधिकारका लागि पनि प्रजातन्त्र अनिवार्य छ । नेपाली श्रमिकहरूले पहिलो पाइला नै प्रजातन्त्र प्राप्तिको लडाइका लागि चालेको इतिहास छ । हाल प्रजातन्त्र र शान्तिको अभावमा देशको अर्थतन्त्र एकदमै नाजुक अवस्थामा पुगेको छ । यो अवस्था शान्तिको नाममा अल्मल्याउने वा आ-आफ्नो शक्ति सुदृढ गर्ने रणनीति तय गर्ने काम मात्र भएमा नेपाली श्रमिकलाई सहय हुनेछैन । त्यसैले शान्ति र प्रजातन्त्र प्राप्त गर्न आन्दोलन प्रति ऐक्यबद्धता जाहेर गर्न हामी सबैमा आव्हान गर्दछौं ।"

"अन्त्यमा २०४७ सालमा निर्मित नेपाल अधिराज्यको संविधानको क्रियाशीलता विना विधिको शासन लागू हुन सक्दैन । तमाम जनताको रगत र पसिनाले सिंचित संविधानको क्रियाशीलताका लागि विघटित संसदमा प्रतिनिधित्व गर्ने नेपाली कांग्रेस, नेकपा (एमाले) लगायत पाँच राजनीतिक दलहरूले सञ्चालन गरेको आन्दोलनको पूर्ण समर्थन गर्दै प्रतिगामी षडयन्त्रको अन्त्य र जनअधिकारको पूर्ण वहालीका लागि हामी यो आन्दोलनमा साथ दिन सबैमा आव्हान गर्दछौं ।"

## अग्रगामी निकासका लागि

# नेकपा (एमाले) को प्रस्ताव

क) २०४६ सालको जनआन्दोलनका उपलब्धिको रक्षा गर्दै थप उपलब्धिहरू हासिल गर्ने र विगतका अनुभवको समीक्षा गरी त्रुटि र कमजोरीहरू सच्याउने तथा जनअधिकारको विस्तार गर्दै प्रजातन्त्रको रक्षा, सुदृढीकरण र विकास गर्ने ।

ख) २०४६ सालको जनआन्दोलनबाट प्राप्त सफलताहरूलाई जनस्तरमा विस्तारित गर्ने, जनतालाई थप अधिकार सम्पन्न बनाउने, जनतामा अन्तरनिहित सार्वभौमसत्तालाई सुदृढ गरी राजकीय सत्ताको स्रोत जनतामा रहेको यथार्थलाई सुस्पष्टरूपले स्थापित गर्ने । प्रजातन्त्रको लाभ आम जनताले पाउने कुरा सुनिश्चित गर्दै सामाजिक, आर्थिक र साँस्कृतिक क्षेत्रमा यसलाई विस्तारित गर्ने । यसका लागि राजनीतिक, सामाजिक, आर्थिक र सांस्कृतिक क्षेत्रमा रूपान्तरण गर्ने ।

ग) प्रजातन्त्रलाई औपचारिक र कार्यविधिगत कुरामा सीमित नराखी यसलाई वास्तविक र जनसहभागितामूलक प्रजातन्त्रको रूपमा रूपान्तरण गर्ने । राज्य र समाजको पूर्ण प्रजातान्त्रीकरण गर्दै जनउत्तरदायी र पारदर्शी नीतिको अवलम्बन गरी सुशासनको स्थापना गर्ने ।

घ) मुलुकमा सिर्जना भएको हत्या, हिंसा र अराजकताको श्रृंखलालाई समाप्त गर्ने । यसका लागि सरकार र माओवादीबीच भएको युद्धविरामलाई सार्थकता प्रदान गर्दै शान्ति-वार्तालाई देश र जनताको हितमा सफल र परिणाममुखी बनाउने ।

यी मान्यताका आधारमा अग्रगामी परिवर्तनका लागि आवश्यकता अनुसार संविधानमा समेत समेट्ने गरी गरिएका प्रस्तावहरू :

**१. सार्वभौमसत्ता र राजकीय सत्ताको प्रयोग**

- जनतामा अन्तरनिहित सार्वभौमसत्ता र राजकीय सत्तालाई सुस्पष्ट, प्रभावकारी तथा सुदृढ तुल्याइनेछ ।

२. राज्य सञ्चालनको विषय

- राजसंस्था र राजदरवारको विषय
  - राजसंस्थालाई पारदर्शी र प्रजातान्त्रीकरण गरिनेछ।
- वर्तमान प्रशासनिक ढाँचाको पुन:संरचना
  - संसद : राष्ट्रियसभाको पुन:संरचना गर्दै यसलाई जनजाति, दलित, महिला तथा राष्ट्रिय जीवनका ख्याति-प्राप्त व्यक्तिहरू समेत समाविष्ट सदन बनाइनेछ ।
  - स्थानीय निकाय
    - वर्तमान स्थानीय निकायको प्रशासनिक ढाँचाको पुन:संरचना गर्दै स्थानीय निकायलाई विकेन्द्रीकरणको भावना अनुरूप स्वायत्त अधिकार प्रदान गरिनेछ ।
    - यसलाई साधनस्रोत एवं अधिकार सम्पन्न बनाउँदै स्थानीय सरकारको रूपमा स्थापित गरिनेछ ।
    - मुलुकको विद्यमान राजनीतिक-प्रशासनिक ढाँचालाई सामाजिक र साँस्कृतिक विविधता र भौगोलिक यथार्थ एवं आर्थिक अवस्थालाई ध्यानमा राखी पुन:संरचना गरिनेछ ।
- निर्वाचन प्रणाली
  - निर्वाचन प्रणालीमा रहेका वर्तमान त्रुटिलाई सच्याउँदै उपयुक्त प्रणालीको अवलम्बन गरिने छ । निष्पक्ष र धाँधलीरहित निर्वाचनलाई सुनिश्चित गर्न विगतमा निर्वाचनको सुधार सम्बन्धमा गठित उच्चस्तरीय समितिको प्रतिवेदनलाई लागू गरिने छ ।
- स्वच्छ प्रशासन र सुशासन
  - स्वच्छ र सक्षम प्रशासन संयन्त्रको निर्माण गरिनेछ । प्रशासन संयन्त्रलाई राजनीतिक हस्तक्षेपबाट मुक्त राखी प्रजातान्त्रीकरण र व्यावसायीकरण गरिनेछ।
  - भ्रष्टाचारको प्रभावकारी नियन्त्रणका लागि संवैधानिक र कानूनी संयन्त्रलाई सशक्त र क्रियाशील बनाइनेछ ।
- प्रजातान्त्रिक न्याय प्रणाली
  - सहज, सरल र सुलभ न्यायको व्यवस्था गरिनेछ । विवाद समाधानका वैकल्पिक परिपाटीको पनि अवलम्बन गरिनेछ ।
  - देशमा विद्यमान दण्डहीनताको स्थिति समाप्त गरी विधिको शासनलाई प्रभावकारी रूपमा लागू गरिनेछ ।
- सेना परिचालनको विषय
  - सेनालाई जननिर्वाचित सरकार अन्तरगत राखिने छ । यो देश र जनताप्रति बफादार हुनेछ ।
  - राजनीतिक हस्तक्षेपबाट मुक्त राखी यसको प्रजातान्त्रिक मान्यता अनुरूप व्यवसायीकरण गरिनेछ।
- राजनीतक पार्टी : राजनीतिक पार्टीको संचालन र हिसाब-किताब पारदर्शी हुने व्यवस्था गरिनेछ ।

**३. लैंगिक समानता र महिला सहभागिता**

- महिलालाई सम्पत्तिमा समान अधिकार प्रदान गरिनेछ ।
- महिला विरुद्ध सबै विभेदहरूलाई समाप्त गर्दै उनीहरूमाथिको घरेलु-हिंसा, बेचबिखन जस्ता अपराधमा कडा कार्वाहीको व्यवस्था गरिनेछ
- स्थानीय निकायमा पनि महिलाहरूको प्रतिनिधित्वलाई क्रमश: बढाउँदै ३३ प्रतिशत पुऱ्याइने छ ।

सहभागितामा क्रमशः वृद्धि गर्दै ३३ प्रत्येक राजनीतिक पार्टीले उम्मेदवार उठाउने व्यवस्था गरिनेछ ।

४. **जाति, भाषा, धर्म, संस्कृति**

- छुवाछुतलाई अक्षम्य र कडा दण्डनीय अपराधको रूपमा लिदै राजनीतिक, प्रशासनिक र जनप्रतिनिधिमूलक तहमा रहेका व्यक्तिले यस्तो कार्य गरेको पाइएमा तिनलाई तत्काल पदबाट बर्खास्त गरिनेछ ।
- सबै जनजातिका भाषा, धर्म र संस्कृतिको संरक्षण-सम्बर्धन तथा विकासको निम्ति विशेष नीति अवलम्बन गरिनेछ ।
- सबै जातिका नेपालीलाई विना भेदभाव समान अवसर र सबै क्षेत्रमा समान पहुँचको नीति लिइनेछ ।
- तराईवासीहरूप्रति रहेका सबै विभेदहरूलाई समाप्त गरिने छ ।
- धर्म, भाषा र संस्कृतिको क्षेत्रमा रहेका भेदभावहरूलाई हटाइनेछ ।
- पिछडिएका वर्ग, समुदाय र क्षेत्रको विकासको लागि विशेष कार्यक्रम तयार गरी लागू गरिनेछ ।
- राष्ट्रिय सहमतिका आधारमा एउटा आधार वर्ष तय गरी देशमा, खासगरी तराई क्षेत्रमा, विद्यमान नागरिकता समस्यालाई समाधान गरिनेछ ।
- नेपालको आफ्नो राष्ट्रिय विशिष्टता, मौलिक संस्कृति, सभ्यता, राष्ट्रिय परिचय र असल परम्पराहरूको संरक्षण गर्दै राज्यलाई धर्म निरपेक्ष घोषित गरिनेछ ।

५. **लोक कल्याणकारी राज्यको स्थापना**

- गरिबीको रेखामुनि रहेका जनताको उत्थानको लागि योजनाबद्ध विशेष कार्यक्रम संचालन गरिनेछ ।
- दलित, पिछडिएका, टुहुरा, अपाङ्ग, जनजाति, विपन्न परिवारका महिलाको निम्ति शिक्षा, सीप र रोजगारीको विशेष व्यवस्था गरिनेछ ।
- समाजका पिछडिएका, उपेक्षित एवं गरिबीको मारमा परेका जनताका लागि सामाजिक सुरक्षाको विशेष कार्यक्रम लागू गरिनेछ ।
- व्यावसायिक, प्राविधिक र अनौपचारिक शिक्षामा विशेष जोड दिई शिक्षालाई राष्ट्रिय हित र आवश्यकता तथा सामान्य जनताको पहुँच भित्र रहने व्यवस्था गरिनेछ ।
- निरक्षरता उन्मूलनको निम्ति विशेष राष्ट्रिय अभियान संचालन गरिनेछ ।
- आम जनताका लागि स्वास्थ्य सेवालाई सहज र सुलभ बनाइनेछ र यसका लागि सामुदायिक स्वास्थ्य नीति अवलम्बन गरिनेछ ।
- सबै प्रकारका सामन्ती शोषण उन्मूलन गरिनेछ ।

६. **पिछडिएका क्षेत्रको विकास**

- समानुपातिक विकासको अवधारणालाई आत्मसात् गर्दै दुर्गम क्षेत्रको विकासका लागि विशेष कार्यक्रमको तर्जुमा गरी कार्यान्वयन गरिनेछ ।
- तराई क्षेत्रको द्रुततर विकासका लागि पूर्व-पश्चिम रेलवे मार्ग र हुलाकी मार्गको निर्माणमा उच्चतम महत्त्व दिइनेछ ।

७. **औद्योगीकरण र आर्थिक कार्यक्रम**

- बेरोजगारी समस्याको समाधानका लागि विशेष कार्यक्रमको तर्जुमा गरी लागू गरिनेछ ।
- वैदेशिक रोजगारीलाई नियमित र व्यवस्थित बनाइनेछ ।
- क्रान्तिकारी भूमिसुधारको कार्यक्रम लागू गरी भूमिहीन, कमैया र सुकुम्वासीहरूलाई जग्गा उपलब्ध गराइनेछ ।
- कृषि क्षेत्रको विकासलाई उच्चतम प्राथमिकता दिदै अल्पकालीन, मध्यकालीन र दीर्घकालीन विकासको कार्यक्रम अवलम्बन गरिनेछ ।
- राष्ट्रिय औद्योगीकरणको कार्यक्रम लागू गरिनेछ ।
  - राष्ट्रिय हितमा विदेशी लगानीलाई आकर्षित गर्ने र मुलुकको हित अनुरूपको आर्थिक नीति अवलम्बन गरिनेछ ।
  - निजी र सहकारी क्षेत्रको विकासमा विशेष जोड दिइनेछ ।
- देशको आर्थिक विकासको लागि कृषि, जलविद्युत, पर्यटन, मानव संसाधन र भौतिक पूर्वाधारको विकासमा उच्चतम प्राथमिकता दिइनेछ ।

८. **परराष्ट्र नीति**

- असंलग्नता र पञ्चशीलमा आधारित सन्तुलित र राष्ट्रिय हित अनुरूपको विदेश नीति अवलम्बन गरिनेछ ।
- भारतसँग गरिएको सन् १९५० को सन्धि लगायत सबै असमान सन्धि-सम्झौताहरूको पुनरावलोकन, संशोधन वा खारेजी गरी समानता र पारस्परिक हितको आधारमा सन्धि-सम्झौता गरिनेछ ।

९. **विविध**

- माओवादी समस्यालाई समाधान गर्नका निम्ति मुलुकमा जारी द्वन्द्वलाई राष्ट्रिय सहमति अनुरूप अग्रगामी परिवर्तनको कार्यक्रमको आधारमा समाधान र रूपान्तरण गर्दै दिगो शान्ति कायम गरिनेछ ।
- हत्या, हिंसा र अराजकताको परिणामस्वरूप विस्थापित भएका जनताका लागि पुनःस्थापना तथा ध्वस्त भएका, भौतिक संरचनाहरूको पुनर्निर्माणको विशेष कार्यक्रम लागू गरिनेछ ।
- आवश्यकता अनुसार राष्ट्रिय महत्त्वको विषयमा जनमत संग्रह गर्नसकिने व्यवस्था गरिनेछ ।
- राष्ट्र र देशभक्तिको भावनालाई समेट्ने राष्ट्रिय-गानको व्यवस्था गरिनेछ ।

# नेपाल ट्रेड यूनियन महासंघ र नेपाल ट्रेड यूनियन कांग्रेसको

# मे दिवस घोषणा-२००३




१. धरतीले फेरि आफ्नो परिक्रमा मार्गको एक फेरा पूरा गरेको छ । हामी ११४ औं मे दिवसको वर्तमान क्षणसम्म आइपुगेका छौं । विश्वभरीकै श्रमजीवी वर्गको "एक होऊ" भन्ने आदेशलाई नेपाली वास्तविकतामा रूपान्तरित गर्ने क्रममा नेपाल ट्रेड यूनियन महासंघ र नेपाल ट्रेड यूनियन कांग्रेस संयुक्त रूपमा आजको यो ऐतिहासिक क्षणमा आइपुगेको छ । हामी यस अवसरमा दुई महासंघको तर्फबाट संयुक्त अभिवादन तथा शुभकामना व्यक्त गर्दछौं । यस अवसरमा विगत सात वर्षदेखि राज्य वा गैर राज्य पक्षको हिंसात्मक आतङ्कको शिकार भई आफ्नो अमूल्य जीवन गुमाएका सबै नेपाली श्रमिकप्रति हार्दिक श्रद्धाञ्जलि व्यक्त गर्दछौं ।

२. एक्काइसौं शताब्दीको पहिलो दशकको यो प्रारम्भिक वर्ष पनि पीडा र संघर्ष बीच नै गुज्रेको छ । आजभन्दा ११७ वर्ष अघि शिकागोका श्रमिकहरूले शुरू गरेको संघर्षको बलिदानपूर्ण र निरन्तर यात्रा आज पनि बढ्दो उर्जाका साथ जारी छ, अनुहारहरू फेरिएका छन्, पुस्ता फेरिएको छ, चेतनाको स्तर फेरिएको छ । झण्डा आदर्श र दायित्वहरू जाँगरिला काँधबाट जाँगरिला काँधहरूसम्म सर्दै हामी आजका क्षणसम्म आइपुगेका छौं । संसार श्रमिकहरूको पसिना र परिश्रमको निरन्तरताले धेरै फेरिएको छ ।

तर मानिसको युद्ध-उन्माद आज पनि अन्त्य भएको छैन । सम्पन्न राष्ट्रका अहं र हठले प्रजातन्त्र, मानव अधिकार र श्रमिक अधिकार, औपचारिक भाषामा बोलिने तर व्यवहारमा भने निरन्तर उल्लंघन गरिने विषय बन्न पुगेका छन् । यस परिप्रेक्ष्यमा विश्व समाज व्यवस्था भित्रको संयुक्त राष्ट्र संघीय प्रणालीको समेत औचित्यमाथि समेत प्रश्न उठेको छ । यसरी एकातिर विश्वमा आतङ्कवादले श्रमिकहरूको जीवनलाई पीडाको आहालमा निरन्तर चोपल्दै आएको छ भने आतङ्कवाद विरुद्धका नाममा श्रमजीवी जनताका आन्दोलनहरूमाथि र न्यायोचित मागहरूमाथि, आत्मनिर्णयका अधिकार र सम्प्रभुतामाथि ट्याङ्करहरूको दौड र क्षेप्यास्त्रहरूको संहारक बज्रपात पनि भइरहेकै छ ।

३. सम्पन्न राष्ट्रका व्यापारिक स्वार्थका लागि अन्तरराष्ट्रिय मुद्राकोष, विश्व बैंक र विश्वव्यापार संगठनको तीन पांग्रे विश्वव्यापीकरणले अर्को राष्ट्रको सम्प्रभुतामाथि गुड्नु र लगातार गुडिरहन पाउनुलाई आफ्नो हक ठान्न थालेको छ । सामाजिक-आर्थिक दायित्वमा राज्यको भूमिकालाई घटाइएको छ र राज्यलाई बजारको निरिह कारिन्दा बनाउन खोजिएको छ । उदारीकरण र निजीकरणको यस्तो नीतिले नेपाली उद्योग पनपिनुको सट्टा झन् धरासायी हुँदै गएको छ । यसले राष्ट्रलाई प्रत्यक्ष फाइदा पुग्नुको साटो उद्योग र व्यवस्थापनको स्वामित्व झन् विदेशिएको छ । उदारीकरणले विदेशी उत्पादनको आयात र विदेशी श्रमको ओइरोले नेपाली श्रमलाई प्रत्यक्ष नकारात्मक असर परेको छ ।



४. यो वर्ष विगत १३ वर्षहरूमध्ये हाम्रो देश र नेपाली श्रमजीवी वर्गका लागि यस अर्थमा पनि विशेष रह्यो कि प्रजातन्त्रमाथि एक पछि अर्को निरन्तर सांघातिक चोटहरू हामीले भोगिरहनु पर्‍यो । वर्षको शुरूमै तत्कालीन प्रधानमन्त्रीले आफ्नै पार्टीको आदेश विपरित प्रतिगमनकारीहरूको उक्साहटमा विना कारण संसद विघटनको अपराधपूर्ण सिफारिस दरवारमा चढाए । अनिर्वाचित संस्थाहरूको असंवैधानिक हमलाबाट पीडित हुँदै आएको हाम्रो देशको राजनीतिक जीवनमा तत्कालीन प्रधानमन्त्रीको यो मूर्ख्याइँले जनताको सर्वोच्च निर्वाचित संस्थालाई गर्लामगुर्लुम ढालिदियो । प्रतिगमनकारी कदमलाई बल पुऱ्याउने यस्तो कदम यहीं रोकिएन । तत्कालीन प्रधानमन्त्रीको दृष्टिविहीनता र प्रतिगामी षड्यन्त्रको सफलताको परिणाम जननिर्वाचित दुवै संस्थाहरू - प्रतिनिधिसभा र स्थानीय निकाय धरासायी भए ।

भूमिगत नेकपा माओवादीका गतिविधिहरू पनि यो परिणामका लागि कारक तत्वको रूपमा इतिहासमा अङ्कित भएका छन् । तरल र नाटकीय राजनीतिक घटनाक्रममा चुनाव गराउन नसक्ने स्थिति भए पछि चुनाव सार्न गरिएको सिफारिस माथि उभिएर संवैधानिक राजाले असंवैधानिक कदम उठाई तत्कालीन सरकारको खारेजीपछि अन्यौल र अनिश्चितता नै देशको वास्तविकता बन्यो ।

५. संकटकालको अवधि समाप्त भइसकेको भए पनि जनअधिकारको पक्ष झन् झन् कुण्ठित हुँदै गयो । निर्दोष जनता र श्रमिकहरू राज्य पक्षका बन्दुक र माओवादी पक्षका बन्दुकका बीचमा निरन्तर अकालमृत्युको शिकार भइरहे । श्रमजीवी जनता आफ्ना गाउँ-घरबाट विस्थापित हुने र सीमापारी भारततर्फ पलायन हुने क्रम झन् तीव्र भयो । देशभित्र उद्योग-व्यापार खिइँदै जाने र बन्द हुँदै जाने क्रम जारी रह्यो । पर्यटन उद्योगमा चरम सङ्कट आएकोले आर्थिक गतिविधि चरम सुस्तीमा गयो । फलतः ०.८ प्रतिशतको आर्थिक वृद्धि देखिनुले नेपालको आर्थिक जीवन कति तल भासिइसक्यो भन्ने कुरा प्रमाणित गरेको छ । तर राजाद्वारा मनोनित व्यक्तिहरूको सरकार देशका कुनै पनि समस्या समाधानमा गम्भीर देखिएन ।

६. श्रम क्षेत्रमा परेको दुस्प्रभावको पीडा यहीं थामिएन । "सार्वजनिक संस्थान निरिक्षण तथा अनुगमन टोली" नामको पञ्चायतकालीन दौडाहा टोलीको गठन गरी सार्वजनिक प्रतिष्ठान र सरकारी निकायका कामदार कर्मचारीलाई सताउने र उनीहरूले उपभोग गर्दै आएको ट्रेड यूनियन अधिकारमाथि ठाडो आक्रमण गर्ने क्रममा यस वर्ष तीव्रता आयो । विद्यमान निजामती ऐनलाई अध्यादेश मार्फत खत्तम पारी उही निरंकुशकालीन "पर्चा खडा गरेर जागीर खाइदिने" तानाशाही कानुनी तानाबाना बुनिंदै गरिरहेको चर्चा आजभोलि अखवारका हेडलाइन बनिरहेको तपाईं हामीहरूले पढिरहेकै छौं ।

७. हामीलाई यसो भन्नुपर्दा नमिठो लागिरहेछ, एक सामाजिक सहयात्रीको रूपमा हाम्रो निजी क्षेत्रको रोजगारदाताहरूको संस्थागत भूमिका पनि यो वर्ष त्यति उत्साहजनक देखिएन । हामीलाई राम्रो हेक्का छ, गत वर्षको वाणिज्य दिवसको उपलक्ष्यमा तत्कालीन नेउवामहासंघका अध्यक्षले जोड दिनुभएको थियो-"...विकासको लागि निजी क्षेत्रको संयुक्त प्रयासमा एउटा वृहत खाका (ब्लुप्रिण्ट) तयार गर्ने कार्य तत्काल शुरू गर्न आजको यस अवसरमा म जोड दिन्छु ।" तर यस वर्षको वाणिज्य दिवसको

## श्री गिरिजाप्रसाद कोइराला, सभापति, नेपाली काँग्रेस



आज मे डे हो । विश्वभरीका मजदुर-श्रमिकहरूले मे डे मनाउने दिन आज मजदुरहरूको शक्ति प्रदर्शनको दिन हो र एकता प्रदर्शन गर्ने दिन पनि हो । तिनीहरूसँग आएर केही कुरा राख्न पाउँदा मलाई खुसी पनि लागेको छ । किनकि मेरो राजनीतिक जीवन पनि मजदुरबाट नै शुरू भएको हो । जब जब म मजदुर श्रमिकको बीचमा आउँछु, म भावुक हुन्छु र मलाई लागेको कुरा स्पष्ट भन्छु । कतिलाई मन पर्ला र कतिलाई मन नपर्न पनि सक्छ ।

विश्वमा नै राजनीतिक शक्तिको स्रोत मजदुर रहेका छन् र नेपालको राजनीतिको स्रोत पनि मजदुर नै हुन् । नेपालमा राजनीतिक आन्दोलनको शुरूवात पनि मजदुरबाट नै भएको हो । त्यसैले मजदुरहरूसँग मेरो आत्मीयता रहेको छ ।

आज नेपाल गम्भीर अवस्थामा रहेको छ र आज नेपाल निर्णायक मोडमा पनि छ । सम्पूर्ण राष्ट्र नै निर्णायक मोडमा उभिएको छ । निर्णायक मोड त्यसलाई भनिन्छ जब सम्पूर्ण राष्ट्र नै आन्दोलित हुन्छ । जब जनता आन्दोलित हुन्छन्, उनीहरूले बाटो खोज्न थाल्दछन् । असोज १८ मा सम्पूर्ण अधिकार राजाले लिएपछि जनता आन्दोलित भएका हुन् । अहिले आन्दोलन विभिन्न पार्टीको संलग्नतामा हुन लागेको छ । आन्दोलन निर्णायक अवस्थामा छ । त्यसैले मैले निर्णायक भनेको हुँ ।

यो आन्दोलन र ०४६ सालको आन्दोलनमा फरक छ । ०४६ सालको आन्दोलनको प्रोग्राम थियो, पञ्चायती व्यवस्था समाप्त पार्ने । अहिले यो आन्दोलनको स्वरूप र चरित्र महाराजाधिराजका प्रतिगामी कदमको खिलाफको आन्दोलन हो । ...अर्को कुरा यो आन्दोलनको स्वरूप र चरित्र कस्तो हुन्छ भने सम्पूर्ण नेशन (राष्ट्र) नै आन्दोलित भएर अगाडि बढेको हुन्छ । मजदुर, किसान, युवा, विद्यार्थी, कर्मचारी सम्पूर्णले यसमा सहयोग दिन्छन् र यसमा सहयोग राजाले पनि दिन्छन् । जब हिन्दुस्तानमा "क्वीट इण्डिया" (हिन्दुस्तानबाट अंग्रेज भाग) भन्ने नारा लाग्यो, पार्टी (इण्डियन नेशनल कंग्रेस) मा मिटिङ भएको थियो र महात्मा गान्धी पनि थिए । महात्मा गान्धीले नै इण्डिया क्वीटको रिजोलुसन (प्रस्ताव) ल्याएका हुन् । आफ्नो प्रस्ताव भन्दाभन्दै उनले भनेका थिए, यो जुन आन्दोलन हुँदैछ यो निर्णायक आन्दोलन हुनेछ । यसमा सबैले साथ दिनेछन् र यसमा ब्रिटेनले पनि साथ दिनेछ । यो सुनेर जवाहरलाल नेहरूले भनेका थिए, जसका विरुद्ध हामी लडिरहेका छौं, ब्रिटेनले कसरी साथ दिन्छ ? गान्धीजीले भने- गोडाले साथ दिन्छ । यसको

दिन सम्म आइपुग्दा रोजगारदाताको संस्थाको त्यो घोषणाले कति प्रगति गऱ्यो भन्ने जानकारी त दिइएन दिइएन, अब के गर्ने भन्ने कुराको संकेत सम्म पनि पाइएन। राजादेखि रंकसम्मले पत्याएको भनिएको एउटा संस्थाको अवस्था यस्तो पनि हुन सक्छ, जुन संस्थाका प्रतिनिधिहरूबाट बोलिएका कुराको कुनै निरन्तरता हुँदैन? के रोजगारदाताहरूको संस्थाको काम भनेको सत्ता राजनीतिमा फेरिएका अनुहारहरूको अभिनन्दन र स्वागत सत्कार गर्नु मात्रै हो? आफ्नो लगानीको एक एक पाइको नाफा नोक्सानमा हिसाव गरेर अघि बढ्नुपर्ने हाम्रो देशको व्यवसायीहरूको संस्थामा खातिरदारी संस्कृतिलाई यत्ति डरलाग्दो स्थान किन? हामी हाम्रो देशको सम्मानित उद्यमीहरूको संस्थालाई यस्तो रूपमा होइन, व्यवसायिक विशेषज्ञता भएको मजवुत, निष्पक्ष र तार्किक प्रतिबद्धता बोकेको सामाजिक सहयात्रीको रूपमा हेर्न चाहन्छौं।

८. तर यी जटिलता बीच केही राम्रा थालनी भने अवश्य भएका छन्। हामी गर्व गर्छौं- यदि यूनियन आन्दोलन सकारात्मक नभएको भए संवादविहिन स्थितिमा घोषणा गर्न सुरसार कसिएको श्रम कानुनको कथित संशोधनले कसैले नसोचेको अशान्ति श्रम बजारले भोग्नै पर्थ्यो।

९. एउटा सामाजिक सहयात्रीको रूपमा विगतमा बोलेका कुराहरूप्रति हामी प्रतिबद्ध छौं, सामाजिक संवादको बाटोबाट राष्ट्र निर्माणको राजमार्ग खन्ने हो भने हामी सबैले आत्मसमीक्षा गर्ने वेला आइसकेको छ। व्यवसायमा रहेको सामन्तवादी संस्कार र श्रमिक वर्गमा रहेको पछौटेपनलाई सामूहिक रूपमा पखाल्न अवेर भइसकेको छ। त्यसैले श्रम कानूनलाई गलत तरीकाबाट हुन



लागेको संशोधनबाट हुने दुर्घटनाबाट जोगाउँदै सहमतिको आधारमा हुने सामयिक परिमार्जनको पक्षमा हामीले आफूलाई उभ्याएका हौं। द्विपक्षीय सहमतिबाट श्रम कानुनको सामयिक परिमार्जन गर्ने र त्यसको शत प्रतिशत कार्यान्वयनको सुनिश्चितता गर्न नै अहिले ७ विषयमा केन्द्रित छलफल शुरू गरिएको हो। श्रम लचकता, ट्रेड यूनियन अधिकार तथा सामूहिक सौदावाजी र निकास नीति तर्फमात्र एकोहोरिएको उद्यमीहरूको ध्यानलाई हाम्रो तर्फबाट उठाइएको श्रमिकको सामाजिक सुरक्षा, अनौपचारिक क्षेत्रको श्रम तथा कार्यथलोको जेण्डर विषयले निश्चय नै हाम्रो श्रम बजारको बहुआयामप्रति समग्रतामा सोच्न मद्दत नै पुऱ्याएको हुनुपर्छ भन्ने हाम्रो बुझाई छ।

यहाँ एउटा पक्ष चर्चा गर्नु सान्दर्भिक नै हुन्छ, के श्रम ऐन श्रमिकमुखी हुनुपर्छ? या यसो भनौं श्रम ऐन श्रमिकमुखी हुन्छ? हामीलाई लाग्छ, निःसन्देह श्रम ऐन श्रमिकमुखी हुन्छ, हुनैपर्छ ! त्यस्तो श्रम ऐनले रोजगारदाताहरूको हितमाथि कुठाराघात गर्दैन, गर्नु हुँदैन। हाम्रो दृष्टिकोण र अभ्यासमा पनि श्रम ऐन २०४८ ले रोजगारदाताहरूको हितमाथि कुठाराघात गरिरहेको

मतलब भागेर साथ दिन्छ। अहिलेको आन्दोलनमा पनि सम्पूर्णले साथ दिन्छन्। यहाँसम्म कि महाराजाधिराजले पनि साथ दिइबक्सिन्छ। गोडाले साथ दिइबक्सन्छ। यो प्रजातान्त्रिक शक्तिसँग लागेर अग्रगामी सुधारका काम गर्ने हो। त्यसैले यो आन्दोलनको स्वरूप भिन्न छ भनेर भनेको हुँ।

दुई करोड ३२ लाख जनसंख्यामा ९० लाख युवा छन्। यसले, राष्ट्रलाई नयाँ दृष्टिकोण, नयाँ विचारतिर ल्याउँछ। त्यो शक्ति छ यसमा, मजदुरहरूको पनि त्यही शक्ति हो। यही शक्तिको सदुपयोग गरेर हामीले राष्ट्रलाई अगाडि लिएर जानु पर्दछ। शक्तिलाई खेर फाल्नु हुँदैन। शक्तिलाई कुनै कन्स्ट्रक्टीभ वर्क्समा (रचनात्मक काममा) खर्च गऱ्यौं भने त्यसले राज्यलाई प्रगतिको दिशातिर लग्दछ। यो आन्दोलन त्यता मात्रै (प्रतिगामीतिर मात्र) लक्षित छैन, शान्ति वार्ता प्रति पनि लक्षित छ। यो आन्दोलनलाई शान्तिवार्ता भाँड्नको निम्ति, विथोल्नको निम्ति भनेर सरकारी पक्षले भन्ने गर्छ। यो त कायरताको भाषा हो, जसले बोलेको भए तापनि आफूले बाँच्नको लागि त्यस किसिमको भाषा बोलेको हो। यो आन्दोलन दिगो शान्ति होस्, परिणाममुखी वार्ता होस् भनेर पनि लक्षित छ। दुवै पक्षले भाग्न पाउँदैनन्-राजा पनि माओवादी पनि। (उनीहरूले) बसेर निर्कोल गर्नै पर्छ र समस्या समाधान गर्नै पर्छ। त्यसैले यो आन्दोलनको लक्ष्य एउटा प्रतिगामी शक्तिको खिलाफको आन्दोलन र अर्को शान्तिवार्ता सफल बनाउने आन्दोलन हो। त्यसैले जो वार्ताबाट भाग्न खोज्दछ, यो आन्दोलन त्यता पनि लक्षित हुनेछ। त्यसैले वार्ताकारहरूले ध्यान दिउन्, वार्तालाई सफल बनाउने दिशातर्फ गम्भीर भएर जानु पर्दछ।

मैले मनमा लागेका कुरा स्पष्ट भनिदिएँ। कहिलेकाहीं साथीहरू मलाई भन्नुहुन्छ र रिसाउनु पनि हुन्छ, के के भनिदिनुहुन्छ हामीलाई अप्ठ्यारो पर्दछ। तर चार जेनेरेसनलाई हेरेको मान्छे म, ६० वर्षदेखि प्रजातन्त्रको लागि लडेको मान्छे- अब मलाई के लिनु छ र दिनु छ ! त्यो चार जेनेरेसन भनेको महाराजा त्रिभुवन, महेन्द्र, वीरेन्द्र र हालका महाराजा ! सबैको उतार-चढाव सबै देखियो, घटना-दुर्घटना पनि देखियो। अब यो व्यक्तिले यसो भन्यो, उसो भन्यो भनेर मैले नभने कसले भन्ने ? सबैको उतार चढाव देखें, हालका महाराजाधिराजको चढाव देखें तर उतार देख्न पाएको छैन।

त्यसैले यो आन्दोलन हुँदैछ। यो नेपाली कांग्रेस, एमाले वा अन्य पार्टीको आन्दोलन होइन। यो आन्दोलन हाम्रो आफ्नो पार्टीको निम्ति गरेका छैनौं। यो त टोटल (सम्पूर्ण) जनताको निम्ति गरेका छौं। मजदुरहरूको, किसानको, विद्यार्थीको- कसैको पनि भविष्य वर्वाद नहोस्, प्रजातन्त्र भयो भने सबैको भविष्य रहन्छ र प्रजातन्त्र भएन भने कसैको पनि भविष्य सुरक्षित रहँदैन। त्यही सुरक्षित होस् भनेर यो आन्दोलन हुन लागेको हो।

म अहिले बोल्दा नेपाली कांग्रेसको सभापति बोलेको भनेर बिर्सन्छु किनभने यो आन्दोलन नेपाली कांग्रेसको निम्ति गरेको होइन। ... अब मलाई केही गर्नु छैन एउटै काम गर्नु छ, जनताको अधिकार जनतामा नै दिएर जानेछु। ... तबसम्म म लडिरहनेछु। जबसम्म जनताको अधिकार जनतालाई सुम्पन सक्ने छैन। यति भन्दै तपाईंहरूसँग बिदा लिन्छु।

छैन । तर त्यसको कार्यान्वयन पक्षलाई उद्यमी व्यवसायी समूहले लत्याउँदै आएको छ र सरकार भने तमासे बन्दै आएको छ । यो हाम्रो आरोप मात्रै होइन, अन्वेषणको निचोड पनि हो ।

१०. बितेको वर्षमा हामीले गर्ने भनेको कामका फेहरिस्त हिजो मात्रै हाम्रा दुई महासंघका अध्यक्षज्यूहरूको उपस्थितिमा आयोजित पत्रकार सम्मेलन मार्फत हामीले सार्वजनिक गरिसकेका छौं । हामीले श्रम ऐनको पूर्ण कार्यान्वयन, आधिकारिक यूनियनको निर्वाचन र प्रभावकारिता, सदस्यता स्थितिको वास्तविक प्रमाणिक आंकलन र प्रक्रिया निर्धारण, चेक-अफ प्रणालीको कार्यान्वयन, आबद्ध संघहरूमा कार्यगत एकता, उग्रवादी आतङ्ककारी समस्या र मजदुरमाथि परेको प्रभाव र ओएसएच समिति निर्माण र कार्यान्वयन जस्ता सात विषयलाई गत वर्षको अभियानमा समावेश गरेका थियौं । यहाँ उल्लेख गरौं, हाम्रा दुवै महासंघहरूको संयुक्त प्रयत्न र तीव्र प्रतिवादपछि सार्वजनिक संस्थाहरूमा साँढेको रूपमा पसेको सरकारी दौडाहा टोली केही हच्केको छ र अहिले कुना पसे जस्तो छ । श्रमिकका अधिकारमाथि कर्के नजर लगाउने हरेक दुस्प्रयत्न प्रति हाम्रो साझा अभियान निरन्तर जारी रहनेछ ।

११. नाटकीय ढङ्गले माघको तेस्रो सातामा नेकपा (माओवादी) सँग युद्ध विरामको घोषणा गरिएको छ । निष्कर्षमा पुग्ने प्रकृतिको हालसम्म वार्ता हुन सकेको छैन तर वार्ताको टेवलबाट सुटुक्क भाग्न र सामन्ती रवाफ देखाउँदै अर्को युद्ध ननिम्ताउन वार्ता गर्न तम्सिएका दुवै पक्षलाई हामी खवरदारी गर्न चाहन्छौं । वार्ताले अग्रगामी निकास देओस्, २०४६ सालको आन्दोलन मार्फत जनताले आफ्नो रगतसँग साटेर लिएको उपलब्धिलाई घाइते बनाउने होइन, त्यसलाई अझै सुदृढ गर्नुपर्छ । नेपाली श्रमजीवी वर्ग शान्ति र प्रजातन्त्रको पक्षमा छ, यसमाथि खेलवाड नगर्न सम्बद्ध सबैलाई हामी आग्रह गर्दछौं ।

१२. आगामी दिनमा हाम्रो एजेण्डा भनेको राष्ट्रिय योजना आयोगमा अन्तरराष्ट्रिय श्रम संगठन समेतको संलग्नतामा तयार पारिएको गरिबी न्यूनीकरण रणनीतिपत्रमा हाम्रा दुई महासंघले दिएको सुझावहरू- असल ज्याला प्रणाली स्थापित र विकसित गर्ने, रोजगारी अभिवृद्धिका लागि प्रभावकारी भूमिसुधार, श्रम कानूनको प्रभावकारी कार्यान्वयन, सामाजिक सुरक्षा प्रणालीको स्थापना र विकास, वैदेशिक रोजगारी, तालिम, उत्पादकत्व र आयआर्जन कार्यक्रम र श्रमसँग सरोकार राख्ने संस्थाहरूको प्रजातान्त्रिकरणका लागि विविध उपायहरू अपनाउने आदि नै हुन् ।

१३. यस सन्दर्भमा, गत वर्ष बनाइएको न्यूनतम वेतन निर्धारण समतिको पछिल्लो दिनहरूमा बैठकसम्म बोलाउन नसकेर सरकार किंकर्तव्यविमूढ देखिन्छ । सरकारीपक्षले निर्णयहीनतामा झण्डै एक वर्ष गुजारिसकेको छ । उल्टै अहिले थोपारिएको यो महँगीले श्रमजीवी जनताको छाकसम्म टार्न पनि नसक्ने अवस्थालाई झन् अप्ठ्यारो मोडमा पुर्‍याएको छ । त्यसैले आगामी दिनहरूमा हाम्रो प्रयत्न न्यूनतम ज्यालाको तत्काल पुनरावलोकनका साथै सामाजिक सुरक्षा प्रणालीलाई व्यवस्थित गर्न केन्द्रित हुनेछ, सामाजिक संरक्षणको घेरालाई सबै अनौपचारिक क्षेत्रका श्रमिकलाई समेत समेट्ने गरी फराकिलो पार्ने काममा केन्द्रित हुनेछ । सरकारको गलत र हचुवा प्रवृत्तिले सार्वजनिक संस्थानहरू दिनानुदिन बन्द हुँदै जाने क्रम तीव्र भएको छ । यस सन्दर्भमा त्यस क्षेत्रमा कार्यरत कर्मचारीको सामाजिक सुरक्षा र भविष्यको

# क. माधव कुमार नेपाल, महासचिव, नेकपा (एमाले)



आज नेपाल ट्रेड यूनियन महासंघ र ट्रेड यूनियन कांग्रेसले संयुक्त रूपमा मे दिवस मनाउने निर्णय गरेको छ । ११४ औं मे दिवसको उपलक्ष्यमा समस्त मजदुर साथीहरूको सफलताको शुभकामना व्यक्त गर्न चाहन्छु ।

'विश्वका मजदुरहरू एक हौं' भन्ने नारालाई केन्द्र बनाएर संसारभरीका मजदुरहरूले आज मे दिवस भव्यताका साथ मनाइरहेका छन् । नेपाली मजदुरहरूले पनि हाम्रो देशमा यो दिवसलाई बडो भव्यताका साथ मनाइरहेका छन् । 'संसारभरीका मजदुरहरू एकताबद्ध भए भने सिङ्गो संसार जित्न सक्नेछन् । उनीहरू एकजुट भएनन् भने सधैंभरी पराधीनताको साङलोमा बस्न बाध्य हुनेछन् ।' त्यसै हुनाले भनिएको छ- 'मजदुरहरूले पाउनका लागि सारा संसार छ भने गुमाउनका लागि हातमा बाँधिएका सिक्री बाहेक अरु केही पनि छैन ।'

औद्योगिक मजदुरहरू, श्रमजीवी मजदुरहरू यस संसारका सबैभन्दा अगाडि बढेका एक मात्र उत्पादक शक्तिहरू हुन् । उनीहरूको एकता, संगठन, अनुशासन, कामप्रतिको इमान्दारिता, श्रमप्रतिको समर्पण, जिम्मेवारीप्रतिको निष्ठा, निरन्तर क्रियाशीलताहरू सबैले सिक्न पर्ने कुराहरू हुन् । त्यसैले मजदुरहरू समाजका अगुवा प्रतिनिधिहरू हुन् । हामीलाई खुसी लागेको छ, नेपाली मजदुरहरूको वर्गीय हितका लागि एकताबद्ध भएर नेपाल ट्रेड यूनियन महासंघ र नेपाल ट्रेड यूनियन कांग्रेस अगाडि बढ्न खोजिरहेका छन् ।

पिरोलिएका छन्- वेरोजगारीको समस्या, छटनीका समस्या, रुग्ण उद्योगले सृजना गरेको भविष्यप्रतिको चिन्ता, निजीकरणले सृजना गरेको समस्या ... आदि । संसारभरीका मजदुरहरूले संघर्षबाट प्राप्त गरेको अधिकार- आठ घन्टा काम, आठ घन्टा आराम र आठ घन्टा मनोरञ्जन प्राप्तिको लागि नेपाली मजदुरहरू अझै संघर्षरत छन् । कार्पेट मजदुरहरूको हामी जीवन हेरौं, गार्मेन्ट मजदुरहरूको हामी जीवन हेरौं, ठूलो संख्यामा काम गरिरहेका कृषि श्रमिकहरू र अन्य मजदुरहरूको जीवन हेरौं- उनीहरूले आजभन्दा सय वर्ष अगाडि देखि शुरू भएको आठ घन्टा काम, आठ घन्टा आराम र आठ घन्टा मनोरञ्जनको लक्ष अझै हासिल गरेका छैनन् । उनीहरू अझै पनि कमैयाको रूपमा, बाँधाको रूपमा जीवन बिताउन बाध्य भएका छन् । उनीहरू शीर ठाडो पारेर हिंड्न पाइरहेका छैनन्, स्वाभिमानका साथ जीउन सकिरहेका छैनन् । त्यसो हुनाले तपाईंहरूको एकता एवं संघर्षमा सम्पूर्ण नेपाली जनताले ऐक्यबद्धता जाहेर गर्दछन् ।

नेपाली मजदुरहरूको संगठित हुने ट्रेड यूनियन अधिकार माथि पनि वर्तमान सरकारले एउटा तरवार तेर्साउन थालेको देखिन्छ । निर्वाचित

संरक्षण तथा संस्थानको सुधारका लागि सार्वजनिक संस्थान सुधार आयोगको प्रतिवेदन लागू गराउन जोड दिनु हाम्रो एउटा प्राथमिकता हुनेछ ।

१४. औपचारिक क्षेत्र वा अनौपचारिक कार्यथलोमा हुने सबैखाले अनुचित र शोषणमूलक श्रम अभ्यास विरुद्ध हाम्रो साझा लडाइ अझ सशक्त हुँदै गएको छ । महिला श्रमिकको शोषण र भेदभावको विषय होस् वा बालश्रमको शोषण, बलपूर्वक लगाइने श्रम होस् वा ऋण आधारित बाँधाश्रम वा जातीय आधारमा हुने दलित श्रमको शोषण विभेदबाट मुक्ति र सम्मानपूर्ण समतामूलक एवं समृद्ध जीवनको लागि हाम्रो संघर्ष निरन्तर जारी रहनेछ ।

१५. श्रमबजारका अस्तव्यस्तताहरू र शोषणमूलक अभ्यासहरू विरुद्धको लडाइसँगै तीव्रगतिले बढेर गएको बेरोजगारी र अर्धबेरोजगारी पनि हाम्रो गम्भीर चासोको विषय हो । वैदेशिक रोजगारीमा युवा नेपाली श्रमिकहरूको बढ्दो दौड वेरोजगारी र अर्धवेरोजगारीको दिगो समाधान हुन सक्दैन । भारतमा काम गर्न जाने तराइका मौसमी कृषि श्रमिकहरू हुन् वा अन्य नगरमा दरवान लगायतका सबैखाले श्रममा जाने हाम्रो पहाडी क्षेत्रका श्रमिक हुन् वा मलेसिया र खाडी देशहरूमा घरजग्गा बन्धकी राखेर जाने नेपाली श्रमिक होउन्, उनीहरूको कूटनीतिक संरक्षणको विषय, उनीहरूका श्रमिक अधिकारको विषयमा हाम्रो अभियान जारी रहनेछ । यसका लागि देशको सरकार र विदेशका संघ संस्थाहरूसँग अन्तरक्रिया र सहकार्य हाम्रो एजेण्डा हुनेछ ।

१६. श्रमिक वर्गले भोगिरहेका यी सबै विषयसँग सम्बन्धित समस्याहरूका समाधानहरू एकीकृत यूनियन आन्दोलनबाटै सम्भव छ । विश्वकै



श्रमिकहरूको ऐक्यबद्धताको महाभियानको एक प्रतीक बनेको मे दिवस मनाइरहँदा, यी क्षणहरू हामी केवल भाव विभोरताका शब्दहरूमा मात्र गुमाउन चाहँदैनौं । बरु आफ्नो देशको श्रमिक आन्दोलनलाई एकताको एउटै छातामा उभ्याउने व्यावहारिक प्रतिबद्धताको नयाँ प्रवेशद्वारमा दृढताका साथ लाखौं जोडी पैतालाहरू सँगसँगै बढ्नेछौं । सन् २००० को मे दिवस देखि हाम्रा दुई महासंघले शुरू गरेको एकल यूनियन अभियानलाई यस वर्षबाट हामी अझै ठोस आधार प्रदान गर्ने तयारीमा छौं ।

हामी चाहन्छौं नेपालका कुनै पनि श्रमिकले आफ्नो आस्था र विश्वासको कारणले संगठन स्वतन्त्रताबाट वञ्चित हुन नपरोस् । बहुदलीय मान्यताको आधारमा नै स्वस्थ एवं स्वच्छ प्रतिस्पर्धामा श्रमिकहरूले आफ्नो स्वतन्त्र संगठन निर्माण गर्न पाऊन् । तर स्वतन्त्रताको यो अधिकार उपभोग गरिरहँदा श्रमिक श्रमिक बीच गुटगत स्वार्थका कारण धजा नफाटोस्, देशको श्रमजीवी वर्ग कित्ता कित्तामा खण्डित नहोस् । राष्ट्रिय नीतिहरूमा श्रमिकमुखी हस्तक्षेपलाई अझ प्रभावकारी बनाउँदै बलियो राष्ट्रिय ट्रेड यूनियन आन्दोलनद्वारा देश तथा श्रमजीवी जनताको सम्मानित

सम्पूर्ण संस्था एकपछि अर्को गरेर उनीहरूले जन-प्रतिनिधि विहीन बनाएका छन् । ... कर्मचारीहरूको संगठित हुन पाउने ट्रेड यूनियन अधिकार खोस्ने जमर्को गरिसकेका छन्, अहिले उनीहरू मजदुरलाई ताकिरहेका छन् । त्यसैले होसियार ! तपाईंहरू जाग्राम बस्नुहोस्, एकताबद्ध भएर बस्नुहोस् ! सिङ्गो नेपालीको एकतामा तपाईंहरूको एकता सन्निहित छ । सिङ्गो नेपालीको भाग्य र भविष्यसँग तपाईंहरूको भविष्य जोडिएको छ ।

उद्योग-धन्धाहरूको बारेमा चर्चा गर्दा हामीले देशको सबै पक्षको हितको कुरालाई ध्यान दिनै पर्छ । हामी जोड दिन चाहन्छौं, निजी क्षेत्रले महत्त्वपूर्ण भूमिका खेलोस्- लगानीको क्षेत्रमा, उद्योगधन्धा फस्टाउने क्षेत्रमा, रोजगारी फस्टाउने क्षेत्रमा, राजस्व सृजना गर्ने क्षेत्रमा र प्रतिफल प्राप्त गर्ने क्षेत्रमा र देशमा आर्थिक क्रियाकलापलाई अभिवृद्धि गर्ने क्षेत्रमा । उद्योगधन्धा फस्टाउने भन्नाले मजदुरहरूको छटनी गरिदिने, हायर एण्ड फायर गरिदिने, मनलाग्यो राख्यो मन लाग्यो निकालिदिने, स्वेच्छाचारी अधिकार होइन । सबैलाई आफ्नो रोजगारीको ग्यारेन्टी चाहिन्छ सबैलाई आफ्नो जीवनवृत्तिको ग्यारेन्टी चाहिन्छ । त्यो ग्यारेन्टी राज्यले दिनु पर्दछ ।

आज प्रजातन्त्र सङ्कटमा छ । प्रजातन्त्र माथि ठूलो कुठाराघात गरिएको छ । अहिले देशका प्रमुख राजनीतिक पार्टीहरूले राजाको प्रतिगमन विरुद्ध प्रजातन्त्रको आन्दोलनको भुमरीमा होमिने सङ्कल्प गरेका छन् । यो आन्दोलन प्रजातन्त्रलाई बलियो बनाउनको लागि, जनताको अधिकारलाई जनताको हातमा फिर्ता ल्याउनको लागि, जनताको सार्वभौमसत्ता जनताको हातमा स्थापित गर्नको लागि हो । हामी कसैका दास होइनौं स्वतन्त्र नागरिक हौं, यो देशको भाग्य र भविष्यको फैसला जनताले नै गर्न पाउनु पर्छ, राजनीतिक बागडोर राजनीतिक दलहरूले सञ्चालन गर्न पाउनु पर्दछ भन्ने मान्यतालाई स्थापित गर्नको लागि हामी आन्दोलनमा उत्रने सङ्कल्प गरिरहेका छौं । हामीले गरिरहेको यो आन्दोलनलाई कसैकसैले सत्ता स्वार्थसँग गाँस्न खोजिरहेका छन् । वास्तवमा, जसमा स्वाभिमान छैन, प्रजातन्त्रप्रतिको चेतना छैन, प्रजातन्त्रप्रतिको निष्ठा छैन त्यस्ताहरूले यो भन्न सक्दछन् । जसमा स्वाभिमान, प्रजातान्त्रिक निष्ठा छ र ०४६ सालको आन्दोलनको भावना विद्यमान छ, उनीहरूले यो आन्दोलनको अपरिहार्यतालाई स्वीकार गर्दछन् । यो आन्दोलनको सफलताको कामना पनि गर्दछन् । हामी मे दिवसको उपलक्ष्यमा यस आन्दोलनमा तपाईंहरूको व्यापक सहभागिताको अपेक्षा गरिरहेका छौं ।

साथीहरू, अहिले मुलुकले सुशासनको खोजी गरिरहेको छ, प्रजातन्त्रको माग गरिरहेको छ । शान्तिको अपेक्षा गरिरहेको छ । हत्या, हिंसाबाट शान्तिपूर्ण रूपमा जीवन यापन गर्ने अवसर जनतालाई चाहिएको छ । त्यसैले हामीले माओवादी र सरकार दुवैको बीचमा भएको युद्ध-विरामलाई सकारात्मक रूपमा लिएका छौं । शान्तिवार्ता अगाडि बढेको छ त्यसलाई सफल भएको देख्न चाहन्छौं । कुनै पनि बहानामा सरकार र माओवादी दुवै शान्ति प्रक्रियाबाट भाग्न पाउँदैनन् । यो हाम्रो अठोट हो, हाम्रो अडान हो । हामी वार्ताको पक्षमा छौं, वार्ता सफल होस्, फलदायी होस् भन्ने पक्षमा छौं ।

अन्त्यमा, आज मे दिवसको उपलक्ष्यमा म नेपाली जनताको प्रजातन्त्रलाई सफल बनाउनको लागि संचालन गरिएको आन्दोलनमा सम्पूर्ण जनसमुदायको सक्रियताको निम्ति मजदुर साथीहरूले अग्रसरता लिनु हुनेछ भन्ने पुनः अपेक्षा गर्दै मे दिवसको उपलक्ष्यमा फेरि पनि शुभकामना दिन चाहन्छु ।

र समृद्ध भविष्य निर्माणको अभियान र दीर्घकालीन लक्ष्य नै हाम्रो एकताको आधार हो । एकताको एउटा यस्तो छाता जसको ओतबाट एउटा पनि नेपाली श्रमिकले बाहिर परेको अनुभूति गर्नु नपरोस् ।

हाम्रो यो मनसायलाई कसरी व्यवहारमा उतार्ने? हामीलाई लागेको छ, देशभरीका मान्यता प्राप्त यूनियनहरू आधिकारिक यूनियनको निर्वाचनमा सामेल होऊन् । विजयी यूनियनले सबै श्रमिकको तर्फबाट प्रतिष्ठानमा सामूहिक सौदावाजी गर्ने विद्यमान प्रणाली सुदृढ होस् । आधिकारिक यूनियनहरूको संख्याको आधार मान्यता प्राप्त विषयगत संघहरूको एउटा र तिनै यूनियनहरूको समानुपातिक प्रतिनिधित्वबाट महासंघ स्तरीय एउटा केन्द्र बनोस् । त्यही केन्द्रले देशभित्र र अन्तरराष्ट्रिय जगतमा सम्बन्धित मञ्चहरूमा सिंगो श्रमिक वर्गको तर्फबाट प्रतिनिधित्व गरोस् । हामी घोषणा गर्न चाहन्छौं, हाल चर्चामा रहेको जिफन्ट/एनटीयूसी बीचको उच्च स्तरीय कार्यदल एकल यूनियन निर्माणको लागि यही गृह कार्यमा जुटिरहेको संयन्त्र हो । श्रम सिनेट वा श्रम सभा वा जिफन्ट/एनटीयूसी काउन्सील जे सुकै नाममा भए पनि उल्लेखित प्रक्रियाको आधारमा हामी एक यूनियन एक आवाजको लागि बलियो आधार तयार गर्न गइरहेका छौं । जुनसुकै परिस्थितिमा फरक फरक छातामा ओत लागिरहेका भए पनि निसंकोच यही अभियानमा संस्थागत ढंगले समाहित हुन हामी सबैमा आव्हान गर्दछौं ।

१७. यही परिवर्तनको भावनाका र विजयको अठोटका साथ हामी हातमा हात मिलाएर आजको दिवसबाट आगामी ३० अप्रिलसम्मको एक वर्षका संघर्षमय-सहकार्यमूलक र ऐक्यबद्धताको गौरवमय यात्राका लागि तम्तयार छौं ।




यस अवसरमा दक्षिण एशियाली, एशियाली र अन्तरराष्ट्रिय सहयोग र ऐक्यबद्धता हाम्रो साथमा छ । हामी विश्वभरीकै सबै ट्रेड यूनियन, श्रम सहयोगी संघ-संस्थाहरू र सबै समर्थक, शुभेच्छुकहरूलाई हार्दिक शुभकामना व्यक्त गर्दछौं ।

अन्त्यमा, मे दिवसको अवसरमा राजनीतिक प्रणालीमा स्थिरता, शान्तिपूर्ण अग्रगमन र सामाजिक आर्थिक विकासको पक्षले नयाँ गति पाओस् भन्ने हामी कामना गर्दछौं । श्रमजीवी वर्गको जीवनमा हरियाली र जनताको सार्वभौमसत्ता सुदृढीकरणको लागि सबै पक्षलाई आ-आफ्ना तर्फबाट प्रतिबद्धताका साथ योगदान गर्न आव्हान गर्दै हार्दिक शुभेच्छा व्यक्त गर्दछौं ।

**श्रमको सम्मान गरौं, श्रम शक्ति नै राष्ट्र शक्ति हो !**
**सम्मानित श्रमजीवी वर्ग र समृद्ध जीवनको लागि समाजवाद !**
**एकीकृत ट्रेड यूनियन आन्दोलन-जिन्दावाद !**
**मे दिवस-जिन्दावाद !**
**विश्वका श्रमिकहरू-एक होऔं !**

## श्री लैला टेग्मो रेड्डी, निर्देशक, आइएलओ, (काठमाडौं)

अन्तरराष्ट्रिय मजदुर दिवसको यो समारोहमा आमन्त्रित हुन पाउँदा म आफू सही अर्थमा सम्मानित भएको छु । यस्तो महत्त्वपूर्ण समारोह संयुक्त रूपमा आयोजना गर्नु भएकोमा म जिफन्ट र एनटीयूसीलाई बधाइ दिन चाहन्छु ।



प्रारम्भमा म विश्वभरीका मजदुरहरूलाई र विशेष गरी यो विशेष दिनमा नेपाली ज्ञात-अज्ञात मजदुर शहीदहरूप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्न चाहन्छु ।

मैले यहाँ आफूसँग आइएलओ प्रधान कार्यालय, क्षेत्रीय कार्यालय बैंकक, उपक्षेत्रीय कार्यालय नयाँ दिल्ली र नेपाल कार्यालयका सहकर्मीहरूको शुभकामना र शुभेच्छाहरू बोकेर आएकी छु ।

वर्तमान अवस्थामा नेपाल एक जटिल परिस्थितिबाट गुज्रँदै छ । मलाई विश्वास छ, ट्रेड यूनियनहरूले दिगो शान्तिको स्थापना गर्न, मर्यादित कामको माध्यमबाट सामाजिक आर्थिक स्थितिको विकास गरी मजदुरहरूको जीवनस्तर उकास्न महत्त्वपूर्ण भूमिका खेल्न सक्दछन् ।

मलाई यहाँ यो उल्लेख गर्न पाउँदा खुसी लागेको छ कि श्रम कानुन र यसको कार्यान्वयन पक्षमा आधारित भएर ट्रेड यूनियन र नेपाल उद्योग बाणिज्य महासंघ बीच रचनात्मक सामाजिक सम्वादको थालनी भइसकेको छ । मलाई यो जान्न पाउँदा धेरै खुसी लागेको छ कि तपाईंहरू सामाजिक विकास र अधिकारको प्रवर्द्धन गर्ने प्रक्रियामा सामाजिक सम्वादको महत्त्वप्रति विश्वस्त हुनुहुन्छ र तपाईंहरू यस्तो सम्वादबाट आपसी समझदारी र सहमतिमा पुग्न सकिन्छ भन्नेमा आशावादी हुनुहुन्छ । तपाईंहरूले थालनी गर्नुभएको यो सम्वादले सबैको लागि उपलब्धिपूर्ण परिणाम ल्याउनेछ भन्ने कुरामा म आशावादी छु र यसले आर्थिक तथा सामाजिक विकासको अवस्थामा सुदृढीकरण गर्न र त्यसै गरी मर्यादित कामको अवस्थामा सुदृढीकरण गर्न नेतृत्वदायी भूमिका खेल्नेछ ।

तपाईंहरूले आफ्नो संयुक्त घोषणापत्रमा गरिबी घटाउने सम्बन्धी रणनीति पत्रमा सरकार समक्ष ट्रेड यूनियनहरूले सिफरिस गरेका विषयहरू आगामी वर्षहरूको लागि कार्यसूची हुनेछ भन्ने

# मे दिवस २००३ देशभरी नै मजदुर र्‍याली, सभा तथा विभिन्न कार्यक्रमकासाथ सम्पन्न

मे दिवस २००३ मजदुर र्‍याली, मजदुर सभा तथा विभिन्न कार्यक्रमका साथ काठमाडौं लगायत देशभरीका प्रमुख शहरहरूमा भव्यताका साथ सम्पन्न भएको छ।

**काठमाडौं** : काठमाडौंमा नेपाल ट्रेड यूनियन महासंघ (जिफन्ट) र नेपाल ट्रेड यूनियन कांग्रेस (एनटीयूसी) को संयुक्त आयोजनामा रक्तदान कार्यक्रम, पत्रकार सम्मेलन, मजदुर र्‍याली, मजदुर सभाका साथै मजदुर आन्दोलनलाई चिनाउने, मजदुरहरूको सीप र व्यथालाई झल्काउने, देश विदेशका आन्दोलनलाई झल्काउने फोटो प्रदर्शनी, भिडियो प्रदर्शनी, स्लाइड प्रदर्शनी, श्रम सम्बन्धी पुस्तकको प्रदर्शनी र सांस्कृतिक कार्यक्रम आदिसम्पन्न भयो।

काठमाडौंमा दिउँसो १२ बजे राजधानीका विभिन्न ठाउँबाट निस्केको मजदुरहरूको जुलुस रत्नपार्कमा जम्मा भएर वृहद मजदुर र्‍याली बागबजार-पुतलीसडक-कमलपोखरी-मैतीदेवी-पुरानो बानेश्वर र नयाँ बानेश्वर भएर वीरेन्द्र अन्तरराष्ट्रिय सम्मेलन केन्द्रमा मे दिवस समारोहमा सामेल भयो। मजदुर सभामा नेपाल ट्रेड यूनियन महासंघका महासचिव विष्णु रिमालले अतिथिलाई स्वागत गर्दै दुई वटा महासंघको संयुक्त 'मे दिवस घोषणा-२००३' प्रस्तुत गर्नुभयो। सभामा नेपाली कांग्रेसका सभापति गिरिजाप्रसाद कोइराला, नेकपा (एमाले) का महासचिव माधवकुमार नेपाल, नेपाल उद्योग बाणिज्य महासंघका कार्यवाहक अध्यक्ष विनोदबहादुर श्रेष्ठ, आइएलओ काठमाडौंका निर्देशक लैला टेग्मो रेड्डीले शुभकामना मन्तव्य दिनुभयो। सभा दुई महासंघका अध्यक्षहरू मुकुन्द न्यौपाने र लक्ष्मण बस्नेतको सहअध्यक्षतामा सम्पन्न भएको थियो। कार्यक्रम सञ्चालन नेपाल ट्रेड यूनियन कांग्रेसका महासचिव अच्युत पाण्डेले गर्नुभएको थियो।

मजदुर सभाको समापन पछि श्रमिक सांस्कृतिक कार्यक्रम आरम्भ भएको थियो।

**झापा** : झापाको विर्तामोडमा मे दिवस नेपाल ट्रेड यूनियन महासंघ र नेपाल ट्रेड यूनियन कांग्रेसको संयुक्त आयोजनामा मजदुर र्‍याली र मजदुर सभाकासाथ सम्पन्न भएको छ। नेपाल ट्रेड यूनियन कांग्रेसको झापा जिल्ला अध्यक्षको सभापतित्वमा सम्पन्न मजदुर सभामा नेकपा



(एमाले) केन्द्रीय वैकल्पिक सदस्य नरेश खरेल, राष्ट्रिय सभा सदस्य देवराज घिमिरे, नेपाली कांग्रेस झापा जिल्ला अध्यक्ष सुधीर सिवाकोटी, चिया यूनियनका मजदुरहरू सन्त राई र अर्जुन तिमिल्सिनाले बोल्नुभएको थियो। कार्यक्रममा जिफन्ट झापा अञ्चल अध्यक्ष राजिव घिमिरेले स्वागत गर्नुभएको थियो।

**बिराटनगर** : जिफन्टको आयोजनामा बिराटनगरमा मजदुर र्‍याली र मजदुर सभाकासाथ मे दिवस कार्यक्रम सम्पन्न भयो। जनपथमा आयोजना भएको मजदुर सभामा जिफन्टको पूर्वाञ्चल क्षेत्रीय संयोजक ओम कोइरालाको प्रमुख आतिथ्य र जिफन्ट अञ्चल अध्यक्ष योगीलाल यादवको अध्यक्षतामा मे दिवस कार्यक्रम सम्पन्न भएको थियो। कार्यक्रममा नेकपा एमालेका पूर्व सांसद गुरु बरालले शुभकामना मन्तव्य दिनुभएको थियो। यसरी नै बिराटनगरको पथरीमा पनि मजदुर र्‍याली र मजदुर सभाकासाथ मे दिवस कार्यक्रम सम्पन्न भएको थियो।

**जनकपुर** : जनकपुरमा मे दिवस जिफन्टको आयोजनामा मजदुर र्‍याली र मजदुर सभाकासाथ सम्पन्न भएको छ। मजदुर नेता खुरे डराईको

---

स्पष्ट रूपमा उल्लेख गर्नु भएको छ।

मलाई यहाँ गरिबी निवारणको लागि मर्यादित कामको रणनीतिपत्र तयारीको लागि एनटीयूसी र जिफन्टले खेलेको सक्रिय भूमिकाको चर्चा गर्न पाउँदा धेरै खुसी लागेको छ। तपाईंहरूले गर्नुभएको सबै सिफारिसलाई ग्रहण गरिएको छ। अब हामी तिनीहरूको कार्यान्वयन गर्ने महत्त्वपूर्ण क्षण तर्फ लम्कँदैछौं। तपाईंहरूलाई यसको लागि आइएलओले भरमग्दुर सहयोग उपलब्ध गराउनेछ।

त्यसैगरी ज्याला निर्धारण सम्बन्धमा यो भन्न पाउँदा खुसी लागेको छ, प्रभावकारी ज्याला प्रणालीको विकास गर्नको लागि आवश्यक परे आइएलओले बरिष्ठ ज्याला विशेषज्ञको सेवा उपलब्ध गराउनेछ। यसै गरी अनौपचारिक क्षेत्रमा सामाजिक सुरक्षा व्यवस्थालाई स्थापना गर्न र मौजुदा कल्याणकारी कोषको प्रभावकारी कार्यान्वयनको लागि आवश्यक उपाय अवलम्बन गर्न सरकार तथा अन्य सामाजिक सहयात्रीहरूलाई सहयोग गर्न आईएलओले विभिन्न कार्यक्रम विकास गरिरहेको छ।

आईएलओले तपाईंहरूसँग विभिन्न क्षेत्रमा सँगसँगै काम गर्दैछ। जस्तो कि सामाजिक सुरक्षा, जेण्डर समानता, वैदेशिक रोजगार, तालिम तथा सीप विकास, श्रम बजार सूचना प्रणालीको विकास, बालश्रम र बाँधा श्रम उन्मूलन र व्यवसायजन्य सुरक्षा तथा स्वास्थ्य इत्यादि। हामीले नेपालमा सञ्चालन गरी आएको कामको क्षेत्र आगामी दिनहरूमा फराकिलो हुँदै जाने कुरामा म विश्वस्त छु। नेपालका यूनियनहरूले अनौपचारिक क्षेत्रका मजदुरहरू बीचमा पनि आफ्नो गतिविधिहरू विस्तार गर्दै लगेकोमा हामीलाई खुसी लागेको छ।

मलाई यो उल्लेख गर्दा खुसी लाग्दछ कि तपाईंहरूको घोषणा पत्रमा स्पष्ट रूपमा उल्लेख गर्नुभएको छ मजदुरहरूले सामना गरिरहेको सबै समस्याहरू एकीकृत मजदुर आन्दोलनले मात्र समाधान गर्न सक्दछ। यो विशेष दिनको अवसरमा म यो शुभेच्छा व्यक्त गर्न चाहन्छु- नेपाली मजदुरहरूको हितका खातिर तपाईंहरूको संयुक्त प्रयासहरू सफल होस्। मुलुकले जटिल चुनौतीहरूको सामना गरिरहेको वर्तमान अवस्थामा आइएलओ त्रिपक्षीय सहयात्रीहरूलाई आफ्नो विषयहरूलाई सामाजिक सम्वाद र सहकार्यबाट गर्न उत्प्रेरित गर्न सकोस्।

यही अवसरमा नेपाललाई बाँकी रहेका आधारभूत अभिसन्धिहरू संगठन स्वतन्त्रता सम्बन्धी अभिसन्धि नं. ८७ र बाध्यकारी श्रम सम्बन्धी अभिसन्धि नं. १०५ अनुमोदन गर्न प्रोत्साहित गर्न चाहन्छु।

नेपालका सम्पूर्ण पुरुष र महिला श्रमिकहरूको लागि मर्यादित काम तथा असल कार्य अवस्था प्रबन्धको लागि तपाईंहरूको अथक परिश्रमलाई म पुनः एकपल्ट बधाइ दिन चाहन्छु।

सम्पूर्ण श्रमिकहरूलाई मे दिवसको शुभकामना, धन्यवाद !

अध्यक्षतामा सम्पन्न सभामा अतिथि वक्ता नेकपा (एमाले) का केन्द्रीय सदस्य रामचन्द्र झाले शुभकामना मन्तव्य दिनुभएको थियो ।

**सर्लाही** : जिफन्टको आयोजनामा हरिवनमा मजदुर र्‍याली र मजदुर सभाकासाथ मे दिवस सम्पन्न भयो । इन्दु शंकर चिनी उद्योगको प्रांगणमा सम्पन्न सो सभामा जिफन्ट राष्ट्रिय परिषद् सदस्य रमेश मैनालीको प्रमुख आतिथ्य र इन्दु शंकर चिनी उद्योगको यूनियन अध्यक्ष ऋद्धिलाल शर्माको अध्यक्षतामा भएको थियो । कार्यक्रममा चिनी उद्योगका महाप्रबन्धक कृष्णचन्द्र दाशको पनि उपस्थिति थियो ।

**उदयपुर** : उदयपुरमा मे दिवसको उपलक्ष्यमा जिफन्टको आयोजनामा गाइघाट र जलजलेमा छुट्टाछुट्टै कार्यक्रम सम्पन्न भयो । गाइघाटमा मे दिवस सभा तथा रक्तदानकासाथ सम्पन्न भएको थियो । गाइघाटमा जिफन्ट जनकपुर अञ्चल अध्यक्ष त्रिविक्रम ज्ञवालीको अध्यक्षतामा सम्पन्न मजदुर सभामा नेकपा (एमाले) उदयपुर जिल्ला सचिव मणिराज उपाध्याय प्रमुख अतिथि हुनुहुन्थ्यो । जलजलेमा मे दिवसमा भलिबल प्रतियोगिता, हाजिरीजवाफ प्रतियोगिताका साथै मजदुर सभा सम्पन्न भएको थियो । जिफन्ट जनकपुर अञ्चल अध्यक्ष त्रिविक्रम ज्ञवालीको प्रमुख आतिथ्यमा सम्पन्न मजदुर सभामा मजदुर नेताहरू धनकुमार श्रेष्ठ, राजन रेग्मी, प्रेम चाम्लीङ, डीएसपी माधव बस्नेतले मे दिवसबारे बोल्नुभएको थियो । सभा गणेश प्रसाद घिमिरेको अध्यक्षतामा सम्पन्न भएको थियो ।

**वीरगंज** : जिफन्टको आयोजनामा सिमरामा मे दिवस मजदुर र्‍याली र मजदुर सभाकासाथ सम्पन्न भयो । जिफन्ट अञ्चल अध्यक्ष दिनेश राईको अध्यक्षतामा सम्पन्न सो मजदुर सभामा नेकपा (एमाले) स्थायी समिति सदस्य भरतमोहन अधिकारीले प्रमुख अतिथिको आसनबाट शुभकामना मन्तव्य दिनुभएको थियो । कार्यक्रममा नेकपा ( एमाले) वैकल्पिक सदस्य पुरुषोत्तम पौडेल, बारा सचिव अच्युत मैनाली, रौतहट सचिव राम कुमार भट्टराई, अंचल सदस्य सुन्दर विकले बोल्नुभएको थियो ।

**हेटौंडा** : मे दिवसको उपलक्ष्यमा हेटौंडामा मजदुर र्‍याली, मजदुर सभा र हाजिरी जवाफ प्रतियोगिताकासाथ मे दिवस सम्पन्न भयो । मे दिवसको बिहान हेटौंडा औद्योगिक क्षेत्रमा प्रमुख




अतिथि नेकपा (एमाले) का केन्द्रीय वैकल्पिक सदस्य रणध्वज कन्दङवाले झण्डोत्तोलन गर्नुभएपछि आरम्भ भएको र्‍याली औद्योगिक क्षेत्रको परिक्रमा गरी सभामा परिणत भयो । सभामा प्रमुख अतिथि लगायत विशिष्ट व्यक्तिहरूले मन्तव्य राख्नु भएको थियो । सभामा हाजिरी जवाफ प्रतियोगिताका विजयी टिमहरूलाई शील्ड तथा पुरस्कार पनि वितरण गरिएको थियो ।

**पोखरा** : पोखरामा मे दिवस मजदुर र्‍याली र मजदुर सभा तथा पत्रकार सम्मेलनकासाथ जिफन्ट, एनटीयूसी र अखिल नेपाल ट्रेड यूनियन महासंघको संयुक्त आयोजनामा सम्पन्न भयो । मजदुर र्‍याली औद्योगिक क्षेत्रबाट निस्केको थियो । र्‍यालीले नगर परिक्रमा गरी महेन्द्र पुलमा पुगी सभा भएको थियो । सभामा नेकपा (एमाले) केन्द्रीय सदस्य तुल बहादुर गुरुङ, कास्की जिल्ला सचिव मान बहादुर जिसी, नेपाली कांग्रेसका केन्द्रीय सदस्य रामचन्द्र पौडेल, नेपाली काँग्रेस जिल्ला सभापति शुक्रराज शर्मा, संयुक्त जनमोर्चाका केन्द्रीय सदस्य भीमप्रसाद गौतम, गण्डकी-धौलागिरी क्षेत्रीय




कमिटीका सदस्य शंकर बराल, जिफन्ट अञ्चल अध्यक्ष सूर्यमोहन सुवेदी, नेपाल ट्रेड यूनियन कांग्रेसका उपाध्यक्ष रामजी कुँवर, अखिल नेपाल ट्रेड यूनियन महासंघका केन्द्रीय सदस्य सन्तबहादुर घिसिङले बोल्नु भएको थियो । मजदुर सभा जिफन्ट अञ्चल कमिटीका सचिव सूर्य प्रसाद पौडेलको अध्यक्षतामा सम्पन्न भएको थियो ।

**लमजुङ** : लमजुङमा मध्यमर्स्याङदीमा मे दिवस मजदुर र्‍याली र मजदुर सभाकासाथ समपन्न भयो । जिफन्ट पश्चिमाञ्चल क्षेत्रीय संयोजक चूडामणि जंगलीको प्रमुख आतिथ्यमा सम्पन्न सो कार्यक्रम नेस्वमयू मध्यमर्स्याङदीका अध्यक्ष फुलबहादुर गुरुङको अध्यक्षतामा सम्पन्न भएको थियो ।

**तनहुँ** : दमौली बजारमा जिफन्टको आयोजनामा मे दिवस मजदुर र्‍याली र मजदुर सभाका साथ सम्पन्न भएको थियो । क्युपेक नेपालका तनहुँ जिल्ला संयोजक इन्द्र थापाको अध्यक्षतामा सम्पन्न कार्यक्रममा अन्तरराष्ट्रिय मे दिवस र वर्तमान नेपाली मजदुर आन्दोलन विषयमा नेकपा (एमाले) तनहुँ जिल्ला सचिव एकबहादुर राना, नेपाल ट्रेड यूनियन महासंघ पोखरा अञ्चल सदस्य ईश्वर प्रसाद आचार्य लगायतका महानुभावहरूले मन्तव्य दिनु भएको थियो ।



**बुटवल** : जिफन्ट र एनटीयूसीको संयुक्त आयोजनामा बुटवलमा मे दिवस मजदुर र्‍याली, मजदुर सभा, रक्तदान कार्यक्रम, हाजिर जवाफ प्रतियोगिताकासाथ सम्पन्न भयो । मजदुर सभामा जिफन्ट अञ्चल अध्यक्ष कमल गौतम, एनटीयूसीका जिल्ला अध्यक्ष काजीमान श्रेष्ठले मन्तव्य दिनुभएको थियो । सभामा नेकपा एमाले स्थायी कमिटीका वैकल्पिक सदस्य विष्णुप्रसाद पौडेल, नेपाली कांग्रेसका निवर्तमान सांसद सूर्यप्रसाद प्रधान, नेकपा एमाले रूपन्देही जिल्ला सचिव विजय पौडेल, नेपाली कांग्रेस बुटवल नगर सभापति रामप्रसाद खनाल, नेकपा एमाले बुटवल नगर सचिव भुवनेश्वर भण्डारी, श्रम कार्यालय बुटवलका प्रमुख टेकराज बोहोराले आ-आफ्नो मन्तव्य दिनुभएको थियो ।

साथै बुटवल अञ्चल अन्तर्गतका अन्य जिल्लाहरू पाल्पामा सिरु गोतामेको अध्यक्षतामा, गुल्मीमा किशोर आचार्यको अध्यक्षतामा, कपिवलस्तुमा हिरालाल पौडेलको अध्यक्षतामा, परासीमा टिकाराम पौडेलको अध्यक्षतामा, अर्घाखाँचीमा बम बहादुर विकको अध्यक्षतामा र दाङमा दान बहादुर केसीको अध्यक्षतामा मे दिवस कार्यक्रम सम्पन्न भएको थियो ।

**धनगढी** : मे दिवसको उपक्ष्यमा महेन्द्रनगर, वेलौरी (पुनरवास), धनगढी, टिकापुर आदि स्थानमा अलग अलग कार्यक्रमहरू सम्पन्न भएको थियो । महेन्द्रनगर, टिकापुर र पुनरवासमा मजदुर र्‍याली र विचार गोष्ठी, कोणसभा गरी मे दिवस सम्पन्न भएको थियो । धनगढीमा मोटर साइकल र्‍याली पनि सम्पन्न भएको थियो ।

यसरी नै मे दिवस नेपालगञ्जमा पनि विभिन्न कार्यक्रमका साथ भएको समाचार छ ।

**जिफण्ट/एनटियूसीको संयुक्त पत्रकार सम्मेलन सम्पन्न**

मे दिवसको सन्दर्भमा वैशाख १७ गते होटल सोल्टीमा नेपाल ट्रेड यूनियन महसंघ र नेपाल ट्रेड यूनियन काङ्ग्रेसले संयुक्त रूपमा पत्रकार सम्मेलन गरी समसामयिक विषयमा आफ्नो धारणा सार्वजनिक गरे । दुवै महासंघका अध्यक्षहरूद्वारा सह-अध्यक्षता गरिएको उक्त पत्रकार सम्मेलनमा स्वागत तथा सञ्चालन महासंघका महासचिव विष्णु रिमालले गर्नुभएको थियो । पत्रकार सम्मेलनमा संयुक्त प्रेस विज्ञप्तिको वाचन एनटीयूसीका महासचिव अच्युत पाण्डेले गर्नुभएको थियो ।

**प्रस्तुति : कवीन्द्र शेखर रिमाल**

# ११४ औं मे दिवस समारोहका सह–अध्यक्षहरूको मन्तव्य

मे दिवस समरोहका अध्यक्षता **नेपाल ट्रेड यूनियन महासंघका अध्यक्ष क. मुकुन्द न्यौपाने** र **नेपाल ट्रेड यूनियन काँग्रेसका अध्यक्ष, लक्ष्मण बस्नेत**ले संयुक्त रूपमा गर्नुभयो । कार्यक्रमको शुरुमा समारोहका सहभागीहरूलाई स्वागत गर्दै नेपाल ट्रेड यूनियन काँग्रेसका अध्यक्ष लक्ष्मण बस्नेतले ११४औं मे दिवसको सभामा सबैलाई स्वागत गर्न पाउँदा आफू गौरवान्वित भएको बताउनु भयो । "हामी प्रजातान्त्रिक नेपालको इतिहासको निर्णायक दोसाँधमा पुगेका छौं ।" श्री बस्नेतको कथन थियो-२०४६ सालको जनआन्दोलनबाट प्राप्त जन अधिकार फेरि प्रतिक्रियावादी तानाशाहीले खोस्ने हुन् अथवा २०४६ सालको जनआन्दोलनबाट प्राप्त जनताका सार्वभौमसत्ता जनतामा नै निहित रहने हो यस दोसाँधमा आज हामीहरू उभिएका छौं ।




१२ वर्षमा केही भएन भन्नेलाई चुनौती दिंदै उहाँले भन्नु भयो-"१२ वर्षमा जनताले चाहे अनुरूप सम्पूर्ण आकांक्षाहरूको परिपूर्ति भएको छैन होला । तर शिक्षामा विश्वविद्यालयहरू, स्कुलहरू तथा अन्य तालिम केन्द्रहरू खुलेका छन् । स्वास्थ्यको स्थितिमा हस्पिटलहरू, मेडिकल कलेजहरू तथा बाटो-घाटो, गोरेटो, टेलिफोन आदिमा उल्लेखनीय वृद्धि भएको छ । मध्य पहाडी भागमा बिलाउन लागेको जंगल जन सहभागिताबाट फेरि हरियो भएको छ । वित्तीय स्थितिमा बैंकहरू खुलेका छन् । सहकारी वित्तीय संस्थाहरू खुलेका छन् । सूचना र संचारमा रेडियो, टेलिभिजन, कम्प्युटर, अखवारमा प्रगति भएको छ । यसका साथै ग्रामीण विद्युतीकरण एवं हवाइ यातायातमा उल्लेखनीय वृद्धि भएको छ ।"

"तर के बहुसंख्यक जनता र मजदुरहरू यी सुविधा भोग्न सक्ने स्थितिमा छन्?" उहाँले स्पष्ट पार्नुभयो- "केही व्यक्तिहरूको २०४६ सालपछि पनि जीवनस्तरमा गुणात्मक परिवर्तन आएको छ । धनीहरू झन् धनी र गरीबहरू झन् गरीब भएका छन् । केही ठूलो ओहोदाका व्यक्तिहरूको तलबमा ठूलो वृद्धि भएको छ । रुग्ण उद्योगहरूको नाममा फेरि उनीहरूले नै सुविधा पाएका छन् । साथै श्री ५ महाराजाधिराज सरकार स्वयंको पनि रु. ११ करोडबाट ४४ करोडको सुविधा पुगेको छ । तर मजदुरहरूको तलब दुई वर्ष अगाडि नै बढ्नु पर्ने भए तापनि रु. २११६ ।- मै आज पनि सीमित छ । त्यो पनि सम्पूर्ण श्रमिकलाई उपलब्ध छैन ।"

उहाँले अगाडि टिप्पणी गर्नुभयो- "विडम्बना, जसले सम्पूर्ण कुराहरू पाएको छ, उसैको नै प्रजातन्त्रप्रति ठूलो गुनासो छ । उसैले भन्दैछ कि प्रजातन्त्र फापेन देशलाई !"

कार्यक्रममा समापन मन्तव्य दिदै नेपाल ट्रेड यूनियन महासंघ अध्यक्ष मुकुन्द न्यौपानेले भन्नुभयो- "मे दिवस ११७ वर्ष अगाडि सिकागोका मजदुरहरूले आफ्नो कामको घन्टा घटाउनको लागि लडाइ लड्दा त्यस लडाइमा मर्ने मजदुरहरूको सम्झना गर्ने दिन हो । ११७ वर्ष पछाडि आज हामी यो हलमा बस्दाखेरि जुन अवस्थामा छौं संसारले धेरै ठूलो फड्को मारेको छ । अहिले त्यो भन्दा धेरै माथि हामी पुगेका छौं ।"

कमरेड न्यौपानेले अगाडि भन्नुभयो-"आजको विश्व परिवेशमा हाम्रो देशलाई हेर्ने हो भने विडम्बना उस्तै छ । जति जेट उडे पनि, चन्द्रमाको माटो समाए पनि हामी नेपाली मजदुरहरूमा अझै पनि डरलाग्दो अन्योल छ । आर्थिक अन्योल छ, उद्योगहरू कतातिर जाने हुन्, चल्ने हुन् कि होइनन्, ७ वर्षसम्म हत्याहिंसा भयो, त्यसले आर्थिक क्षेत्रमा जुन डरलाग्दो असर पार्‍यो, होटलका साथीहरूले आफ्नो तलब कटौती गर्नुभएको छ । सुविधा कटौती गर्नुभएको छ ! यहाँसम्म कि एक टोलीले तीन महिना काम गर्ने र अर्को टोलीले अर्को तीन महिना काम गर्ने । यसरी एक वर्षमा छ महिनाको तलब खाएर काम गरिरहनु भएको छ ।"

"यसरी यस्ता अवस्थाबाट मुलुकलाई कसरी जोगाउने भन्ने सोचिरहेको अवस्थामा मुलुक फेरि प्रतिगमनतर्फ गयो ।" क. न्यौपानेको कथन थियो- "बाह्र वर्षमा यस्तो विकृति भयो, पार्टीहरूले यस्तो गल्ती गरे भन्ने खालका तर्कहरू देखाएर सिंगो सिस्टमलाई ढाल्न खोजिरहेको छ । १२ वर्ष यता केही भुल भएका होलान्, ती भुलहरू तिनै पार्टीले सच्याउनेछन् । जनतामा गएर जनताको विश्वास लिने उनीहरूकै दायित्व हो ।"

"अहिले राजनीतिक पार्टीले माग गरिरहेका छन्- सर्वअधिकार सम्पन्न सर्वदलीय सरकार, शान्ति वार्ता र आम निर्वाचनको घोषणा । अनि आम निर्वाचनमा गएपछि जनताले नेताहरूले गरेका भुलहरूबारे प्रश्न उठाउनेछन् । जनताको प्रश्नमा नेताहरूले जवाफ दिन सकेनन् भने जनताले नै फिर्ता गर्नेछन् ।"

"व्यक्तिले गरेका गल्ती कमजोरीलाई लिएर सिस्टममाथि थोपर्ने हो भने संसारमा कुनै राज्य भन्ने चल्दै चल्दैन । जर्मनका एक जना चान्सलरले पनि पार्टीलाई थाहा नदिई कति चन्दा लिए भन्ने केही वर्ष अगाडि समाचारमा पढेको थिएँ । अमेरिकामा पनि यस्तो घटना हुने गर्छ । त्यसैले जुनसुकै जहाँसुकै भए पनि प्रजातन्त्र भनेको एउटा व्यवस्था हो । यो व्यक्तिको होइन, जनताको व्यवस्था हो ।" जिफण्टका अध्यक्षले आफ्ना भनाई टुङ्गयाउँदै भन्नुभयो-"यही कारणले मे दिवसमा सम्पूर्ण मजदुर साथीहरूलाई म के भन्न चाहन्छु भने अहिले मुलुकमा अन्योल छाएको छ । त्यो अन्योलबाट मुलुकलाई मुक्त गर्ने पर्छ । देशलाई अग्रगतिको दिशातिर लम्काउनै पर्दछ । यसका लागि स्पष्ट दिशाका साथ हामी अगाडि बढ्नु पर्दछ । यो अहिलेको मुलुकको माग हो ।"

# महिला ट्रेड यूनियन कार्यकर्ताको दक्षिण एसियाली क्षेत्रीय सम्मेलन सम्पन्न



नेपाल ट्रेड यूनियन महासंघ -जिफन्ट) र डेनमार्कको महिला ट्रेड यूनियन -क्याड) को संयुक्त आयोजनामा महिला ट्रेड यूनियन कार्यकर्ताहरूको दक्षिण एसियाली क्षेत्रीय सम्मेलन गत २०५९ चैत्र १-३ गते काठमाडौंमा सम्पन्न भयो ।

उन्नत दक्षिण एशियाली विकासका लागि साझा जेण्डर विषयको पहिचान गर्ने उद्देश्यले सम्पन्न सो सम्मेलनको चैत्र १ गते कमलादी स्थित नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानको हलमा एक भव्य समारोहका बीच उद्घाटन कार्यक्रम सम्पन्न भयो ।

उद्घाटन समारोहमा आयोजकहरूको तर्फबाट जिफन्टका अध्यक्ष मुकुन्द न्यौपाने र क्याडका मारिया बेहरिङले सम्मेलनको उद्देश्यबारे बोल्नुभएको थियो ।

यसै अवसरमा जिफण्टद्वारा तयार गरिएको म्युजिक भिडियो डकुमेन्ट्री "सम्झँदैमा श्रमिक महिला" को कमरेड सहाना प्रधानले सार्वजनिक गर्नुभयो र यसरी नै जिफन्टद्वारा कार्यथलोमा महिला मजदुरको अवस्थाको वारेमा गरिएको अध्ययनको प्रतिवेदन "विकल्पको खोजी" महासंघका अध्यक्ष मुकुन्द न्यौपानेले सार्वजनिक गर्नु भएको थियो ।

उद्घाटन समारोहमा अतिथि प्रतिनिधिहरू आइएलओ-नेपालका निर्देशक लैला टेग्मो रेड्डि, आइसिएफटियूका एल्सा रामोस, डब्लुसिएलका मार्सेले राजमोनी, इएनआइएका चाङ इउ यून अलाइस र जेन्रोरेन जापनका यूकी याबुताले श्रमिक आन्दोलनमा महिला सहभागिताको बारेमा आ–आफ्नो यूनियनको अनुभव र कार्यथलोमा रहेका जेण्डर विषयहरूको चर्चा गर्नु भएको थियो ।

थाइल्याण्ड, डेनमार्क र श्रीलंकाका राजदुतहरूको विशेष उपस्थिति रहेको सो समारोह जिफन्ट केन्द्रीय महिला मजदुर विभागका प्रमुख बिना श्रेष्ठको अध्यक्षतामा सम्पन्न भएको थियो ।

सम्मेलनमा दक्षिण एसियाका १० वटा ट्रेड यूनियन केन्द्रहरूका साथै अन्तरराष्ट्रिय ट्रेड यूनियन केन्द्रहरू र आइएलओ-नेपाल र आइएलओ-नयाँ दिल्लीको पनि सहभागिता रहेको थियो ।

**सम्मेलनको मूल सत्र**

उद्घाटनको अर्को दिन चैत्र २ र ३ गते सम्मेलनको मुल सत्र बौद्धस्थित होटल हायातमा सम्पन्न गरियो । चैत्र २ गते कार्यक्रमको पहिलो सत्र आइएलओ–नेपालका निर्देशक लैला टेग्मो रेड्डीको अध्यक्षतामा सम्पन्न भयो । यस सत्रको शुरूमा जिफण्टको तर्फवाट सम्मेलनका संयोजक विन्दा पाण्डेद्वारा सम्मेलनको लागि तयार गरिएको कार्यपत्र प्रस्तुत गरियो । त्यसपछि महिला श्रमिकसँग सम्बन्धित आइएलओका अभिसन्धिहरूको वारेमा आइएलओ–दिल्लीका बरिष्ठ जेण्डर र महिला विशेषज्ञ डाक्टर ज्योती तुलाधरले प्रस्तुत गर्नु भयो ।

कार्यपत्र प्रस्तुतिपछि "मातृत्व संरक्षण र प्रजनन स्वास्थ्यमा कार्यथलोको वातावरण" र "ट्रेड यूनियन आन्दोलनमा महिला नेतृत्व सशक्तिकरण" कार्यशाला सम्पन्न भयो । अपरान्हमा दुवै कार्यशालामा भएको छलफलको प्रतिवेदन प्रस्तुत गरियो । यस सत्रको अध्यक्षता आइएलओ दिल्लीका श्रमिक गतिविधि सम्बन्धी बरिष्ट विशेषज्ञ डाक्टर पोङसुल आनले गर्नुभएको थियो । दुवै कार्यशालावाट प्रस्तुत प्रतिवेदनको संक्षेपीकरण गर्ने र त्यसैको आधारमा घोषणापत्रको मस्यौदा तयार गर्ने काम सम्मेलन घोषणापत्र मस्यौदा कमिटिले गर्ने निर्णयकासाथ यस दिनको कार्यक्रम समाप्त गरियो । साँझमा श्रमिक आन्दोलनका अन्य सहयोगी संगठनका साथीहरूसहित रात्रीभोजको आयोजना गरिएको थियो ।

भोलि पल्ट चैत्र ३ गते, सम्मेलनको अन्तिम दिन विहानको सत्र काउका दक्षिण एसिया संयोजक सुजाता गोथोस्कारको अध्यक्षतामा सम्पन्न भयो । यस सत्रमा जेण्डर विशेषज्ञ डा. ज्योती तुलाधरले घोषणापत्रको मस्यौदा कमिटिले तयार गरेको सम्मेलन घोषणापत्रको मस्यौदा प्रतिनिधिहरू विच प्रस्तुत गर्नुभयो । प्रस्तुत मस्यौदा माथि प्रतिनिधिहरूले दिएका सुझाव र विचारलाई समावेस गरी पारित गरियो ।

घोषणापत्रमा दक्षिण एसियाका सवै सहभागि यूनियनहरूले तत्कालिन र दीर्घकालिन रूपमा संगठन विस्तार र विकासको सन्दर्भमा अनौपचारिक क्षेत्रका मजदुरहरू जस्तै घरेलु मजदुर, कृषी मजदुर, निर्यात प्रर्वद्धन क्षेत्रमा कार्यरत मजदुर, स्वतन्त्र व्यापार क्षेत्रमा कार्यरत मजदुर, प्रवासी महिला मजदुर तथा बेचबिखनमा परेका महिलाहरू र औपचारिक क्षेत्रमा कार्पेट र गार्मेण्ट क्षेत्रमा कार्यरत मजदुरहरूका विचमा विशेष जोड दिने कुरा उल्लेख छ ।

कार्यथलोलाई प्रजातान्त्रिकरण गर्ने र जेण्डर समान बनाउदै

**दक्षिण एशियाली महिला ट्रेड यूनियन कार्यकर्ता सम्मेलनमा सहभागी संस्थाहरू**

| | |
|---|---|
| बंगलादेश | - बंगलादेश जातियो श्रोमिक जोट - बिजेएसजे |
| भारत | - सेन्ट्रल अफ इण्डियन ट्रेड यूनियन - सीआइटीयू |
| भारत | - अल इण्डिया ट्रेड यूनियन कांग्रेस - एआइटीयूसी |
| भारत | - भारतीय मजदुर संघ - बीएमएस |
| भारत | - इण्डियन नेशनल ट्रेड यूनियन कांग्रेस -आइएनटीयूसी |
| भारत | - स्वरोजगार महिला संघ - सेवा |
| श्रीलंका | - सिलोन तामिल टिचर्स यूनियन (सिटिटियू) |
| नेपाल | - नेपाल ट्रेड यूनियन महासंघ - जिफन्ट |
| नेपाल | - नेपाल ट्रेड यूनियन कांग्रेस - एनटीयूसी |
| नेपाल | - प्रजातान्त्रिक ट्रेड यूनियन महासंघ, नेपाल -डिकोण्ट |

**अन्य सहभागी संघ-संस्थाहरू**

| | |
|---|---|
| नेपाल | - अखिल नेपाल महिला संघ - अनेमसंघ-नेपाल |
| डेनमार्क | - महिला ट्रेड यूनियन - क्याड–डेनमार्क |
| जापान | - नेसनल कन्फेडेरेसन अफ ट्रेड यूनियन - जेन्रोरेन–जापान |
| कोरिया | - कोरियन कन्फेडेरेसन अफ ट्रे.यू.- केसिटियू–दक्षिण कोरिया |
| डब्लुसिएल | - वर्ल्ड कन्फेडेरेसन अफ लेबोर |
| आइसिएफटियू | - इन्टरनेसनल कन्फेडेरेसन अफ फ्रि ट्रेड यूनियन |
| यूएनआई | - यूनियन नेटवर्क इन्टरनेसनल |
| आइएलओ | - साउथ एशिया एडभाइजरी टिम - नयाँ दिल्ली |
| आइएलओ | - काठमाण्डौ |
| कमिटी फर एशियन विमन | - सिएडब्ल्यु |







लैजाने सन्दर्भमा सवै क्षेत्रका मजदुरहरूको सन्दर्भमा तिनवटा विशेष विषयहरू - मातृत्व संरक्षण, मर्यादित कामको विस्तार र ट्रेड यूनियन अधिकारको विषयमा ध्यान दिनुपर्ने र कार्यक्षेत्रमा यी विषयहरूलाई प्रभावकारी बनाउन निम्न कुराहरूमा जोड दिने कुरा पनि घोषणापत्रमा उल्लेख गरिएको छ ।

**क. मातृत्व संरक्षणको सन्दर्भमा**

- आई.एल.ओ. अभिसन्धि नं. १८३ पारित गराउन विभिन्न राष्ट्रिय, क्षेत्रिय तथा अन्तर्राष्ट्रिय तहमा प्रचार-प्रसार र चेतना विकासको लागि अभियान संचालन गर्ने
- मातृत्व संरक्षण सम्बन्धी व्यवस्थामा सुधार र उचित कार्यान्वयनको लागि ट्रेड यूनियनहरू र अन्य सहयोगी संगठनहरूको विचमा कामको समन्वय गर्दै संयुक्त रूपमा पहल गर्ने र आवश्यक र उपलव्ध श्रोत परिचालन गर्दै जाने

**ख. मर्यादित काम**

- श्रम क्षेत्रमा महिला सहभागिता, पेशाहरू, ट्रेड यूनियनमा महिला सहभागिताको अवस्था, ज्याला र सुविधाहरू, शिशु स्याहारको व्यवस्था, कार्य अवस्था आदि विषयमा राष्ट्रिय स्तरमा लिंग विभाजित तथ्याङ्क र सूचनाहरूको व्यवस्थाको गर्ने
- ट्रेड यूनियनहरूका विचमा संयुक्त कार्यक्रमको आयोजना गर्नुका साथै प्रभावकारी संयन्त्रको विकास गर्दै जाने

**ग. ट्रेड यूनियन अधिकारको विस्तार**

- आई.एल.ओ. अभिसन्धि नं ८७ र ९८ अनुमोदना गरी लागु गर्न /गराउनको लागि प्रचार-प्रसार अभियान संचालन गर्ने
- श्रम ऐन र अन्तर्राष्ट्रिय श्रम मापदण्डका बारेमा दक्षता विकासको लागि प्रशिक्षण कार्यक्रमहरू संचालन गर्ने
- राष्ट्रिय र दक्षिण एशिया तहमा ट्रेड यूनियनहरूको संयुक्त कार्यक्रमहरू आयोजना गर्ने
- ट्रेड यूनियनमा महिला सहभागिता र प्रतिनिधित्वमा वृद्धि गर्दै जाने र महिलाहरूलाई नीति निर्माण तहमा सहभागि गराउने र नेतृत्व क्षमताको विकास गर्ने कुरामा विशेष ध्यान दिने

घोषणापत्रमा जारी गरिएका कुराहरूको अनुगमन गर्ने र कामहरूको समन्वय गर्ने हाललाई एउटा अनौपचारिक संयन्त्र बनाउने, यस संयन्त्रमा दक्षिण एशियाका हरेक यूनियनले एकजना महिला नेतालाई सम्पर्क व्यक्तिको रूपमा चयन गर्ने र घोषणा गरिएका कुरालाई व्यवहारमा लागु गर्दै जाने कुरामा जोड दिइएको थियो । यस कामको लागि आगामी एक वर्ष यस संयन्त्रको समन्वयको जिम्मा जिफण्टले नै लिनका लागि भारतका प्रतिनिधिहरूले प्रस्ताव राखे । अन्ततः सर्वसम्मत निर्णयवाट आगामी एकवर्षको लागि जिफण्टले यस समन्वयको संयोजकको जिम्मा पाएको छ ।

एक वर्षको अन्तरालमा माथि उल्लेख गरिएका विषयमा अभियान संचालनको काम थालनी गर्ने, आआफ्नो क्षेत्रका सुचनाहरू संकलन र आदानप्रदान गर्ने र यूनियनलाई जेण्डर सचेत र सन्तुलित बनाउदै लैजाने दिशामा पहल गर्ने पनि सम्मेलनले निर्णय गरेको छ ।

सम्मेलनको अन्तमा इराकमाथि अमेरिकाले गरेको आक्रमणको विरोध घोर भर्त्सना गर्दै विश्व शान्तिको पक्षमा प्रस्ताव पारित गरियो । त्यसपछि सम्मेलनमा सहभागी भई महत्त्वपूर्ण योगदान गर्नु हुने सवै प्रतिनिधिहरू, सहयोगी र सहभागीहरूलाई हार्दिक धन्यवाद दिदै सम्मेलन समापन गरियो ।

**प्रस्तुति : विन्दा पाण्डे**

# जिफन्ट राष्ट्रिय परिषद्को तेस्रो विस्तारित बैठक र योजना कार्यशाला



जिफन्ट राष्ट्रिय परिषद्को तेस्रो विस्तारित बैठक र योजना कार्यशाला गत २०५९ चैत २८-३० गते भक्तपुर जिल्लाको नगरकोटमा सम्पन्न भयो ।

चैत्र २८ गते महासंघका अध्यक्ष मुकुन्द न्यौपानेको अध्यक्षतामा उद्घाटन कार्यक्रम सम्पन्न भयो । उद्घाटन कार्यक्रममा महासंघका महासचिव विष्णु रिमालले राष्ट्रिय परिषद्को बैठक र योजना कार्यशालाबारे मन्तव्य दिनु भयो । महासचिव विष्णु रिमालले भन्नुभयो- "हामीले महासंघको राष्ट्रिय परिषद्को तेस्रो विस्तारित बैठक र योजना कार्यशाला एकै साथ गरिरहेका छौं । यसले महासंघको मूल्यांकनका साथै आगामी वर्षको योजना समेत बनाउनेछौं ।"

उद्घाटन कार्यक्रममा फ्रेडरिक इवर्ट स्टिफटुङ (एफइएस) का देवराज दाहालले एफइएस के हो र यसले ट्रेड यूनियनहरूलाई किन सहयोग गर्दछ भन्ने बारे आफ्नो मन्तव्य दिंदै भन्नुभयो- "ज्ञान जहिले पनि राजनीतिक हुन्छ । ज्ञानले समाज परिवर्तन गर्छ । सबै ज्ञानलाई एकीकृत गर्ने ज्ञान राजनीतिक-अर्थशास्त्र हो । विश्वमा राजनीतिक अर्थशास्त्रको बनोट कस्तो छ त्यो मजदुरहरूले बुझ्नु पर्दछ । जिफन्टले यस्तै ज्ञानको प्रचार गरेर राष्ट्रको राजनीतिक अर्थतन्त्रमा परिवर्तन गरेर समाज परिवर्तन गर्न खोजिरहेको छ ।"

उद्घाटन कार्यक्रम सम्पन्नपछि कार्यशाला आरम्भ भयो । कार्यशालामा महासंघको सदस्य यूनियनहरूको सुदृढीकरण, महासंघको आगामी कार्यक्रम, महाधिवेशनद्वारा पारित कार्यक्रम र कार्यान्वयनको स्थिति, संगठन विस्तार र परिचालन, नेतृत्व निर्माण र परिचालन, नयाँ क्षेत्र र नयाँ सदस्यता, महिला सहभागिता, एकीकृत ट्रेड यूनियन निर्माण र सम्बद्ध संस्थाहरूसँगको अन्तरसंबन्ध, आर्थिक स्रोत परिचालन, सहकारिता र आत्मनिर्भरता, श्रम कानून कार्यान्वयन र सामाजिक सुरक्षा, प्रचार अभियान, प्रकाशन र शैक्षिक सामग्रीहरूको सान्दर्भिकता आदि विषयहरूमा व्यापक छलफल गरी निचोडमा पुगेको छ ।

बैठकले निम्न निर्णयहरू गरेको छ :

१. मे दिवस २००३ देशव्यापी रूपमा भव्यताकासाथ मनाउने । केन्द्रीय स्तरमा ट्रेड यूनियन काँग्रेससँग संयुक्त रूपमा मजदुर ऱ्याली र मजदुर सभाका साथ भव्य रूपमा मनाउने ।
२. शैक्षिक कार्यक्रममा यस पटक राजनीतिक र वैचारिक विषयहरूमा जोड दिने ।
३. श्रम कानूनमा सामयिक परिमार्जनको विषयमा अन्य ट्रेड यूनियनहरू लगायत व्यवसायीहरूसँग ७ वटा विषयहरू (१) श्रम लचकता (२) सामाजिक सुरक्षा, (३) कार्यथलोमा जेण्डर, (४) निकास नीति, (५) श्रम प्रशासन, (६) ट्रेड यूनियन र सामूहिक सौदावाजी (७) अनौपचारिक क्षेत्र आदि विषयमा व्यापक छलफल गर्ने ।
४. महिला सहभागिता अभिवृद्धिको लागि वैशाख २६ गते देखि असार मसान्तभित्र १० वटा अञ्चलमा अञ्चल सम्मेलन र काठमाडौंमा असार ७ र ८ गते राष्ट्रिय सम्मेलन गर्ने ।
५. एकल यूनियन निर्माण गर्न नेपाल ट्रेड यूनियन कांग्रेससँगको सहकार्यलाई जारी गर्ने । २०६० सालमा दुई महासंघका सदस्य यूनियनहरू होटल यूनियन र चिया यूनियनहरूमा सदस्य प्रमाणीकरण र चेक अफ प्रणाली अभियान शुरू गर्ने ।
६. नयाँ क्षेत्रमा सदस्यता विस्तार सम्बन्धमा 'नेपाल सडक व्यापार श्रमिक संघ' 'निजी तथा आवासीय विद्यालय शिक्षक कर्मचारी संघ' ट्रेड यूनियन संघको रूपमा दर्ता गर्न पहल गर्ने ।
७. महासंघको विधान अनुसार आगामी चौथो राष्ट्रिय महाधिवेशन सन् २००४ को मे १ मा गर्ने
८. महासंघको १० वटै अञ्चल अधिवेशनहरू आगामी मंसीर र पुसमा गर्ने ।

बैठकले समसामयिक विषयमा विशेष प्रस्तावका साथै निम्न प्रस्तावहरू पारित गरेको छ :

- खाडी क्षेत्रमा चलिरहेको युद्ध तुरुन्त रोकियोस् । इराकमा शुरू भएको मानवीय विपत्ति अन्त्य गरियोस् ।
- पेट्रोलियम पदार्थमा भएको मूल्यवृद्धि तुरुन्त फिर्ता लिइयोस् ।
- रुग्ण उद्योगका श्रमिकहरूको समस्या तुरुन्त समाधान गरियोस् ।

## जिफन्ट राष्ट्रिय परिषद

# वर्तमान अन्यौलपूर्ण परिस्थिति र ट्रेड यूनियनको दायित्व

**मुकुन्द न्यौपाने**

**(नेपाल ट्रेड यूनियन महासंघको तेस्रो राष्ट्रिय परिषदको विस्तारित बैठक तथा योजना कार्यशालामा प्रस्तुत मन्तव्यको सार संक्षेप)**



आज हामी हाम्रो राष्ट्रिय महाधिवेशनको तेस्रो वर्षको अन्तिम चरणमा पुगेका छौं र चौथो महाधिवेशनको संघारतिर लम्कँदै छौं । यो तीन वर्षमा राष्ट्रिय तथा अन्तरराष्ट्रिय क्षेत्रमा अनेकौं घटनाहरू घटेका छन् । देश युद्ध, हत्या र हिंसाको चपेटामा परेको छ । जनयुद्धको नाममा विगत तीन वर्षमा सात हजारभन्दा बढी मानिसले आफ्नो ज्यान गुमाइ सकेका छन् । राज्य पक्ष र माओवादी पक्षबाट प्रताडित र विस्थापितहरूको सङ्ख्या दशौं हजार होइन लाखौं छ । जनयुद्धको नाममा भएका हिंसा-आगजनी र चन्दा आतङ्कले गर्दा दुर्गम गाउँ र तराइ मात्र होइन शहरी क्षेत्र र उद्योगधन्धामा समेत गम्भीर असर परेको छ । कैयौं कारखानाहरू बन्द भएका छन् । पर्यटनसँग सम्बन्धित उद्योगहरू र अन्तरराष्ट्रिय बजार भएको गार्मेन्ट र गलैंचाहरूको उत्पादन अत्यन्तै न्यून भएर गएको छ । पर्यटकहरूको आगमनमा आएको कमीले मुलुकको अर्थतन्त्रका सबै भागलाई प्रभावित गरेको छ । रोजगारीका क्षेत्रहरू अत्यन्त साँघुरिँदै गएका र वेरोजगारहरूको सङ्ख्यामा तीव्र वृद्धिको कारणले मुलुक गम्भीर आर्थिक सङ्कट भेल्ने अवस्थामा पुगेको छ । बन्द कारखानाबाट बाहिरिएका मजदुर र सङ्कटकालको बहानामा कामबाट हटाइएका कामदारहरूको ठूलो सङ्ख्या आज सडकमा छरिएको छ । यो अवस्थाबाट श्रम क्षेत्रलाई मुक्त गर्नको लागि आज सिङ्गै मुलुकमा शान्तिको अवश्यकता छ र यसको लागि राजनीतिक समाधानतर्फ पनि हाम्रो ध्यान जानु त्यत्तिकै जरुरी छ ।

मुलुकमा उत्पन्न राजनीतिक अस्थिरताले आर्थिक र सामाजिक क्षेत्रमा पनि अस्थिरताहरू उत्पन्न भएका छन् । यी समस्याबाट मुलुकलाई मुक्त गर्ने सवालमा नेपालका राजनीतिक शक्तिहरू बीचमा पनि अनेकौं मतभेदहरू छन् । जुन मतभेदले धेर-थोर मजदुर क्षेत्रलाई पनि प्रभावित गरिरहेको छ ।

ट्रेड यूनियन आन्दोलन भनेको मजदुरका आर्थिक सुविधा वृद्धिको लागि गरिने आन्दोलन मात्र होइन । उत्पादनको प्रमुख शक्तिको नाताले र संगठित शक्तिको नाताले पनि मुलुकमा घटिरहेका राजनीतिक र सामाजिक घटनाप्रति यसले आँखा चिम्लेर बस्न सक्दैन । वर्गका हिसाबले समाजमा रहेका अन्य वर्ग र तप्का भन्दा यो बढी संगठित छ र सचेत पनि छ । अन्य वर्गलाई देशको चिन्ता र चासो जति छ यसलाई पनि त्यत्तिकै देशको चिन्ता र चासो छ ।

बहुदलीय प्रजातन्त्र स्थापनाका आज १३ वर्ष बितेका छन् । यस अवधिमा मुलुक तीन ओटा आम निर्वाचन र ९ ओटा सरकारका ९ ओटा प्रधानमन्त्रीका कार्यकालबाट गुज्रिएको छ । हामीले यो वर्षको कार्यकालको पनि गम्भीरतापूर्वक समीक्षा गर्नै पर्छ र राजनीतिक पार्टीहरूबाट भए-गरिएका त्रुटिहरूलाई पनि औंल्याउनै पर्छ ।

ट्रेड यूनियन भनेको मूलतः श्रमिकहरूको संगठन हो । मानसिक श्रम वा शारीरिक जुनसुकै क्षेत्रमा काम गर्ने श्रमिकहरूको हितको यसले प्रतिनिधित्व गर्छ । त्यसकारण श्रमजीवी मजदुरवर्गको स्वार्थ रक्षा नै ट्रेड यूनियनको मूल दायित्व हो । राज्य भनेको शासक वर्गको संगठन हो । यस्तो अवस्थामा ट्रेड यूनियनहरूले राज्यको हैन मजदुर वर्गको पक्षमा उभिनु पर्छ । पार्टीमा विभिन्न वर्ग र तहका तप्काबाट मानिसहरू जम्मा हुन्छन् र पार्टीभित्रको संघर्ष भनेको विभिन्न वर्ग र तप्काहरूको आपसी स्वार्थको संघर्ष नै हो । पार्टी एउटा वर्गको हुँदैन त्यो जनता भित्र रहेका विभिन्न वर्गका तप्काका प्रतिनिधिहरूबाट बनेको हुन्छ । हाम्रो जस्तो देश जहाँ निम्न पूँजीपति वर्गको बाहुल्यता छ यस्तो अवस्थामा त्यहाँका राजनीतिक पार्टीहरूले लिने निर्णयका कतिपय पक्षहरू मजदुर हित विपरित पनि हुन सक्छन् । त्यस्तोवेला ट्रेड यूनियनका नेताहरूले मजदुर वर्गको स्वार्थ रक्षाको लागि राजनीतिक पार्टीसँग पनि संघर्ष गर्नु पर्ने हुन्छ ।

हामी अलिकति विगतको चर्चा गरौं । २००३ सालमा शुरू भएको मजदुर आन्दोलनले सात सालमा पुग्दा राणा विरोधी जनक्रान्तिको रूप लियो । ०१७ सालमा राजनीतिमाथि प्रतिबन्ध लागेपछि मजदुर क्षेत्रमा कार्यरत ट्रेड यूनियनहरू लामो कालसम्म विलोप भए । यसबाट के देखिन्छ भने त्यो बेलाका मजदुर संगठनहरू मजदुर हितका आम मजदुरका नेता संगठन भन्दा पनि पार्टी इकाइका रूपमा पार्टीकै स्वार्थको निम्ति बनाइएका थिए र पार्टीहरू छिन्न-भिन्न हुनासाथ तिनीहरू पनि छिन्न-भिन्न भए । २०३६ सालमा जनमत सँग्रहको घोषणा भयो । मजदुरहरूले थोरै भए पनि आफ्ना मौलिक हकको उपयोग गरे । आफ्ना प्रतिबन्धित मे दिवस जस्ता पर्वहरूलाई फुक्का गराए ।

२०३६ सालदेखि ०४६ सालसम्म मुलुकमा राष्ट्रिय रूपमा सक्रिय एउटा मात्र संगठन थियो 'नेपाल स्वतन्त्र मजदुर यूनियन' । पंचायती मजदुर संगठन मृत प्रायः थियो । नेपाल स्वतन्त्र मजदुर यूनियनले दश वर्षसम्म अत्यन्त कठिनतापूर्वक संघर्ष र संगठनका कामलाई देशका विभिन्न भागमा फैलाउने र संगठित गर्ने काम गऱ्यो । ०४६ सालमा पुग्दा महासंघको निर्माण भयो । एउटा उँचाइ प्राप्त गऱ्यो

र ०४६ सालको जनआन्दोलनको सक्रिय सहभागी बन्यो ।

०४६ सालको जन आन्दोलनबाट प्राप्त प्रजातन्त्रको उदय पश्चात् राजनीतिक पार्टीका गतिविधि खुल्ला हुनुका साथै मजदुर आन्दोलन पनि वैधानिक र खुल्ला भयो । यसले एकातिर मजदुरहरूका राजनीतिक अधिकार र आर्थिक मागका अधिकारलाई पनि सुनिश्चित गर्‍यो । तर त्यसैवेलादेखि आम निर्वाचनमा बहुमत ल्याउन तल्लीन वा आफ्नो पार्टीलाई शक्तिशाली बनाउन मजदुर शक्तिको उपयोग गर्ने दाउमा अनेक राजनीतिक पार्टीहरूले अनेक नामका ट्रेड यूनियनहरू खोले । यसले अनेक भागमा मजदुरलाई विभाजित गर्‍यो र मजदुर वर्गको एकल ट्रेड यूनियनको आकांक्षामा धक्का पुर्‍याउने काम गर्‍यो । नेपाल ट्रेड यूनियन महासंघले शुरूदेखि नै एकल ट्रेड यूनियन निर्माणको नारा अगाडि सार्दै आएको भए पनि हालसम्म त्यो व्यवहारमा कार्यान्वयन हुन सकेको छैन । मजदुर एउटा वर्ग हो, यसको एउटै स्वार्थ छ र लक्ष्य छ, यसको एउटै यूनियन हुनु पर्छ भन्ने कुरा न त नेपालका राजनीतिक पार्टीले अनुभूत गरेका छन् न हामीले आम मजदुरलाई यो कुराको अनुभूत दिलाउन सकेका छौं ।

शान्ति यति वेला हाम्रो देशको चाहना बनेको छ । सात वर्षको अन्तरालमा नेपाली जनताले जे जति पीडा र व्यथा भोगे सायद यो त्रासदी र पीडा नेपालको इतिहासमा वृटिश युद्धलाई छोडेर सबैभन्दा ठूलो पीडा हुन सक्छ । यो सात वर्षको सबैले समीक्षा गर्नु पर्छ र त्यसबाट मुलुकमा परेको असरको लेखाजोखा गर्नै पर्छ । आज शान्ति र युद्ध विरामको नारा बोकेर आएका माओवादी पक्षले पनि यसको गम्भीर समीक्षा गर्नु जरुरी छ ।

देश शान्ति चाहन्छ र जनता स्वतन्त्रता चाहन्छन् । प्रजातन्त्र र शान्ति यो आजको नेपाली जनताको प्रवल चाहना हो । यो चाहनामा कहीं कतैबाट पनि कुनै पनि बहानामा कुठाराघात हुनु हुँदैन । आफ्ना महत्त्वाकांक्षा र सत्तालिप्साको कारण कसैबाट पनि जनताको शान्तिको चाहनामा खलल पुर्‍याउने काम कसैले गर्छ भने त्यो जनताको नजरमा इतिहासको नकारात्मक पात्रको रूपमा चिन्हित हुनेछ । २०४६ सालको जन आन्दोलन र त्यसबाट प्राप्त उपलब्धिहरूको रक्षा जुन २०४७ सालको संविधानमा सँग्रहित छन् तिनीहरूको रक्षाको लागि सम्पूर्ण श्रमिक श्रमजीवी प्रजातन्त्रप्रेमी जनता एकगठ हुनै पर्छ । ०४६ सालका जनताका आन्दोलनका उपलब्धिहरूलाई उपेक्षा गरेर देश अग्रगतितिर जान सक्दैन ।

आज मुलुकमा राजा र राजनीतिक पार्टीहरू बीच एकता र समझदारीको खाँचो टडकारो भएको छ । कसैले पनि कसैको उपेक्षा गरेर समस्याको समाधान हुँदैन । माओवादीहरूले पनि नेपाली जनताको यसै चाहनामा समाहित हुँदै राजनीतिको मूलधारमा आउनै पर्छ र वर्तमान युद्ध विरामलाई अरु ठूलो हिंसाको लागि विश्राम होइन कि यसलाई स्थायी शान्तिमा परिणत गर्न अधिकतम पहलकदमी गर्नै पर्छ ।

हामीले असोज १८ गतेको शाही घोषणा र त्यस यताको परिस्थितिको पनि विश्लेषण गर्नै पर्छ । असोज १८ गतेको घटना पश्चात राजा र राजनीतिक पार्टी बीच बढेको मनमोटावको कारणको पनि खोजी गर्नु पर्छ र निष्पक्ष ढंगले त्यसको समीक्षा गर्नै पर्छ ।

अहिलेको यो सरकार असहमतिको सरकार हो । राजनीतिक पार्टीहरू यो सरकार गठनको प्रक्रियासँग असहमत छन् । त्यसैले राजाले सबै ठूला वा संसदमा प्रतिनिधित्व गर्ने राजनीतिक पार्टीहरूसँग छलफल गरी एउटा राष्ट्रिय सहमतिको सरकार गठन गर्नु पर्छ । यो नै आजको राजनीतिक निकास हो । संविधानको कुरा उठाएर संवैधानिक र असवैधानिकको विवादतर्फ जाने हो भने समस्या समाधान हुँदैन । सरकार फेरि पनि राजाले नै गठन गर्ने हो र संविधानतः १२७ कै धारा लागू गर्ने हो । राजा असंवैधानिक हुँदैनन् । १२७ धारा अन्तरगत बनेको सरकार संवैधानिक हुँदैन भनेर भोलि एउटा पार्टीले राष्ट्रिय सहमतिलाई पनि मान्दिन भन्यो भने यो सरकारको वैधता के हुन्छ ? एक सर्वाधिकार सम्पन्न सरकार आम निर्वाचनबाट मात्र बन्न सक्दछ । त्यो भन्दा यता बन्ने जुनसुकै सरकार पनि चुनावी सरकार हुनेछन् र तिनीहरूको मूल दायित्व भनेको मुलुकमा आम निर्वाचनको वातावरण तयार गर्न मात्र हो । सबै राजनीतिक पार्टी तथा ट्रेड यूनियनहरूका साथै आम जनसमुदायले पनि यस कुराप्रति सजग हुनै पर्छ ।

कसैले पनि कसैका कमीहरूप्रति टेक्ने र आफू उम्किने प्रयत्न गर्नु हुन्न । असोज १८ गते पछिको स्थिति जन्मनमा १२ वर्ष सत्ता संचालनमा भएका त्रुटिहरूको पनि हामीले समीक्षा गर्नै पर्छ । जनताले ०४६ सालको जन आन्दोलनबाट जे कुरा प्राप्त गर्ने अपेक्षा गरेका थिए त्यो कुरा प्राप्त गर्न सकेनन् । त्यति मात्र होइन अपेक्षा गरेभन्दा नराम्रा परिणतिहरू पनि देखिए । शासन सञ्चालनमा नेपाली कांग्रेसको अकर्मण्यता, भ्रष्टाचार, प्रशासनमा कांग्रेसीकरण, बारम्बारको सरकार परिवर्तनबाट उत्पन्न प्रशासनिक अस्थिरता सांसदहरूको खरीद-बिक्री आदि जस्ता विकृतिहरू मुलुकमा नेपाली कांग्रेसले भित्र्यायो । यी विकृति भित्र्याउन अरु पार्टीको भूमिका कति छ त्यसको पनि लेखाजोखा गरिनु पर्छ । यति भएर पनि १२ वर्षका सकारात्मक कुरा धेरै छन्, जनतामा जागरण आएको छ । मान्छेले आय आर्जनका नयाँ-नयाँ तरिकाहरू सिकेको छ र दुर्गम गाउँले क्षेत्र पनि यातायात र संचारको सुविधाले केही मात्रामा भए पनि सुधारको दिशातर्फ बढेका छन् । तराइका गाउँहरूमा बजारको सङ्ख्या उल्लेख्य ढङ्गले भएको छ । साइकल नपुग्ने ठाउँमा मोटर साइकल पुगेको छ । मोटर साइकल नजाने ठाउँमा बसहरू पुगिरहेका छन् र मानिसको चेतनामा ठूलो परिवर्तन भएको छ । हिजो गाउँको प्रधानपञ्च सामुन्ने बसेर कुरा गर्न नसक्ने मान्छे आज मन्त्रीका अगाडि सिधा भएर आफ्ना कुरा राख्न सक्ने भएको छ । जनताको रहन-सहन, खान-पीन र सांस्कृतिक स्तरमा वृद्धि भएको छ । यो सबै बहुदलीय प्रजातन्त्रको प्रतिस्पर्धात्मक राजनीतिका प्रतिफल हुन् । कुनै पनि कुराको मूल्याङ्कन गर्दा एक पक्ष र सतही भएर गर्नु हुन्न । आजको परिस्थितिमा मुलुक पुग्नका पछाडि हामीले नेपाली कांग्रेसको शासन सञ्चालनको गलत तरिका त्यसबाट उत्पन्न कुण्ठा र निराशा त्यसैलाई उपयोग गरेर माओवादीले चलाएको हत्या-हिंसा यिनै मुख्य कारण हुन् । यसमा अरु धेरै कारण खोज्न सकिन्छ तर गौण कारण मात्र हुन् ।

यस्ता कारणहरूको गम्भीर खोजी नै नगरी बाह्र वर्षका राम्रा कुराहरूलाई आत्मसात गर्न नसक्ने उग्रदक्षिणपन्थी र उग्रबामपन्थीहरू तथा बाह्र वर्षका आफ्ना कमी-कमजोरीको समीक्षा गरेर त्यसलाई सच्याउँदै अगाडि बढ्नुको साटो आफ्ना कुकर्म लुकाउन खोज्ने नेपाली कांग्रेस यी दुवैको अवस्तुवादी सोच नै आजको समस्याको जरो हो । त्यसैले वर्तमान अवस्थामा समस्याको समाधान सबैले एक ठाउँमा बसेर विगतका कमीहरूलाई सच्याउँदै भविष्यको निम्ति अगाडि बढ्नु हो । यसको साझा सहमतिको कुरा मूल विन्दुको रूपमा खोजिनु पर्छ ।

आज राजनीतिक वृत्तमा राजनीतिक निकासको प्रश्नलाई लिएर पनि ठूलो मतभेद देखिएको छ । नेकपा (एमाले) सर्वदलीय सरकारको कुरा गरिरहेको छ । लामो कालदेखि संसद पुनर्स्थापनाको माग राखेर हिंडेको नेपाली कांग्रेस आज आएर सर्वदलीय सरकार वा संसद पुनर्स्थापना नै भए पनि हुन्छ भन्न थालेको छ । यता युद्ध विराम गरेर शान्ति वार्तामा आएको माओवादीले गोलमेच सम्मेलन, अन्तरिम सरकार र संविधान सभाको कुरा गरिरहेको छ ।

आज मुलुक तीन ओटा राजनीतिक पार्टीहरूले उठाएका मागमा विभाजित छ । यसैमा बहस र छलफल छ र मतमतान्तर जारी छ । नेपालको ट्रेड यूनियन आन्दोलन पनि यी बहस र विवादबाट टाढा रहन सक्दैन । हामी पहिले नेपाली कांग्रेसले उठाएको पुनर्स्थापनाको मागबारे छलफल गरौं- के संसदको पुनर्स्थापना हुन सक्छ ? यो प्रश्नलाई कानुनी संवैधानिक दायराबाट हेर्ने हो भने यो असम्भव देखिन्छ । किनकि, संसदको विघटन नेपाली कांग्रेसकै दलका नेता प्रधान मन्त्री शेरबहादुर देउवाको नेतृत्वमा भएको हो । त्यो सिफारिस गर्दा र संसद विघटन हुँदासम्म उनी बहुमतका प्रधानमन्त्री थिए । राजनीतिक मागको रूपमा यसलाई उठाउने हो भने यो व्यवहारिक नारा बन्न सक्दैन । राजनीतिक रूपमा पुनर्स्थापनाको कुरा उठाउने हो भने प्रधानमन्त्री शेरबहादुर देउवाको पुनर्स्थापनाको कुरा उठ्छ किनकि धारा १२७ लगाएर राजाले विघटन गरेको भनेको शेरबहादुरको सरकार हो । फेरि पनि यसमा १२७ को प्रयोग हुन सक्छ । तर संसदको विघटन न त १२७ अन्तर्गत राजाले गरेको हो न त राजाको स्वविवेकबाट भएको हो ।

आज उठिरहेको दोस्रो चर्चित नारा भनेको संविधान सभाको नारा हो । वर्तमान परिस्थितिमा यो राजनीतिक समस्याको निकास बन्न सक्छ कि सक्दैन ? संविधान सभा कसरी बन्छ र त्यसको चुनाव कसरी हुन्छ त्यसले निकास दिनुको साटो झन् भद्रगोल सृजना गर्नेछ । संविधान सभा र अन्तरिम सरकार बन्नु अगाडि माओवादीहरू हतियार बुझाउन तयार हुन्छन् कि हुँदैनन् । बुझाउँछन् भने कसलाई बुझाउँछन् । आदि कुराको टुङ्गो नलागी हतियार बोकेको शक्तिको पछि लागेर अन्यौलको नारामा बग्नु भनेको थप अन्यौल सृजना गर्नु हो ।

हामीले माथि धेरै कुराहरूको छलफल गर्‍यौं र धेरै प्रवृत्तिहरूबारे चर्चा गर्‍यौं । असोज १८ पछिको अन्यौल परिस्थितिको निकास मुलुकले खोजी रहेछ । मुलुक युद्ध र हिंसा होइन शान्ति खोजी रहेछ । ध्वंस होइन निर्माण खोजी रहेछ । हामीले गर्वका साथ भन्ने गरेका छौं-"हामी श्रमिकहरू ध्वंसका वाहक होइनौं निर्माणका कर्मी हौं ।" हाम्रो यो नारा तब मात्र सार्थक हुन सक्छ जब हामी सम्पूर्ण श्रमिकहरू एउटै झण्डामुनि एकताबद्ध भएर अगाडि बढ्नेछौं । यसको लागि तत्कालीन अवस्थामा मुलुकको निकासको लागि हाम्रो साझा नारा यस्तो हुन सक्छ :

१. राष्ट्रिय सहमतिको आधारमा सर्वदलीय सरकारको गठन
२. हत्या-हिंसा र युद्धबाट मुलुकलाई मुक्त गर र वर्तमान युद्ध विरामलाई स्थायी शान्तिमा परिणत गर
३. आम निर्वाचनको घोषणा
४. जनताको चुन्ने र चुनिने अधिकारको तुरुन्त बहाली आदि

तत्कालीन अवस्थामा यो नै हाम्रो राजनीतिक साझा नारा बन्न सक्छ । निर्वाचन पछि मात्र साँच्चीकै सर्वाधिकार सम्पन्न सरकार बन्न सक्छ र त्यसै सरकारले सदनबाटै आवश्यकता अनुसार संविधान संशोधन गर्न सक्छ या सदनबाटै संविधान सुधार सुझाव आयोग बनाउन सक्छ । ०४६ सालको जनआन्दोलनका उपलब्धिहरूको रक्षा र अग्रगामी निकास भनेको के हो ? ०४७ सालको संविधान नै ०४६ सालको जनआन्दोलनको उपलब्धि हो र त्यसमा भएका कमीहरूको संशोधन नै अग्रगामी निकास हो । यो काम निर्वाचित प्रतिनिधि सभाले मात्र गर्न सक्छ । यसमा हामी नेपाली मजदुरहरू स्पष्ट हुनै पर्छ । यो संविधानलाई समाप्त पारेर अर्को संविधानको निर्माणको नारा अगाडि सारेर हिंड्यौं भने वर्तमान विश्वको शक्ति सन्तुलन र आफ्नै देशको स्थिति हेर्दा हामीले यस संविधानमा भएका राष्ट्रियताका बलिया पक्ष र जनअधिकार समेत गुम्ने खतरा देखिन्छ । यो संविधान खारेज नगरी संविधान सभा बन्दैन । संविधान सुधार सुझाव आयोग बन्न सक्छ । त्यसको लागि या त राजाले पुन: १२७ को धारा प्रयोग गर्नु पर्छ या त निर्वाचन गरेर प्रतिनिधि सभालाई बिउँताउनु पर्छ । यसको अर्को विकल्प छैन । माओवादीहरू आफ्नो संविधान सभाको नाराको औचित्य पुष्टि गर्न यो संविधान समाप्त भइसकेको र मुलुक संविधानविहीन भइसकेको प्रचारबाजी गरिरहेका छन् । हामीले के बुझ्नु पर्छ भने माओवादीहरू यत्रो ठूलो हिंसा र आगजनीको वावजुद पनि आज राजदरवारको अगाडि उभिएर भाषण भूकम्पको सृजना गरिरहेका छन् । पार्टीहरू अधिवेशन गरिरहेका छन्, सभाहरू गरिरहेका छन्, बैठकहरू गरिरहेका छन् र सडकमा उत्रिरहेका छन् । उनीहरूका संविधानले तोकेका दायराभित्रका गतिविधिमा कहीं कतैबाट रोक-छेक भएको देखिंदैन । फेरि पनि संविधान मरिसकेको घोषणा गरिन्छ । मुलुकमा निर्वाचित सरकार छैन र त्यसको समाप्ति जहिले सदन विघटन भयो, व्यवहारत: त्यही वेलै भयो । चुनाव सार्ने सिफारिस राजाले मानेका भए पनि त्यो राजनीतिक सहमतिको सरकार नै हुने थियो ।

त्यसैकारण हामीले आजको परिस्थितिको ठोस आधारमा निकास खोज्नु पर्छ । आफ्नो मनोगत कल्पनामा आधारित भएर होइन कि नेताहरूले बोल्दाखेरी वस्तुगत तथ्यमा आधारित भएर बोल्नु पर्छ । आजको वास्तविकता के हो भने यहाँ बहुदलीय व्यवस्था छ र संवैधानिक राजतन्त्र पनि छ, पार्टीहरू छन् र उनीहरूका गतिविधि पनि संचालित छन् । समस्या कहाँ छ? भनेर खोज्ने हो भने निर्वाचित सरकार छैन, निर्वाचनको मिति तोकिएको पनि छैन । मुलुक शान्तिको दिशातिर अग्रसर हुन्छ कि युद्धको नाममा हत्याहिंसाको चपेटामा पर्छ? आज जनताको मनमा यस्ता अन्यौलका आशंकाहरू छन् । चुनाव किन रोकियो ? चुनाव रोक्ने कारक तत्त्व के हो ? यसको निष्पक्ष छानवीन जनताले गर्नु पर्छ र मुलुकलाई थप अन्यौलतातिर जान नदिन राजा र सबै राजनीतिक पार्टीहरूको समझदारीबाट सर्वदलीय सहमतिको सरकार बन्नुपर्छ, त्यसले चुनावको मिति घोषणा गर्नु पर्छ । र, माओवादीले पनि यो राष्ट्रिय मूलधारमा आउनु पर्छ । आज कसैले पनि कसैको अस्तित्वलाई अस्वीकार गर्न सक्दैन । यो देशमा राजा पनि एउटा शक्तिको रूपमा छन् । यस्तो अवस्थामा एकले अर्कोलाई स्वीकार गर्नु र ०४७ सालको संविधानलाई सक्रिय बनाउँदै आम निर्वाचनतर्फ अगाडि बढ्नु भन्दा सरल अरु कुनै विकल्प छैन । यो कुरा नेपालका सबै राजनीतिज्ञहरूले बुझ्नु जरुरी छ र हामी मजदुरहरूले पनि यसै कुरालाई आत्मसात गर्दै अगाडि बढ्नु जरुरी छ ।

# सदस्य यूनियनहरुको राष्ट्रिय अधिवेशन

### नेपाल स्वतन्त्र सफाइ मजदुर यूनियनको तेस्रो राष्ट्रिय अधिवेशन

हाम्रो देशमा परिश्रम गर्नेलाई हेला गर्ने नराम्रो परम्परा छ। अझ सफाइ मजदुरहरूलाई त सामाजिक रूपमा नै हेला होचो गर्ने चलन छ। जातपातको आधारमा सामाजिक भेदभावको चलन छ, छुवाछुतको चलन छ। यस्तै हेला-होचो विरुद्ध, सामाजिक भेदभाव र कुसंस्कारको विरुद्ध आन्दोलनरत देशभरीका सफाइ मजदुरहरूको प्रतिनिधिमूलक यूनियन नेपाल स्वतन्त्र सफाइ मजदुर यूनियन हो।

यस यूनियनमा काठमाडौंमा नेपाल भाषा बोल्ने मजदुरहरू छन् भने तराइमा अर्कै भाषाका मजदुरहरू छन्। जातीय रूपबाट तथा भाषिक रूपबाट समेत विविधता रहेको सफाइ मजदुरहरूको यस यूनियनको तेस्रो राष्ट्रिय अधिवेशन गत २०५९ साल फागुन १० गते मनमोहन मजदुर भवन, पुतलीसडकमा सम्पन्न भयो।

अधिवेशनले बिना श्रेष्ठको अध्यक्षतामा ११ सदस्यीय केन्द्रीय कमिटी निर्वाचन गरेको छ। जसमा उपाध्यक्ष मैया पोडे, सचिव मोहन नेपाली, सहसचिव मदन च्योला, कोषाध्यक्ष प्रेम पोडे रहनु भएको छ। सदस्यहरूमा संकर च्योला, सुरेन्द्र च्योला, शान्ती नेपाली, संकर पोडे, माया देबी पोडे र राजु पोडे रहनु भएको छ।

### क्युपेक-नेपालको दोस्रो राष्ट्रिय सम्मेलन




निर्माण क्षेत्रमा काम गर्ने मजदुरहरूको प्रतिनिधिमूलक संगठन नेपाल बिजुली, पेन्टर, प्लम्बर तथा निर्माण मजदुर यूनियन, क्युपेक नेपालको दोस्रो राष्ट्रिय अधिवेशन फागुन २१-२३ मा काठमाडौंमा सम्पन्न भयो। १३ अञ्चलबाट प्रतिनिधित्व रहेको सो अधिवेशन "निर्माण क्षेत्रमा सामाजिक सुरक्षा क्युपेक-नेपालको क्रियाशीलता भन्ने मूल नाराका साथ मनमोहन मजदुर भवनको प्राङ्गणमा फागुन २१ गते उद्घाटन सम्पन्न भयो।

सम्मेलनले जितेन्द्र श्रेष्ठको अध्यक्षतामा १५ सदस्यीय केन्द्रीय कमिटीको निर्वाचन गरेको छ। जसमा उपाध्यक्ष अन्तलाल धिमाल, सचिव नरनाथ लुइटेल, सहसचिव टिकाराम थापा, कोषाध्यक्ष मनोहरी सिवाकोटी र सदस्यहरूमा महेश कुमार श्रेष्ठ, कृष्ण मानन्धर, कुमार राई, रघुनन्द शाह, वेलीमाया घले, प्रेम नेपाली, रामजी प्रसाद आचार्य, चन्द्र बहादुर गुरुङ, ध्रुव बस्नेत र डी. बी. राई 'सरोज' रहनुभएको छ।

### नेपाल स्वतन्त्र कार्पेट मजदुर यूनियनको तेस्रो राष्ट्रिय सम्मेलन




दुई लाखभन्दा बढी मजदुरहरूले रोजगारी पाएको, विदेशी मुद्रा आर्जन गर्ने कार्पेट उद्योगमा कार्यरत एक मात्र प्रतिनिधिमूलक यूनियन नेपाल स्वतन्त्र कार्पेट मजदुर यूनियनले कार्पेट क्षेत्रमा देखिएका बालश्रम, बाध्यकारी श्रम, ठेकेदारी प्रथा जस्ता अन्यायपूर्ण श्रम अभ्यासको विरुद्ध यसले संघर्ष गर्दै आइरहेको छ। साथै यस यूनियनको विशेषता भनेको यस यूनियनले मजदुरहरूको सृजनात्मक प्रतिभा विकास गर्ने साँस्कृतिक कार्यक्रम, लोकगीत प्रतियोगिता, नृत्य प्रतियोगिता, कविता प्रतियोगिता, खेलकूद प्रतियोगिता जस्ता थुप्रै कार्यक्रमहरू गर्दै आइरहेको छ। यसै कार्पेट यूनियनको तेस्रो राष्ट्रिय सम्मेलन गत जेठ १७ गते काठमाडौंको पुतलीसडक स्थित मनमोहन मजदुर भवनमा सम्पन्न भयो।

सम्मेलनले विनोद श्रेष्ठको अध्यक्षतामा १२ सदस्यीय केन्द्रीय कमिटीको निर्वाचन गरेको छ। निर्वाचित कमिटीको उपाध्यक्ष, सचिव, सहसचिव, कोषाध्यक्षमा क्रमशः तुलसी सिवाकोटी, सीता लामा, दिल कुमार सुनुवार र फुलमाया लामा रहनुभएको छ। सदस्यहरूमा रामहरि श्रेष्ठ, शान्ती जिरेल, निर्मला राई, सुवास धिमा, चक्र बहादुर तामाङ, मंगली शेर्पा र काजी शेर्पा रहनुभएको छ।

### नेपाल यातायात स्वतन्त्र मजदुर संगठनको छैटौं राष्ट्रिय अधिवेशन

नेपालको मजदुर पक्षीय ट्रेड यूनियन आन्दोलनको संवाहकको रूपमा स्थापित नेपालको




यातायात क्षेत्रमा क्रियाशील यातायात मजदुरहरूको शक्तिशाली र जुझारु संगठन नेपाल यातायात स्वतन्त्र मजदुर संगठनको छैटौं राष्ट्रिय अधिवेशन गत २०५९ चैत्र ८-१० मा नेपाल विद्युत प्राधिकरण, तालिम केन्द्रको सभाकक्ष, खरीपाटी भक्तपुरमा भव्यताका साथ सम्पन्न भयो।

अधिवेशनको उद्घाटन कार्यक्रममा नेपाली ट्रेड यूनियन आन्दोलनका बरिष्ठ नेताहरू, व्यवसायी संघका प्रतिनिधिहरूका साथै अन्तरराष्ट्रिय ट्रेड यूनियनहरू नेसनल फेडरेसन अफ इण्डीयन रोड ट्रान्सपोर्ट वर्कर्सका प्रतिनिधिहरू तथा अल इण्डीया रोड ट्रान्सपोर्ट वर्कर्स फेडरेसनका महासचिवको उपस्थिति रहेको थियो।

अधिवेशनले उद्धव केसीको अध्यक्षतामा २० सदस्यीय केन्द्रीय समितिको चयन गरेको छ। जसमा उपाध्यक्ष मोतीराज सुनुवार, सचिव विदुर कार्की, सहसचिव नारायण प्रसाद भट्टराई, कोषाध्यक्ष दिल्ली बहादुर राना, सदस्यहरूमा बलराम फुयाल, धर्मानन्द पन्त, ईश्वर आचार्य, श्रीधर प्रसाद श्रेष्ठ, लक्ष्मी खड्का, गंगा भण्डारी, रामकुमार मानन्धर, सुरेन्द्र साह, रामनरेस सिंह, प्रेम गिरी, रामशंकर कर्माचार्य, इन्द्र गुरुङ, कृष्ण बहादुर भूषाल, भगिरथ भट्टराई, दिनानाथ अधिकारी रहनु भएको छ।

### नेपाल स्वतन्त्र होटल मजदुर यूनियनको छैटौं राष्ट्रिय सम्मेलन

१० प्रतिशत सेवा शुल्कको अभियान सञ्चालन गर्दै आन्दोलनरत यूनियन नेपाल स्वतन्त्र होटल मजदुर यूनियनको छैटौं राष्ट्रिय सम्मेलन गत २०५९ चैत्र २२-२३ गते भक्तपुर स्थित खरिपाटीमा सम्पन्न भयो। सम्मेलनले माधव न्यौपानेको अध्यक्षता २१ सदस्यीय केन्द्रीय समितिको निर्वाचन गरेको छ। निर्वाचित उपाध्यक्ष, सचिव, सहसचिव, कोषाध्यक्षमा क्रमशः हरिओम अधिकारी, विष्णु लम्साल, परुराम थापा, दुर्गाप्रसाद सापकोटा रहनुभएको छ। सदस्यहरूमा इन्दिरा लामा, सुनिता बुढाथोकी, केदार अर्याल, प्रेम पौंजू, प्रेम भुजेल, सूर्यप्रसाद पौडेल, राजन काफ्ले, उदयचन्द्र अर्याल, रामचन्द्र श्रेष्ठ, हरि भुजेल, राम बुढाथोकी, प्रल्हाद ओली, हरिकृष्ण कर्माचार्य, सी.बी. कार्की, विजय कटुवाल, र शम्भुप्रताप राणा रहनुभएको छ।



## विकल्पको खोजी

श्रम बजारको तीव्र अनौपचारीकरणले धेरै भन्दा धेरै महिलाहरुलाई अनौपचारिक श्रम क्षेत्रतिर तानेको छ। यसले महिला श्रमिकमाथि राहतको सट्टा अझ धेरै बोझ थपिदिएको छ। "हाम्रो श्रम वजार महिलामय भइसकेको छ, तर हाम्रो ट्रेड यूनियन आन्दोलनलाई कसरी महिलामय गराउने होला त ?र" यो प्रश्नको चित्त बुझ्दो जवाफ सजिलै पाउन मुस्किल छ । प्रश्नले विकल्पको खोजी गरिरहेको छ ।

यो अध्ययन भावी योजना र नीतिको लागि सबैभन्दा संभव विकल्पको खोजी गर्न गरिएको एउटा प्रयास हो ।

तयार पार्ने : विष्णु रिमाल
उमेश उपाध्याय
रुद्र गौतम

मूल्य : रू. २००/-







### स्टडी सर्कल

**(जिफण्टले शुरु गरेको पछिल्लो ट्रेड यूनियन शैक्षिक अभियान)**

लेखक : विन्दा पाण्डे

मूल्य : रू. १०/-




### यूनियन व्यवस्थापन

तयार पार्ने : विन्दा पाण्डे
गुणराम आचार्य

मूल्य : रू. १५/-




### मीनाको कथा

तयार पार्ने : विष्णु रिमाल
कविन्द्र शेखर रिमाल

मूल्य : रू. १०/-